श्रीः

# नारदीयमनुसंहिता

## (प्राचीन कानुन)



*तस्बिर श्रोत : mygodpictures.com*

**सङ्कलन एवं भावानुवाद : मोहन प्रसाद सापकोटा**

# दुई शब्द

नारदका नाममा मुख्यतः पुराणबाहेक दुईवटा ग्रन्थ प्रख्यात छन् : नारद संहिता र नारदस्मृति । नारद स्मृतिका विभिन्न संस्करण भेटिन्छन् । भाष्यकार अनुसार नारद स्मृतिमा केही श्लोक र केही शब्द थपघट गरिएको पाइन्छ । नारदस्मृतिलाई नै नारदीय मनुसंहिता पनि भनिएको छ ।

यो ग्रन्थ ई.पू.३०० तिर लेखिएको अनुमान गरिन्छ । ग्रन्थका प्रणेता मानिएका नारद सुप्रसिद्ध नारद ऋषि नै हुन् वा अरु कुनै महात्मा त्यो पनि यकीन गर्न सकिएको छैन ।

नारदीय मनुसंहिता धार्मिक कानुनको एक प्राचीन ग्रन्थ हो । जब विवाद हुन थाल्यो तब कानुन बन्न थाल्यो । यो ग्रन्थमा उल्लेख भएका विवादका विषय आज पनि विश्वभर विवादका विषय बनिरहेका छन् । त्यसबेलाको समाजको विवादलाई सुल्झाउने तरिका र आधुनिक समाजको विवादलाई सुल्झाउने तरिकामा भिन्नता त हुन्छ नै । समयसापेक्ष तरिकाले कानुन बदलिँदै जान्छ नै । यति भनिरहँदा पनि यो ग्रन्थमा उल्लेख भएका धेरै कुराहरु अहिलेको विश्वमा पनि कुनै परिमार्जितरूपमा त कुनै जस्ताको तस्तै चलिरहेका छन् भन्न दोमन गर्नु पर्दैन ।

समग्रमा भन्नुपर्दा विश्वभर चलिरहेका सबै कानुनको आधार धार्मिक कानुन नै हो । धार्मिक कानुनको आधार पूर्वीय दर्शन हो र नारदीय मनुसंहिता पूर्वीय दर्शनको एक प्रमुख धार्मिक कानुन हो । यसैले कानुनप्रति जिज्ञासा हुने सबैका लागि यो ग्रन्थ पठनीय छ ।

यो ग्रन्थलाई शाब्दिक अनुवाद नठानी भावानुवादका रूपमा लिनु होला । अनुवादका क्रममा व्याख्या, विश्लेषणतिर नलागी सकेसम्म सारमा कुरा राख्न प्रयास गरिएको छ ।

नारदीय मनुसंहिता र नारदस्मृतिका अनेक संस्करण पाइन्छन् । हरेक पुस्तकमा असमानता छ । सबैलाई समेट्न सकिएन । संस्कृतका श्लोक उद्धरण गर्नका लागि ई.सं.१९२९ मा प्रकाशित भवस्वामिको संस्कृत भाष्य सहितको नारदीयमनुसंहिता र स्मृतिसन्दर्भलाई र अनुवादका लागि के.एन.स्वामीको अनलाइन शब्दकोश लगायत विभिन्न शब्दकोशको सहयोग लिइएको छ ।

आफू एक सामान्य विद्यार्थी मात्र भएकोले यस ग्रन्थमा भेटिने भूल सुधार्नका लागि सबै विद्वत् वर्गबाट पूर्ण सहयोगको अपेक्षा गर्दै म यो ग्रन्थ मलाई क, ख चिनाउनु हुने सम्पूर्ण गुरुहरूको सम्झनामा समर्पण गर्दछु ।

**sapkotamps731@gmail.com**

# विषयसूची


| विषय | पेज |
|---|---|
| (क) विवाद वा मुद्दामामिला हेर्ने विधि (व्यवहारदर्शन विधि) | १-२७ |
| मनुका समयका मानिस, मुद्दामामिलाको उत्पत्ति र त्यो हेर्ने अधिकार | १ |
| लिखित र साछी, मुद्दाका दुई लक्षण, मुद्दा हार्नेले जरिवाना तिरी दण्ड भोग्नुपर्ने | २ |
| मुद्दाको मूल विषय, मुद्दा फैसला गर्ने अधिकारी | ३ |
| मुद्दाका चार पाउ, स्थान, साधन, हीत-वर्ग, प्रभाव क्षेत्र र फल । मुद्दालाई अष्टाङ्ग, त्रियोनी आदि भन्नुको कारण | ४ |
| लेनदेनका रूप , फैसलाका उपाय तथा मुद्दालाई चतुसाधन र चतुर्हित भन्नुको कारण | ५ |
| मुद्दालाई चतुर्व्यापी भन्नुको कारण, मुद्दालाई चतुष्कारी भन्नुको कारण, मुद्दाका आठ अङ्ग | ६ |
| मुद्दाका अठार पद | ७ |
| मुद्दाका शाखा,  मुद्दालाई त्रियोनी भन्नुको कारण, अभियोगका किसिम | ८ |
| द्विद्वार, पक्ष र प्रतिपक्ष । मुद्दालाई द्विगति भन्नुको कारण । राजाले निष्पक्ष भई फैसला गर्नू | ९ |
| राजाले सात गुणको बनी फैसला गर्नू, राजाका सात गुण, यमराजको जस्तो समान व्यवहार गर्नू | १० |
| फैसला गर्नु अघि सबै कुराको विचार गर्नू । उजुरी, उजुरीको जवाफ र बयान हेरी फैसला गर्नू । पक्षपात नगरी सत्यतथ्य पत्ता लगाउनू | ११ |
| शिकारीले घाइते मृगलाई पछ्याए जसरी सत्यलाई पछ्याउनू । व्यवहार र कानुनमध्ये कानुनलाई महत्व दिनू । कानुन बाझिए लौकिक व्यवहारलाई महत्व दिनू | १२ |
| गलत फैसला हुन सक्दछ । पुनः बयान लिनुपर्ने अवस्था | १३ |
| सत्यतासम्म पुग्न कठिन हुन्छ । तुरुन्त बयान लिनुपर्ने मुद्दाहरू । कुनै पनि शङ्कास्पद काम इजाजत नलिई नगर्नू | १४ |
| प्रतिवादीमाथिको बन्देज । बन्देजका प्रकार । बन्देजमा छुट | १५ |
| बन्देज उल्लङ्घन र दण्ड । बन्देजका लागि अयोग्य व्यक्ति | १६ |
| विषयान्तरमा प्रवेश र पुनः अभियोग, झूटोमाथि पुनः अर्को झूटो आरोप नलगाउनू | १७ |
| मुद्दा हार्ने लक्षण, फैसलापछि पेश गरिने साछी र प्रमाण | १८ |
| आरोप र प्रमाण, पुनरावेदन, गलत फैसला हुँदा न्यायाधिश दण्डित हुन्छन् | १९ |
| झूटो साछी | २० |
| लिखत जाँच । भ्रम हुन्छ, परीक्षणमा शतर्कता अपनाउनू | २१ |
| वारेसनामा, दण्डनीय र चोखा न्यायाधिश | २२ |

| | |
|---|---|
| न्यायाधिशको परीक्षण | २३ |
| इजलाश र बयान, अधर्मका चार पाउ | २४ |
| न्यायालय र पाप, बहसको आधार, फैसलाको आधार | २५ |
| वकालत, सर्वसम्मत निर्णय, इजलाश सभा, वृद्ध, धर्म र सत्य | २६ |
| **विवादपदम् : ऋणको लेनदेनसम्बन्धी विवाद** | २७-९८ |
| ऋणको लेनदेन, अंशियारले पहिला पैत्रिक ऋण तिर्नू | २७ |
| पुत्रप्रतिको विश्वास | २८ |
| पुत्रको कर्तव्य, ऋण नतिरी मरेका व्यक्तिको धर्मकर्मको फल साहूले पाउँदछ, तिर्न नपर्ने खालका ऋण | २९ |
| बाबुले तिर्नुपर्ने ऋण, स्वामीले तिर्नुपर्ने ऋण, बीस वर्षपछि छोराले तिर्नुपर्ने ऋण | ३० |
| सगोलको ऋण, पत्नी वा माताले तिर्नुपर्ने ऋण, एकलमहिला र अपुताली खानेले तिर्नुपर्ने ऋण | ३१ |
| पतिले तिर्नुपर्ने र नपर्ने ऋण, एकलमहिलाको धनमाथि अरुको अधिकार | ३२ |
| एकलमहिलाले लिएको ऋण तिर्ने दायित्व, मृतकले लिएको ऋण तिर्ने दायित्व | ३३ |
| स्वैरिणी र पुनर्भूले लिएको ऋण तिर्ने दायित्व, स्त्रीका अप्रमाणिक र प्रामाणिक कार्य | ३४ |
| पत्नीको अधिकार, नोकरले गर्ने कार्य अप्रमाणिक, छोराले गरेका कार्य अप्रमाणिक | ३५ |
| नावालक र ऋणको दायित्व, स्वतन्त्र र अस्वतन्त्र व्यक्ति | ३६ |
| नाबालकको परिभाषा, बालिक र उसको अधिकार | ३७ |
| माता र पिताको प्रमाणिकता, आश्रित जन र व्यवहार, बालकले गर्ने कार्य अप्रमाणिक | ३८ |
| स्वभाव विपरीतका कार्य अप्रमाणिक, प्रमाणिक कार्य | ३९ |
| धन आर्जन र चलाउने विधि, धनका किसिम, सेतो धन | ४० |
| शबल धन, कालो धन, धनको उपभोग | ४१ |
| धन उपभोग र फल, ब्याजका प्रकार, समान खालका धन | ४२ |
| ब्राह्मणका शुद्ध धन, क्षत्रियको शुद्ध धन, वैश्य र शूद्रको शुद्ध धन | ४३ |
| अधर्मसूचक धन, चार वर्णको आपत्कालीन पेसा, वर्ण अनुसार निषेधित कर्म | ४४ |
| अस्थाई पेसा, आपत्कालीन पेसा सामान्य अवस्था भएपछि छाड्नू | ४५ |
| आपत्कालमा ब्यापार गर्ने ब्राह्मणले बेच्न हुने र नहुने कुरा | ४६ |
| बेच्न नहुने कुरा बेच्ने ब्राह्मण दण्डनीय | ४७ |
| कानुनको पालना, प्रमाणका किसिम, प्रमाणको बल | ४८ |
| सम्पत्तिको भोग, प्रमाण र हक अधिकार | ४९ |

| | |
|---|---|
| लिखत प्रमाणको महत्व | ५० |
| भोगचलन गर्नेको सम्पत्ति माथिको अधिकार | ५१ |
| अधिकारका लागि भोगचलनभन्दा प्रमाण ठूलो हुन्छ, भोगचलन र पुस्तान्तरण | ५२ |
| भोगचलन गर्नेमा स्वतः अधिकार जाने अवस्था, हकदाबीको मुद्दा | ५३ |
| भोगचलनमा स्वामित्व परिवर्तन, भोगचलन र पुस्ता, ऋणीको मृत्युपछि साछीको प्रमाणिकता | ५४ |
| प्रतिवादीको मृत्युपछि साछीको प्रमाणिकता, पछिल्ला र अघिल्ला प्रमाण | ५५ |
| ब्याजवृत्ति, ब्याज वा ब्याजदरका किसिम | ५६ |
| ब्याजदर | ५७ |
| ब्याज लिन नहुने कुरा र ब्याज लाग्न शुरु हुने समय, बार्धुष्य ब्याज | ५८ |
| ब्याजका रूपमा अनाजको प्रयोग, ब्राह्मण र ब्याज, ब्राह्मण र ऋण चुक्ता | ५९ |
| ब्याज तिर्नु कर्तव्य हो, तमसुक र भर्पाई, लेनदेनका प्रमाण | ६० |
| जमानीका आधार, जमानी बस्नेको दायित्व | ६१ |
| धेरै जना जमानी र दायित्व, विशेष ब्याजदर, धितोको परिभाषा र किसिम | ६२ |
| सावाँ भुक्तानी, धितो नाश हुँदाका नियम | ६३ |
| ऋण उठाइ दिने काम राजाको हो, असमर्थतामा ऋण असुली | ६४ |
| कबुलियतनामा, प्रमाणित कागज | ६५ |
| अप्रमाणित कागज, लिखित प्रमाण अमान्य हुने अवस्था, धितोको उपभोग | ६६ |
| प्रमाणिक कागज, साछी मात्र प्रमाण नहुने अवस्था, लिखत नवीकरण आदि गर्न समय दिनू | ६७ |
| लिखत प्रमाणीकरण | ६८ |
| लिखत पुनः बनाउनु पर्ने अवस्था, साछी, साछीको परिभाषा | ६९ |
| साछीका प्रकार, साछी राख्न अयोग्य व्यक्ति | ७० |
| साछी हुन योग्य व्यक्ति र साछीको सङ्ख्या, साछीसम्बन्धी अन्य नियम | ७१ |
| अयोग्य साछी | ७२ |
| अन्य साछी नमानिने व्यक्ति र कारण | ७३-७४ |
| साछीहरूमध्येमा प्राथमिकता, साछीसँग गोप्य कुरा नगर्नू | ७५ |
| साछीको मृत्युमा वैकल्पिक व्यवस्था, लिखत, साछी मान्य हुने अवधि | ७६ |
| साछीका गुण | ७७ |
| स्वतः अपराधी हुने अवस्था, साछी नचाहिने अपराधमा अनुसन्धान | ७८ |
| गलत दोषारोपणको परीक्षा, थप अयोग्य साछी | ७९-८१ |

| | |
|---|---|
| साछी हुनमा लचकता | ८२ |
| साछीको जाँचपडताल, अन्य अयोग्य साछी | ८३ |
| सहमतीमा साछीको मान्यता, झूटो साछीका लक्षण | ८४ |
| दुष्ट साछी, साछीलाई खुवाइने शपथ र लिइने बयान | ८५-९२ |
| साछीका कुरा बाझिएको अवस्था | ९३ |
| साछीको विकल्प : दिव्यसाछी, अयोग्य साछी | ९४ |
| विश्वासमा हुने लेनदेनको सत्यतथ्य जाँचगर्ने विधि | ९५ |
| शपथ | ९६ |
| आधा दण्ड दिन सकिने अवस्था | ९७ |
| दोब्बर दण्ड तिराउने अवस्था | ९८ |
| अथौपनिधिकं द्वितीयं विवादपदम् : निक्षेपसम्बन्धी विवाद | ९९-१०२ |
| निक्षेपको परिभाषा, उपनिधिको परिभाषा, निक्षेपका किसिम र फिर्ता दिने विधि | ९९ |
| निक्षेप फिर्ता नदिएको अवस्था, निक्षेपको प्रयोग र दण्ड | १०० |
| निक्षेप फिर्ता दिनुनपर्ने अवस्था, निक्षेपसम्बन्धी नियम आकर्षित हुने अवस्था | १०१ |
| अथ सम्भूयसमुत्थानं तृतीयं विवादपदम् : साझेदारी व्यवसायसम्बन्धी विवाद | १०२-१०८ |
| साझेदारी व्यवसायको अर्थ | १०२ |
| लाभांश वितरण, लाभहानीको दायित्व, व्यहोर्नुपर्ने खर्च | १०३ |
| व्यहोर्नु नपर्ने नोक्सानी, साझेदार विशेषले पाउने पुरस्कार, लाभांशको उत्तराधिकारी | १०४ |
| ऋत्विज् आदिमा लाग्ने नियम, ऋत्विज् आदिको वरण र दण्ड, ऋत्विज्का किसिम | १०५ |
| ऋत्विज् त्याग गर्दाको दण्ड, ब्यापारीको सामान जफत गर्ने सम्बन्धी नियम, नियम मिच्ने ब्यापारीलाई दण्ड | १०६ |
| विदेशस्थित ब्यापारीको सामानको सुरक्षा राजाले गर्नुपर्ने, मृतक ब्यापारीको सामानको सुरक्षा | १०७ |
| अथ दत्ताप्रदानिकं चतुर्थं विवादपदम् : दान फिर्ता लिने सम्बन्धी विवाद | १०८-११२ |
| परिभाषा | १०८ |
| दानको प्रकार, गृहस्थका अदेय कुरा | १०९ |
| परिवारलाई मर्कामा पारी दान नदिनू, दत्त दानका प्रकार, अदत्त दानका प्रकार | ११० |
| दानका नियम मिच्नेलाई दण्ड दिनू | १११ |
| अथाभ्युपेत्याशुश्रूषा पञ्चमं विवादपदम् : सेवासम्बन्धी विवाद | ११२-१२५ |
| परिभाषा | ११२ |

| | |
|---|---|
| सेवक, कामदार र दासका किसिम । कामदार र स्वतन्त्रता | ११३ |
| सेवाको किसिम, शिष्यका कर्तव्य | ११४-११५ |
| शिष्यलाई दण्ड, शिष्यको घर फिर्ती | ११६ |
| व्यावसायिक शिक्षा, पढाउँदाका नियम, अध्ययन गर्न दवाव | ११७ |
| व्यावसायिक शिक्षा लिनदिने क्रममा हुने लाभको अधिकार, घर फिर्ती, तलबलिने सेवकका प्रकार र तलब निर्धारण | ११८ |
| कामको वर्गीकरण, अन्य सेवक, शुभ-अशुभ कर्म र दासका प्रकार | ११९-१२० |
| दासत्वबाट मुक्ति | १२१-१२३ |
| दास राख्ने नियम | १२३ |
| दासलाई मालिक परिवर्तन गर्ने अधिकार हुँदैन, दास र नीजि धन, दास मुक्तिको विधि | १२४-१२५ |
| **अथ वेतनस्यानपाकर्म षष्ठं विवादपदम् : तलबसम्बन्धी विवाद** | १२६-१३३ |
| परिभाषा, सहमती भए अनुसारको तलब दिनू | १२६ |
| तलब कट्टाका नियम, कामदारलाई दण्ड जरिवाना | १२७ |
| सार्वजनिक सवारी साधन सम्बन्धी नियम, बीचैमा काम छोड्ने कामदारको तलब, चालक र ढुवानीका नियम | १२८ |
| गोठालो सम्बन्धी नियम | १२९-१३२ |
| नगरवधूसम्बन्धी नियम, भाडावाल र घरधनी सम्बन्धी नियम | १३२ |
| हुलाकी र ढुवानीका नियम | १३३ |
| **अथ अस्वामिविक्रयः सप्तमं विवादपदम् : आफ्नो स्वामित्व नभएका कुरा बिक्रीसम्बन्धी विवाद** | १३४-१३७ |
| परिभाषा, अनधिकृत सामान गोप्यरूपमा किन्ने व्यक्ति दोषी हुन्छ | १३४ |
| अनधिकृत विक्रेतालाई कारवाही, खसेको सामान सम्बन्धी नियम | १३५ |
| हराएको सामान पाएपछि राजालाई जानकारी दिनू | १३६-१३७ |
| **अथ विक्रीयासम्प्रदानमष्टमं विवादपदम् : क्रेता र बिक्रेता बीचको विवाद** | १३७-१४१ |
| परिभाषा, पण्य | १३७ |
| किनबेचका आधार, बेचेको सामान नदिनेलाई दण्ड | १३८ |
| हानी नोक्सानी व्यहोर्ने नियम, झुक्याएर सामान बेचेकोमा दण्ड | १३९ |
| एउटासँग पैसा लिई अर्कोलाई सामान बेचेको दण्ड, अर्कोलाई बेच्न पाइने अवस्था, उल्लेखित नियम लागु हुने अवस्था | १४० |
| लाभमा हुने घटबढ | १४१ |
| **अथ क्रीत्वानुशयो नवमं विवादपदम् : किनबेचमा ठगी सम्बन्धी विवाद** | १४२-१४७ |

| | |
|---|---|
| परिभाषा, शङ्का लागे सामान पहिलो दिन फिर्ता गर्नू, अन्य दिन फिर्ता लिँदा कट्टा गर्न पाउने रकम | १४२ |
| जाँच गरी किनिएको सामान फिर्ता हुँदैन, फिर्ता गर्ने परीक्षण काल | १४३ |
| किनेपछि बिग्रेका सामान फिर्ता हुँदैन, कपडा धुँदा च्यातिए वा रङ गए फिर्ता गर्ने विधि | १४४ |
| जर्तीसम्बन्धी व्यवस्था | १४५ |
| तौलमा घटबढ हुने अवस्था | १४६-१४७ |
| **अथ समयस्यानपाकर्म दशमं विवादपदम् : पाखण्ड र एकाधिकार सम्बन्धी विवाद** | १४७-१५० |
| परिभाषा | १४७ |
| राज्यभित्र सङ्गठित हुन दिन नहुने वर्ग, यस्ता सङ्गठनले कुनै गतिविधि गर्दा पूर्वस्वीकृति लिनुपर्ने | १४८ |
| प्रतिवन्ध लगाउने पर्ने गतिविधि, दबाउनु पर्ने गतिविधि, बेलैमा नियन्त्रण गर्नुपर्ने गतिविधि | १४९-१५० |
| **अथ क्षेत्रविवाद एकादशं विवादपदम् : सीमा आदि विवाद** | १५१-१६३ |
| परिभाषा, क्षेत्रविवादमा मध्यस्तकर्ता | १५१ |
| क्षेत्रविवादमा आधार | १५२ |
| पक्षपात गर्नेलाई दण्ड, क्षेत्रविवादमा गहन छलफलबाट निर्णय गर्नू | १५३ |
| विवाद सुल्झाउने विशेष विधि, सीमा निर्धारण | १५४ |
| फोहोर आदिको व्यवस्थापन, पुल निर्माणका नियम, पुलका किसिम | १५५ |
| बाँधको नियन्त्रण, पुल आदिको मर्मत | १५६ |
| अर्काको जग्गामा गरिने खेती, जग्गा फिर्ता लिँदाका नियम | १५७ |
| जग्गाको स्वामित्व परिवर्तन, बाँझो जग्गाको किसिम, घरजग्गा कब्जा | १५८ |
| गोठालो सम्बन्धी नियम, अर्मलसम्बन्धी व्यवस्था | १५९-१६१ |
| पशुहानी र अर्मलका थप नियम | १६१-१६२ |
| पर्खाल लगाउने नियम, खेतीपातीका नियम | १६२ |
| जग्गा निफन्ने कार्य, गाँस र बासको प्रत्याभूति | १६३ |
| **अथ स्त्रीपुंसयोगो द्वादशं विवादपदम् : स्त्री-पुरुष विवाद** | १६४-२०० |
| परिभाषा | १६४ |
| वरण पछि पाणिग्रहण, विवाहमा वरणभन्दा पनि पाणिग्रहण अनीवार्य, सवर्ण विवाह श्रेयस्कर | १६५ |
| ब्राह्मणका र शूद्राका अन्य वर्णसँग विवाह । क्षत्रिय, वैश्या आदिका अन्य वर्णसँगको विवाह । विवाहमा छाड्नुपर्ने पुस्ता | १६६ |
| मर्द भएको प्रमाणित भएपछि मात्र पुरुषले विवाह गर्नू, मर्दका लक्षण, नपुंसकका किसिम | १६७-१६८ |
| नपुंसकता हटाउने उपाय, नपुंसकताको सामान्य उपचार | १६९ |

| | |
|---|---|
| त्याज्य पति, नपुंसकलाई विवाहको अधिकार छैन | १७० |
| कन्यादानको अधिकार, स्वयम्वर | १७१ |
| विदेश गएका पतिलाई कुर्ने अवधि, बेलैमा कन्यादान नगर्दाको दोष | १७२ |
| एकपटक मात्र गरिने कुरा, विवाहका विधि अनुसार विवाहमा हुने लचकता | १७३ |
| कन्या र केटालाई लगाइने आरोप, कारण नभई कन्यादान नदिने व्यक्ति दण्डनीय | १७४ |
| कन्याको दोष नलुकाउनू, कन्यालाई लगाइने मिथ्या आरोप र दण्ड, निर्दोष विवाहिता कन्यालाई परित्याग गर्न नपाइने | १७५ |
| कन्याका दोष, वरका दोष, विवाहका विधि | १७६-१७८ |
| पुनर्भू आदि कन्याहरू, सन्तानमाथिको अधिकार | १७८-१८२ |
| सङ्ग्रहण, स्त्रीले अर्को पति रोज्दा दोष नहुने अवस्था | १८२ |
| आशयकरणी | १८३-१८५ |
| आशयकरणीको दण्ड | १८५ |
| गुरुपत्नी गमन सरहका कार्य र दण्ड, पशु आदि गमन र दण्ड | १८६ |
| गमन गर्न हुने अन्य स्त्री र गमनको दोष | १८७ |
| नियोग विधि | १८८-१९० |
| विवाद गर्न नहुने व्यक्ति, स्त्रीलाई सुरक्षित तरिकाको स्वतन्त्रता दिनू, कुलतमा फसेकी स्त्रीलाई दण्ड | १९१ |
| घरबाट निकाल्न सकिने खालका स्त्री, अन्य घरबाट निकाल्न सकिने खालका स्त्री, गमनको दोष | १९२ |
| दोष भएकी पत्नीका लागि बताइएको विधि, स्त्रीले अर्को पति रोज्न पाउने व्यवस्था | १९३ |
| ब्राह्मणीले पतिलाई कुर्ने समय, छेत्रिनी र वैश्याले पतिलाई कुर्ने समय, शूद्राले पतिलाई कुर्ने समय | १९४ |
| पति कुर्ने नियम, ब्रह्माको विधि, वर्णसङ्कर | १९५ |
| सवर्ण पुत्र । उग्र, पारशव र निषाद सन्तान | १९६ |
| चण्डाल, सूत र वैदेह सन्तान । अम्बष्ठ, मागध र क्षत्ता सन्तान दौष्षन्त, यवन र आयोगव सन्तान | १९७ |
| प्रतिलोम पुत्र । सवर्ण, मूर्धाभिषिक्त, अम्बष्ठ र उग्र सन्तान । दौष्षन्त र निषाद सन्तान | १९८ |
| पारशव सन्तान । सूत, मागध र आयोगव सन्तान । वैदेहक र क्षत्ता सन्तान | १९९ |
| चाण्डाल सन्तान, वर्णसङ्कर रोक्नु राजाको कर्तव्य | २०० |
| **अथ दायविभागस्त्रयोदशं विवादपदम् : अंशबण्डा-विवाद** | २०१-२१७ |
| परिभाषा, मातापिताको सम्पत्ति बाँडफाँड, अंशबण्डा गर्ने समय | २०१ |
| पारिवारिक जिम्मेवारी ग्रहण, भागबण्डा गर्न नमिल्ने धन | २०२ |
| स्त्रीधनमा अधिकार | २०३ |

| | |
|---|---|
| विद्याधनको अधिकार, आमाबाबुलाई अंश | २०४ |
| जेठो भाइको अंश, वर्ण अनुसारको अंशबण्डा, अंशबण्डा र विवाद | २०५ |
| अंश र पुत्र, अवैध सन्तान र अंश | २०६ |
| भाडाको कोखबाट जन्मने सन्तान र पिण्डदानको अधिकार, अन्य पुत्र र अंशाधिकार, बाबु असक्षम भए भतिजोले अंश पाउँदछ | २०७ |
| दुवै बाउबाट अंश पाउने पुत्र, भिन्न भएर पुनः सँगै बस्दाको अंशबण्डा, निसन्तान दाजुभाइको अंश | २०८ |
| निसन्तान एकलमहिलाको पालनपोषण, एकलमहिलाकी छोरीको पालनपोषण गर्ने दायित्व, पति-पक्षको दायित्व | २०९ |
| स्त्रीको पालनपोषणमा वैकल्पिक दायित्व, स्त्री र स्वतन्त्रता | २१० |
| बाबुले लिएको ऋण तिरी अंशबण्डा गर्नू, संस्कार खर्च र अंशबण्डा | २११ |
| संस्कार गर्नु कर्तव्य, दाजुभाइलाई आवश्यक सहयोग, अंश-विवादको छिनोफानो | २१२ |
| पारिवारिक कर्तव्य, अंशबण्डा पछिको व्यवहार, साछी, जमानी आदि बस्ने अधिकार | २१३ |
| अंशबण्डा पछिको अधिकार, पुत्रका किसिम | २१४ |
| पुत्र अनुसार अंशको अधिकार, | २१५ |
| छोरीको अधिकार, निसन्तानको सम्पत्ति | २१६ |
| अथ साहसं चतुर्दशं विवादपदम् : बलको तुजुकसम्बन्धी विवाद | २१७-२२६ |
| परिभाषा, साहसका प्रकार | २१७ |
| प्रथम साहस, मध्यम साहस, उत्तम साहस | २१८ |
| प्रथम र मध्यम साहसको दण्ड, उत्तम साहसको दण्ड, दण्डमा समानता | २१९ |
| ब्राह्मणलाई दण्ड, साहस दण्डपछिको योग्यता, आधि र चोरी | २२० |
| क्षुद्र, मध्यम र उत्तम चोरी, क्षुद्र वस्तु, मध्यम वस्तु | २२१ |
| उत्तम द्रव्य, स्तेय, चोरमाथि शङ्का गर्ने आधार | २२२ |
| चोर सरहका दोषी, चोरलाई दिइने दण्ड | २२३ |
| चोरीको जाँच वा चोर पत्ता लगाउने उपाय | २२४ |
| चोर पत्ता नलाग्दाको क्षतिपूर्ति | २२५ |
| अथ वाग्दण्डपारुष्यं पञ्चदशं (षोडशं च) विवादपदम् : गालिगलौच सम्बन्धी विवाद | २२६-२३५ |
| परिभाषा, गालिगलौचका प्रकार | २२६ |
| निष्ठुर, अश्लील र असह्य गाली । दण्डपारुष्य । दण्डपारुष्यका प्रकार | २२७ |
| वाक्पारुष्यको दण्ड, दण्डका नियम, गालीगलौच र क्षमा | २२८ |

| | |
|---|---|
| वाक्पारुष्य र दण्डपारुष्यको समान दण्ड, गाली गर्न शुरु गर्ने व्यक्ति अधिक दण्डनीय, पुनः विवाद निकाल्ने दोषी | २२९ |
| साधुमानिसलाई दण्ड दिने अधिकार हुनुपर्ने, नीच र दण्ड | २३० |
| ब्राह्मणलाई गरिने अपमान र दण्ड, क्षत्रियलाई गरिने अपमान र दण्ड, समान वर्णको अपमानमा दण्ड | २३१ |
| विकलाङ्गलाई अपमान गर्दाको दण्ड, दण्ड तिरी प्रायश्चित गरेकालाई अपमान नगर्नू, अदण्डनीय व्यक्ति | २३२ |
| मिथ्या आरोपमा दोषी, द्विजातीको अपमान र दण्ड, द्विजातिलाई धर्मको उपदेश दिनेलाई दिने दण्ड | २३३ |
| ब्राह्मणमाथि हुने अपराध र दण्ड, विभिन्न दण्डका विधान | २३४-२३५ |
| **अथ द्यूतसमाह्वयं सप्तदशं विवादपदम् : जुवातासको विवाद** | २३६-२३८ |
| परिभाषा, जुवाका नियम, पाशाको खेल | २३६ |
| पाशाको खेलमा शङ्का हुँदा दर्शकबाट हटाउनू, जुवामा हारजितका नियम, जुवामा कपट र दण्ड | २३७-२३८ |
| **अथ प्रकीर्णकमष्टादशं विवादपदम् : विविध विषय** | २३८-२७२ |
| विषयवस्तु | २३८ |
| आश्रम धर्मको पालना गराउनू, दण्ड दिनुपर्नेलाई दण्ड दिनू | २३९ |
| अधार्मिक क्रियाकलापलाई निरुत्साहित गर्नू, न्यायको पालना, दण्डनीय व्यक्ति | २४० |
| सर्वस्वहरणको नियम, राजा र ब्राह्मण अनिन्दनीय | २४१ |
| राजाका कारण प्रजाको नाश, दण्ड पालना नहुँदा नै विकृति बढ्दछ, राजधर्म | २४२-२४७ |
| ब्राह्मण धर्म, कर, राजा र ब्राह्मणले कर्तव्यच्यूत नहुनू | २४७-२४८ |
| कर असुली, राजासँग लिइने दान, राजकोष | २४९ |
| दान दिन अनुमति, मालपोत | २५० |
| दानका नियम, ब्राह्मणका कर्म र पेसा, दान लिंदाका नियम | २५१ |
| राजाज्ञा, अष्टमङ्गल | २५२ |
| तस्कर, देखिने तस्कर | २५३ |
| नदेखिने तस्कर, जासुसको परिचालन, चोरी बढी हुने ठाउँ र सुरक्षा व्यवस्था | २५४ |
| चोर समात्ने कार्य | २५५ |
| चोरलाई सजायँ | २५६ |
| तोडफोड, अराजकता आदिको दण्ड । चोरेको सामान साथमा नराख्ने चोर, चोरसँग गरिने सोधपुछ | २५७ |
| चोरका लक्षण, डाँका र शपथ | २५८ |
| चोरका मतियार र दण्ड, चोर समाउने कार्य | २५९ |

| | |
|---|---|
| चोरी र शपथ | २६० |
| आरोपित चोरले आफू निर्दोष भए प्रमाणित गर्नुपर्ने, चोरिएका सामान, चोरिएको सामान अनुसारको दण्ड | २६१ |
| स्त्री अपहरणको दण्ड तथा पूर्व साहस दण्ड | २६२ |
| मध्यम साहस र उत्तम साहस दण्ड, गाँठो फुकाएको दण्ड, गाई चोरेको दण्ड | २६३ |
| दासी हरणको दण्ड, चोर्न प्रयोग हुने अङ्ग अनुसारको दण्ड, ठूलो चोरलाई ठूलै दण्ड | २६४ |
| दण्ड दिने शरीरका दश स्थान, दण्ड दिँदा ध्यान दिनुपर्ने कुरा, अपराधको दण्ड दिँदा सम्बन्धको प्रभाव पर्न हुँदैन | २६५ |
| ब्राह्मण र दण्ड | २६६ |
| अपराध कबुल | २६७ |
| दण्डको महत्व | २६८ |
| अन्तिम दण्डदाता यमराज, वर्ण अनुसार दण्डको मात्रा, दण्डका प्रकार | २६९-२७२ |
| **अथ दिव्यप्रकरणम् : दिव्य शपथ वा परीक्षा** | २७२- |
| दिव्य शपथ वा परीक्षा अपनाउन योग्य आरोप | २७२ |
| दिव्यपरीक्षाका उपाय, तुला-परीक्षा | २७३-२७५ |
| अग्नि शपथ | २७५-२७७ |
| जल शपथ | २७७-२७९ |
| विष शपथ | २८०-२८१ |
| कोश शपथ | २८१-२८३ |


**विषयसूची पूर्ण भयो**

॥ श्रीः गणेशाय नमः ॥

ॐ

श्री परमात्मने नमः

# ॥ अथ नारदीय मनुसंहिता ॥

## व्यवहारदर्शनविधिः

## (विवाद वा मुद्दामामिला हेर्ने विधि)

### मनुका समयका मानिस

मनुः प्रजापतिर्यस्मिन् काले राज्यमबूभुजत् ।
धर्मैकतानाः पुरुषास्तदासन् सत्यवादिनः ॥१॥



जुन बेला पृथ्वीमा प्रजापति मनुले राज्य गर्दथे त्यतिखेर मानिस धर्ममा एकचित्त भएर लाग्दथे र साँचो बोल्दथे ।

### मुद्दामामिलाको उत्पत्ति र त्यो हेर्ने अधिकार

नष्टे धर्मे मनुष्येषु व्यवहारः प्रकल्पितः ।
द्रष्टा च व्यवहाराणां राजा दण्डधरः कृतः ॥२॥

कालगतिले गर्दा धर्म नासिँदै गएपछि मुद्दामामिला बनाइए वा हुन थाले । मुद्दा हेर्न र दोषीलाई दण्ड दिनका लागि राजालाई अधिकार दिइयो ।

## लिखित र साछी

**लिखितं साक्षिणश्चाऽत्र द्वौ विधी सम्प्रवर्त्तितौ ।**
**सन्दिग्धार्थविशुद्ध्यर्थं द्वयोर्विवदमानयोः ॥३॥**

दुई पक्षका बीचको विवादलाई निराकरण गर्न एवं मुद्दामा प्रकाश पार्न लिखित र साछी गरी दुई प्रकारका विधि बनाइए (हुन्छन्) ।

## मुद्दाका दुई लक्षण

**सोत्तरोऽनुत्तरश्चैव स विज्ञेयो द्विलक्षणः ।**
**सोत्तरोऽभ्यधिको यत्र विलेखापूर्वकः पणः ॥४॥**



(क) वादीले लगाएको आरोपलाई प्रतिवादीले खण्डन गर्नु (सोत्तर) र (ख) लगाइएको आरोपलाई खण्डन गर्न नसकी वा नगरी वा मिल्न चाही वा उत्तर दिँदा बेइज्जत हुन्छ भन्ने ठानी उत्तर नदिनु (अनुत्तर) गरी मुद्दाका दुई लक्षण हुन्छन् भनी जान । सोत्तर लक्षणको मुद्दा रकमकलम खुलाई सबैकुरा लेखी अगाडि बढ्दछ । अनुत्तर लक्षणको मुद्दा त्यहीँ टुङ्गिन्छ ।

## मुद्दा हार्नेले जरिवाना तिरी दण्ड भोग्नुपर्ने

**विवादे सोत्तरपणे द्वयोर्यस्तत्र हीयते ।**
**स पणं स्वकृतं दाप्यो विनयञ्च पराजये ॥५॥**

यसरी रकमकलम खुलाई हालिएका मुद्दामा दुई पक्षमध्ये जसले हार्दछ उसले सो रकम र राजाबाट तोकिएको (वा शास्त्रीय) दण्ड पनि भोग्नु पर्दछ ।

## मुद्दाको मूल विषय

**सारस्तु व्यवहाराणां प्रतिज्ञा समुदाहृता ।**
**तद्धानौ हीयते वादी तरँस्तामुत्तरो भवेत् ॥६॥**

मुद्दाको लिखत वा नालिसमा उल्लेखित मूल विषयलाई “प्रतिज्ञा” मानिन्छ, यही प्रतिज्ञालाई मुद्दाको सार भनिन्छ । यसमा लेखिएको कुरा प्रमाणित नभए वादीले मुद्दा हार्दछ र प्रमाणित भए जित्दछ ।



## मुद्दा फैसला गर्ने अधिकारी

**कुलानि श्रेणयश्चैव गणाश्चाधिकृता नृपैः ।**
**प्रतिष्ठा व्यवहारस्य गुर्वेषामुत्तरोत्तरम् ॥७॥**

कुल (परिवारको मुखिया), सङ्गठन, गण (एउटै जाति वा सम्प्रदायको श्रेष्ठ व्यक्ति), राजाले तोकेको अधिकारी र स्वयं राजा : यी मुद्दाका निर्णायक (फैसला गर्ने अधिकारी) हुन्छन् । यिनमा पछिल्ला क्रमशः बलिया हुन्छन् र यिनले मुद्दाको उत्पत्तिलाई रद्द गर्न वा पुनर्विचार गर्न सक्दछन् ।

## मुद्दाका चार पाउ, स्थान, साधन, हीत-वर्ग, प्रभाव क्षेत्र र फल

स चतुष्पाच्चतु:स्थानश्चतु:साधन एव च ।
चतुर्हितश्चतुर्व्यापी चतुष्कारीति कीर्त्यते ॥८॥

मुद्दाका धर्म, व्यवहार, चरित्र र राजशासन गरी चार पाउ हुन्छन् । साछी, कानुन, वारदात स्थल र राजाका आदेश गरी चार स्थान हुन्छन् । साम, दान, भेद र दण्ड गरी चार साधन हुन्छन् । चार वर्ण (ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र) यसका हीत-वर्ग हुन्छन् । वादी, साछी, सभ्य र राजा गरी चार व्यक्तिलाई  यसले प्रभाव पार्दछ । साथै, यो धर्म, अर्थ, यश र लोकप्रियता गरी चार कुराको साधन हुने गर्दछ ।

## मुद्दालाई अष्टाङ्ग, त्रियोनी आदि भन्नुको कारण



अष्टाङ्गोऽष्टादशपद: शतशाखस्तथैव च ।
त्रियोनिर्द्व्यभियोगश्च द्विद्वारो द्विगतिस्तथा ॥९॥

मुद्दापनि राजाका आठ अङ्ग (राजा, मन्त्री, मित्र, राजकोष, प्रदेश, किल्ला, सेना र शहर) जस्तै आठ थरीको हुने हुनाले यसलाई अष्टाङ्ग भनिन्छ । ऋण, दान आदि यसका अठार भेद हुन्छन् । सैयौं शाखा हुन्छन् । काम, क्रोध र लोभबाट उत्पन्न हुने हुनाले मुद्दालाई त्रियोनि पनि भनिन्छ । यसले शारीरिक र मानसिक कष्ट दिन्छ । वादी र प्रतिवादी गरी यसका दुई द्वार हुन्छन् । सत्य र छलकपट गरी यसका दुई चाल हुन्छन् ।

## लेनदेनका रूप

धर्मश्च व्यवहारश्च चरित्रं राजशासनम् ।
चतुष्पाद्व्यवहारोऽयमुत्तरः पूर्ववाधकः ॥१०॥

लेनदेनका चार प्रकारका रूप हुन्छन्-धर्म, व्यवहार, चरित्र र राजाज्ञा । यी क्रमशः पछिल्लाबाट प्रभावित हुन्छन् ।

तत्र सत्ये स्थितो धर्मो व्यवहारस्तु साक्षिषु ।
चरित्रं पुस्तकरणे राजाज्ञायान्तु शासनम् ॥११॥

जब वादीको आरोप प्रतिवादी मान्दछ तब त्यो धर्म हुन्छ । जब यो कुरा साक्षी मार्फत प्रमाणित गरिन्छ तब त्यो मुद्दा (व्यवहार) हुन्छ । जब लिखतद्वारा प्रमाणित हुन्छ तब त्यो चरित्र हुन्छ । जब राजाज्ञाले फैसला हुन्छ तब त्यो शासन हुन्छ ।

## फैसलाका उपाय तथा मुद्दालाई चतुसाधन र चतुर्हित भन्नुको कारण

समाद्युपायसाध्यत्वाच्चतुःसाधन उच्यते ।
चतुर्णामाश्रमाणाञ्च रक्षणात् स चतुर्हितः ॥१२॥

फैसलाका लागि साम, दान, दण्ड र भेद गरी चार उपाय हुन्छन् । यिसँग सम्बन्धित हुनाले गर्दा मुद्दालाई “चतुसाधन” भनिन्छ । चारै आश्रमको रक्षा मुद्दाद्वारा गरिने हुनाले यसलाई “चतुर्हित” भनिन्छ ।

## मुद्दालाई चतुर्व्यापी भन्नुको कारण

**कर्तृनथो साक्षिणश्च सभ्यान् राजानमेव च ।**
**व्याप्नोति पादशो यस्माच्चतुर्व्यापी ततः स्मृतः ॥१३॥**

मुद्दा : कर्ता (वादी र प्रतिवादी), साछी, न्यायालय र राजासँग सम्बन्धित हुने हुनाले यसलाई “चतुर्व्यापी” भनिन्छ ।

## मुद्दालाई चतुष्कारी भन्नुको कारण

**धर्मस्यार्थस्य यशसो लोकपक्तेस्तथैव च ।**
**चतुर्णां करणादेषां चतुष्कारी प्रकीर्तितः ॥१४॥**



मुद्दाले धर्मको रक्षा गर्ने, धनको रक्षा गर्ने, यश फैलाउने र समाजमा सद्भाव कायम राख्ने हुनाले यसलाई “चतुष्कारी” भनिन्छ ।

## मुद्दाका आठ अङ्ग

**राजा सपुरुषः सभ्याः शास्त्रं गणकलेखकौ ।**
**हिरण्यमग्निरुदकमष्टाङ्गः स उदाहृतः ॥१५॥**

मुद्दाका  आचारशील राजा वा सदाचारी न्यायाधीश, न्याय परिषद्का सदस्य, शास्त्र (कानुन), लेखापाल, लेखक (लेखनदास), सुन (दस्तूर), अग्नि र जल गरी आठ वटा अङ्ग हुन्छन् ।

## मुद्दाका अठार पद

ऋणादानं ह्युपनिधिः सम्भूयोत्थानमेव च ।
दत्तस्य पुनरादानमशुश्रूषाभ्युपेत्य च ॥१६॥
वेतनस्यानपाकर्म तथैवास्वामिविक्रयः ।
विक्रियासम्प्रदानञ्च क्रीत्वानुशय एव च ॥१७॥
सयस्यानपाकर्म विवादः क्षेत्रजस्तथा ।
स्त्रीपुंसयोश्च सम्बन्धो दायभागोऽथ साहसम् ॥१८॥
वाक्पारुष्यं तथैवोक्तं दण्डपारुष्यमेव च ।
द्यूतं प्रकीर्णकं चैवेत्यष्टादशपदः स्मृतः ॥१९॥



(१) ऋणको लेनदेन सम्बन्धी, (२) भाँडो सहित राख्न दिइएका नासो सम्बन्धी, (३) संयुक्त श्रमको लाभ वितरण सम्बन्धी, (४) दिएको कुरा फिर्ता लिने सम्बन्धी, (५) सेवा गर्दछु भनेर नगर्ने सम्बन्धी, (६) तलब लिएर काम नगरिएको वा काम गराएर तलब नदिएको सम्बन्धी, (७) कुनै कुराको स्वामित्व आफूमा नहुँदा पनि बेचबिखन गरिएको सम्बन्धी, (८) बेचेर (पैसा लिएर) सामान नदिएको सम्बन्धी, (९) किनेर सामान नलगेको सम्बन्धी, (१०) पाखण्डको आरोप र खण्डन सम्बन्धी, (११) जमिनको विवाद सम्बन्धी, (१२) लोग्नेस्वास्नीको विवाद सम्बन्धी, (१३) अंशबण्डा विवाद सम्बन्धी, (१४) डाँका र बलात्कार सम्बन्धी, (१५) गालीगलौच सम्बन्धी, (१६) मारपिट वा थुनेको सम्बन्धी, (१७) जुवातास सम्बन्धी र (१८) अन्य विविध विषय गरी अठार थरी मुद्दाका विषय हुन्छन् । यिनैलाई मुद्दाका अठार पद भनिन्छ ।

## मुद्दाका शाखा

एषामेव प्रभेदोऽन्यः शतमष्टोत्तरं स्मृतः ।
क्रियाभेदान्मनुष्याणां शतशाखो निगद्यते ॥२०॥

यिनका एक सय आठ प्रभेद (शाखा) छन् । मानिसका साछी, प्रमाण आदि कर्मका विभिन्नताका आधारमा मुद्दाका सय प्रकारका शाखाहरु हुन्छन् ।

## मुद्दालाई त्रियोनी भन्नुको कारण

कामात् क्रोधाच्च लोभाच्च त्रिभ्यो यस्मात् प्रवर्त्तते ।
त्रियोनिः कीर्त्त्यते तेन त्रयमेतद् विवादकृत् ॥२१॥



काम, क्रोध र लोभका कारण मुद्दामामिलाको जन्म हुन्छ । यसैले मुद्दालाई "त्रियोनी" भनिन्छ । त्रियोनी नै हरेक विवादका कारण हुन् ।

## अभियोगका किसिम

द्व्यभियोगस्तु विज्ञेयः शङ्कातत्त्वाभियोगतः ।
सङ्कासतान्तु संसर्गात् तत्त्वं होढादिदर्शनात् ॥२२॥

अभियोग दुई किसिमका हुन्छन् : "शङ्काभियोग" र "तत्वाभियोग" । असत्य वा गलत व्यक्तिको संपर्कबाट जुन शङ्का उत्पन्न हुन्छ त्यसबाट लगाइने अभियोग

शङ्काभियोग हो । कसैले चोरिरहेको देखेर आफ्नो धन पनि चोरिएको शङ्कामा कसैमाथि लगाइने अभियोग तत्वाभियोग हो ।

## द्विद्वार, पक्ष र प्रतिपक्ष

पक्षाद्वयाभिसम्बन्धाद् द्विर्द्वारः स उदाहृतः ।
पूर्ववादस्तयोः पक्षः प्रतिपक्षास्तदुत्तरः ॥२३॥

मुद्दामा दुई पक्ष (वादी एवं प्रतिवादी) को सम्बन्धलाई "द्विद्वार" भनिन्छ । आरोप लगाउनेलाई पक्ष र उत्तर दिनेलाई प्रतिपक्ष भनिन्छ ।

## मुद्दालाई द्विगति भन्नुको कारण



भूतच्छलानुसारित्वाद् द्विगतिः स उदाहृतः ।
भूतन्तत्त्वार्थयुक्तन्तत् प्रमादाभिहितञ्छलम् ॥२४॥

मुद्दाको दुई गति (बाटो) हुन्छ । एक भूत (सत्यतथ्य) र अर्को छल कपट । यसैले मुद्दालाई "द्विगति" (दोहोरो चालको हुन्छ) भनिन्छ ।

## राजाले निष्पक्ष भई फैसला गर्नू

तत्र शिष्टं छलं राजा मर्षयेद् धर्मसाधनः ।
भूतमेव प्रपद्येत धर्ममूला यतः श्रियः ॥२५॥

राजाले धर्म र न्याय अनुसार राम्ररी केलाई निष्पक्ष ढङ्गले मुद्दाको फैसला गर्ने गर्नू, किन कि राजाको यश र लक्ष्मी धर्ममा आश्रित हुने गर्दछ ।

## राजाले सात गुणको बनी फैसला गर्नू

धर्मेणोद्धरतो राज्ञो व्यवहारान् कृतात्मनः ।
सम्भवन्ति गुणाः सप्त सप्त वह्नेरिवार्चिषः ॥२६॥

अग्निको ज्वाला एवं सूर्यको किरणमा भएजस्तै सात रङ्गी (तल उल्लेखित सात गुणको) भएर धर्मपूर्वक राजाले विवादको छिनोफानो गर्नुपर्दछ ।

## राजाका सात गुण



धर्मश्चार्थश्च कीर्त्तिश्च लोकपक्तिरुपग्रहः ।
प्रजाभ्यो बहुमानश्च स्वर्गस्थानश्च शाश्वतम् ॥२७॥

धर्म, धन, कीर्ति, प्रजाको माया, प्रजाको भक्ति, प्रजाबाट पाइने सम्मान र मरण पछि पाइने स्वर्गको सुरक्षित स्थानः यी राजाका सात गुण हुन् ।

## यमराजको जस्तो समान व्यवहार गर्नू

तस्माद् धर्मासनं प्राप्य राजा विगतमत्सरः ।
समः स्यात् सर्वभूतेषु विभ्रद् वैवस्वतं व्रतम् ॥२८॥

यसैले धर्मासनमा बसेको राजाले मात्सर्यता त्यागी यमराजलेझैं सबै प्राणीमाथि समान व्यवहार गर्नुपर्दछ ।

## फैसला गर्नु अघि सबै कुराको विचार गर्नू

धर्मशास्त्रं पुरस्कृत्य प्राड्विवाकमते स्थितः ।
समाहितमतिः पश्येद् व्यवहाराननुक्रमात् ॥२९॥

राजाले विवाद छिनोफानो गर्दा आफ्नो बुद्धिलाई संयमित पार्दै धर्मशास्त्र, न्यायाधीश वा वकिलका विचार र सबै पक्षले दिएका बयानलाई क्रमशः विश्लेषण गर्नु पर्दछ ।



## उजुरी, उजुरीको जवाफ र बयान हेरी फैसला गर्नू

आगमः प्रथमं कार्यो व्यवहारपदन्ततः ।
विवित्सा निर्णयश्चेति दर्शनं स्याच्चतुर्विधम् ॥३०॥

पहिला नालिश वा उजुरी हेर्नू । त्यसपछि त्यसको जवाफ हेर्नू । त्यसपछि बयान हेर्नू । अन्तिममा फैसला गर्नू । मुद्दाका यी चार चरण (चतुर्विध) हुन्छन् ।

## पक्षपात नगरी सत्यतथ्य पत्ता लगाउनू

धर्मशास्त्रार्थशास्त्राभ्यामविरोधेन पार्थिवः ।
समीक्षमाणो निपुणं व्यवहारगतिर्घनाः ॥३१॥

मुद्दामा धर्मशास्त्र र अर्थशास्त्र जान्ने राजाले पक्षपात नगरी प्रयत्नपूर्वक सत्यतथ्य पत्ता लगाउनु पर्दछ ।

शिकारीले घाइते मृगलाई पछ्याए जसरी सत्यलाई पछ्याउनू

यथा मृगस्य विद्धस्य मृगव्याधः पदन्नयेत् ।
कक्षे शोणितलेशेन तथा धर्मपदन्नयेत् ॥३२॥

जसरी घायल मृगले चुहाएको रगतलाई पछ्याउँदै शिकारी मृगसमक्ष पुग्दछ त्यसरी नै पछ्याउँदै राजाले सत्यसम्म पुग्नू ।



व्यवहार र कानुनमध्ये कानुनलाई महत्व दिनू

यत्र विप्रतिपत्तिः स्याद्धर्मशास्त्रार्थशास्त्रयोः ।
अर्थशास्त्रोक्तमुत्सृज्य धर्मशास्त्रोक्तमाचरेत् ॥३३॥

मुद्दा छिन्दा कानुन र व्यवहारमा द्विविधा उत्पन्न भए व्यवहारलाई छाडी कानुनलाई महत्व दिनू ।

कानुन बाझिए लौकिक व्यवहारलाई महत्व दिनू

धर्मशास्त्रविरोधे तु युक्तियुक्तोऽपि धर्मतः ।
व्यवहारो हि बलवान् धर्मस्तेनापचीयते ॥३४॥

कानुन बाभिए लौकिक व्यवहारलाई प्राथमिकता दिई कानुनलाई उपेक्षा गर्नू ।

## गलत फैसला हुन सक्दछ

सूक्ष्मो हि बलवान् धर्मो दुर्विचारस्त्वतीन्द्रियः ।
अतः प्रत्यक्षमार्गेण व्यवहारगतिन्नयेत् ॥३५॥

धर्म-भगवान् अती सूक्ष्म हुनाले देख्न सकिन्न । व्यवहारमा चोरलाई साधु र साधुलाई चोर मान्नु कुनै ठूलो कुरा हुन्न । यसैले जुक्ति लगाएर तथ्यमा पुग्नु पर्दछ ।

यात्यचोरोऽपि चोरत्वञ्चोरश्चायात्यचोरताम् ।
अचोरश्चोरताम्प्राप्तो माण्ढव्यो व्यवहारतः ॥३६॥

मुद्दामा कहिलेकाहीँ सज्जनलाई चोर र चोरलाई सज्जन भनी प्रमाणित हुन सक्दछ । माण्डव्य ऋषि चोर नहुँदा पनि चोर भनी प्रमाणित भए ।

## पुनः बयान लिनुपर्ने अवस्था

स्त्रीषु रात्रौ बहिर्ग्रामादन्तर्वेश्मन्यरातिषु ।
व्यवहारः कृतोऽप्येषु पुनः कर्त्तव्यतामियात् ॥३७॥

स्त्रीहरुसँग रातमा, गाऊँ बाहिर, घरभित्र तथा शत्रुको गोष्ठीमा जुन बयान लिइन्छ, त्यो सही होइन । यी स्थानमा फेरी बयान लिनू ।

## सत्यतासम्म पुग्न कठिन हुन्छ

गहनत्वाद् विवादानामसामर्थ्यात् स्मृतेरपि ।
ऋणादिषु हरेत् कालं कामं तत्त्वबुभुत्सया ॥३८॥

विविधता र जटिलताले गर्दा वादविवाद उसै त गहन हुने गर्दछ त्यसमाथि मानिसको सम्झना शक्ति सीमित हुन्छ । काम धेरै हुन्छ र समय कम हुन्छ । यसैले गर्दा सबै कुरामा सहजै सत्यसम्म पुग्न सकिन्न ।

## तुरुन्त बयान लिनुपर्ने मुद्दाहरू

गोभूहिरण्यस्त्रीस्तेयपारुष्यात्ययिकेषु च ।
साहसेष्वभिशापे च सद्य एव विवादयेत् ॥३९॥

गाई, जमिन, सुन, स्त्री, चोरी, वाक्पारुष्य, दण्डपारुष्य, हत्या, डकैती र अभिशापको घटनास्थलमै तुरुन्त बयान लिनू, ढीला नगर्नू ।

## कुनै पनि शङ्कास्पद काम इजाजत नलिई नगर्नू

अनिवेद्य तु यो राज्ञः सन्दिग्धेऽर्थे प्रवर्त्तते ।
प्रसह्यः स विनेयः स्यात् स चाप्यर्थो न सिद्ध्यति ॥४०॥

राजालाई नभनी जो बलजफ्ती शङ्कास्पद काममा लाग्दछ नियमानुसार उ दण्डनीय हुन्छ र उसले गरेको काम पनि मान्य हुँदैन ।

## प्रतिवादीमाथिको बन्देज

वक्तव्येऽर्थे न तिष्ठन्तमुत्क्रामन्तश्च तद्वचः ।
आसेधयेद् विवादार्थी यावदाह्वानदर्शनम् ॥४१॥

प्रतिवादी आफ्नो बयान राम्ररी नदिई सन्देहास्पद कुरामा प्रवेश गर्दछ वा बोली फेर्दछ भने वादीले राजाबाट फैसला नहुन्जेलसम्म उसलाई बन्देजमा राख्न लगाउनू ।

## बन्देजका प्रकार

स्थानासेधः कालकृतः प्रवासात् कर्मणस्तथा ।
चतुर्विधः स्यादासेधस्तमासिद्धो न लङ्घयेत् ॥४२॥

बन्देज चार प्रकारका हुन्छन् । स्थान, काल, प्रवास र कर्म बन्देज । बन्देज लगाइएको व्यक्तिले यी बन्देज नाघ्न सक्दैन ।

## बन्देजमा छुट

नदीसन्तानरकान्तारदुर्देशोपप्लवादिषु ।
आसिद्धस्तं परासेधमुत्क्रामन्नापराध्नुयात् ॥४३॥

नदी तरेर, घनघोर जङ्गलबाट, दुर्गमस्थानबाट वा उपप्लव (विपत्ति, सङ्कट) बाट आउँदा यो बन्देज व्यवस्था नाघे उ अपराधी हुँदैन ।

## बन्देज उल्लङ्घन र दण्ड

आसेध्यकाल आसिद्ध आसेधं योऽतिवर्त्तते ।
स विनेयोऽन्यथाकुर्वन्नासेद्धा दण्डभाग् भवेत् ॥४४॥

बन्देजकालमा बन्देज लगाइएको व्यक्ति बन्देजको उल्लङ्घन गर्दछ भने उ दण्डनीय हुन्छ तथा जो बन्देजका नियमलाई अन्यथा गरी यसमा अवरोध पुऱ्याउँदछ उ पनि दण्डनीय हुन्छ ।

## बन्देजका लागि अयोग्य व्यक्ति



निवेष्टुकामो रोगार्तो यियक्षुर्व्यसने स्थितः ।
अभियुक्तस्तथान्येन राजकार्योद्यतस्तथा ॥४५॥
गवां प्रचारे गोपालाः सस्याबन्धे कृषीबलाः ।
शिल्पिनश्चापि तत्काल आयुधीयाश्च विग्रहे ॥४६॥
अप्राप्तव्यवहारश्च दूतो दानोन्मुखो व्रती ।
विषमस्थश्च नासेध्या न चैतानानाह्वयेन्नृपः ॥४७॥

वरण गरिएको वर, रोगी, यज्ञको इच्छुक, विपत्तिमा परेका, अन्त कतै अभियोग लागि मुद्दा खेपिरहेका, राजकार्यमा लागेका, गोसेवामा नियुक्त गोपाल, अनाज क्षेत्रको किसान, शिल्पपेसामा लागिरहेको शिल्पकार, युद्ध गरिरहेको सैनिक, व्यवहार जान्नभोग्न नपाएको बालक, दूत, दान गर्न लागिरहेको व्रतालु र विकट

ठाउँको वासिन्दा : यी बन्देजका योग्य हुँदैनन् । राजा तीनलाई जबर्जस्ती डाक्न पनि सक्दैन ।

## विषयान्तरमा प्रवेश र पुनः अभियोग

**नाभियुक्तोऽभियुञ्जीत तमतीत्वार्थमन्तराः ।**
**न चाभियुक्तमन्येन विद्धं न व्यद्धुमर्हति ॥४८॥**

अभियुक्तले विषय छोडी अर्को विषयमा प्रवेश नगर्नू । एउटा अभियोग लागेकोलाई अर्को अभियोग लगाउन हुँदैन किनकि घोचिएकोलाई फेरी घोच्न उचित हुँदैन ।

**यमर्थमभियुञ्जीत न तं विप्रकृतिं नयेत् ।**

**नान्यत् पक्षान्तरं गच्छेद् गच्छन् पूर्वात् स हीयते ॥४९॥**

जे कुराको अभियोग लगाइएको हुन्छ त्यसको अर्को थरी नगर्नू । आफ्नो पक्षलाई छोडी अर्को पक्षमा नजानू, गए लगाइएको आरोप कमजोर हुन्छ ।

## झूटोमाथि पुनः अर्को झूटो आरोप नलगाउनू

**न च मिथ्याभियुञ्जीत दोषो मिथ्याभियोगिनः ।**
**यस्तत्र विनयः प्रोक्तः सोऽभियोक्तारमाव्रजेत् ॥५०॥**

झूटो आरोप लागेकाले अर्को पक्षलाई फेरी अर्को झूटो आरोप नलगाउनू किनकि त्यसमा जे दण्ड तोकिएको हुन्छ त्यो अभियोग लगाउनेतिर जान्छ ।

## मुद्दा हार्ने लक्षण

**सापदेशं हरन् कालमब्रुवँश्चापि संसदि ।**
**उक्ता वाचो विब्रुवँश्च हीयमानस्य लक्षणम् ॥५१॥**

जो न्यायालयमा समय कटाएर बोल्न नसकी उभिइ रहन्छ र पहिले भनेका कुरा काट्दछ त्यो “हीनवादी” हो । यो उ हार्ने लक्षण हो ।

**पलायते य आहुतः प्राप्तश्च विवदेन्न यः ।**
**स दण्डयश्च भवेद्राज्ञा हीन एव स वादतः ॥५२॥**

जो बोलाउँदा भाग्दछ वा भेटिँदा झगडा गर्दछ उ पनि राजाबाट दण्डनीय भई मुद्दामा हीनवादी हुन्छ ।

## फैसलापछि पेश गरिने साछी र प्रमाण

**निर्णिक्ते व्यवहारे तु प्रमाणमफलं भवेत् ।**
**लिखितं साक्षिणो वापि पूर्वमावेदितं न चेत् ॥५३॥**

मुद्दा फैसला हुनु अघि निवेदन दिइन्न तथा अदालतले आदेश दिएका समयमा लिखित प्रमाण वा साछी लेराउन सकिन्न भने फैसला पछि यी कुरा लेराएर केही फल पाइँदैन ।

**यथा पक्वेषु धान्येषु निष्फलाः प्रावृषो गुणाः ।**
**निर्णिक्तव्यवहाराणां प्रमाणमफलं तथा ॥५४॥**

जस्तो धान पाकेपछिको वर्षा निष्फल हुन्छ त्यस्तै मुद्दाको फैसला भएपछिका सबै प्रमाण निष्फल हुन जान्छन् ।

## आरोप र प्रमाण

अभूतमप्यभिहितं प्राप्तकालं परीक्ष्यते ।
यत्तु प्रमादान्नोच्येत तद्भूतमपि हीयते ॥५५॥

मुद्दामा जुन असत्य भनिएको हुन्छ त्यसको सम्भव भएसम्म प्रश्न आदि सोधी परीक्षा हुनु पर्दछ । प्रमादवश सत्य कुरा बताउन सकिंदैन भने त सही विषय भएर पनि आफ्नो पक्षमा फैसला आउँदैन ।



## पुनरावेदन

तीरितं चानुशिष्टञ्च यो मन्येत विधर्मणा ।
द्विगुणं दण्डमास्थाय तत्कार्यं पुनरुद्धरेत् ॥५६॥

जुन मुद्दाको बयान सकिई सो अनुसार दण्ड वा हारजितको फैसला भइसक्यो, त्यो मुद्दाको फैसलामा हरुवालाई (चित्त नबुझे) फैसलामा तोकिएको जरिवाना रकमको दोव्बर रकम तिरी उसले पुनरावेदन गर्न सक्दछ ।

## गलत फैसला हुँदा न्यायाधिश दण्डित हुन्छन्

दुर्दृष्टे व्यवहारे तु सभ्यास्तद्दण्डमाप्नुयुः ।

**न हि जातु विना दण्डात् कश्चिन्मार्गेऽवतिष्ठते ॥५७॥**

दोषयुक्त फैसलामा इजलासका सभ्य (न्यायाधीश) हरुले दण्ड पाउँदछन् किनकि दण्डबिना कुनै बाटोको पनि निर्णय हुन सक्दैन ।

**रागादज्ञानतो वापि लोभाद्वा योऽन्यथा वदेत् ।**
**सभ्योऽसभ्यः स विज्ञेयस्तं पापं विनयेद्धृशमम् ॥५८॥**

प्रेम वा स्नेहले पक्षपात गरी, अज्ञानताले वा लोभले जो सभ्य व्यक्ति इजलासको अन्यथा गर्दछ उ सभ्य भएर पनि असभ्य हुन्छ । त्यो पापीलाई राजा दण्ड दिन्छन् । सत्यता जाँच्नू र न्याय दिनू ।

**किन्तु राज्ञा विशेषेण स्वधर्ममनुतिष्ठता ।**

**मनुष्ये चित्तवैचित्र्यात् परीक्ष्या साध्वसाधुता ॥५९॥**

राजाले आफ्नू धर्मको रक्षा गर्दै मानिसका चित्तमा हुने विविधता जाँच्दै साधु र असाधु पत्ता लगाई न्याय दिनु पर्दछ ।

## झूटो साछी

**पुरुषाः सन्ति ये लोभाद् ये ब्रुयुः कार्यमन्यथा ।**
**सन्ति चान्ये दुरात्मानः कूटलेख्यकृतो जनाः ॥६०॥**

कोही साछी बसेर असत्य बोल्दछन् । केही मानिस यस्ता हुन्छन् जो कुटिल भाषा लेखी विवादमा उपस्थित हुन्छन् । ती दुरात्मा हुन् ।

## लिखत जाँच

अतः परीक्ष्यमुभयमेतद्राज्ञा विशेषतः ।
लेख्याचारेण लिखितं साक्ष्याचारेण साक्षिणः ॥६१॥

यसैले राजाले लेखोट जाँच्ने विधिले लिखित प्रमाणको र साछी जाँच्ने विधिले साछीको जाँच गर्नु पर्दछ ।

## भ्रम हुन्छ, परीक्षणमा शतर्कता अपनाउनू

असत्याः सत्यसङ्काशाः सत्याश्चासत्यदर्शनाः ।
दृश्यन्ते विविधा भावास्तस्माद्युक्तं परीक्षणम् ॥६२॥

असत्य सत्यजस्तै गरी र सत्य असत्यजस्तै गरी अनेक रुपमा देखिन सक्दछ । त्यसैले जुक्ति लगाएर परीक्षा गर्नु पर्दछ ।



तलवद्दृश्यते व्योम खद्योतो हव्यवाडिव ।
न तलं विद्यते व्योम्नि न खद्योतो हुताशनः ॥६३॥

परबाट हेर्दा आकाश र पृथ्वी जोडिएको जस्तो र जूनकिरी आगो जस्तै देखिन्छ । तर, यथार्थमा न पृथ्वी आकाशसँग जोडिएको हुन्छ न त जूनकीरी आगो नै हुन्छ ।

तस्मात् प्रत्यक्षादृष्टोऽपि युक्तमर्थः परीक्षितुम् ।
परीक्ष्य ज्ञापयन्नर्थान्न धर्मात् परिहीयते ॥६४॥

यसैले प्रत्यक्ष आँखाले देखिएका कुरामा पनि गहन परीक्षा नगरी ढुक्क हुनु हुँदैन,

सत्यता अर्कै हुन सक्दछ । यसरी ध्यान लगाएर कामगर्ने सजग र सतर्क राजा नै धर्म र न्यायलाई रक्षा गर्न समर्थ हुन्छ ।

**एवं पश्यन्सदा राजा व्यवहारान्समाहितः ।**
**वितत्येह यशो दीप्तं ब्रध्नस्याप्नोति विष्टपम् ॥६५॥**

यसरी सचेत र सजग भई विवादलाई छिनोफानो गर्ने राजाले यस लोकमा खूब नाम कमाउँदछ भने मरेपछि स्वर्ग जान्छ ।

## वारेसनामा

**नानियुक्तेन वक्तव्यं व्यवहारे कथञ्चन ।**
**नियुक्तेन तु वक्तव्यमपक्षपतितं वचः ॥६६॥**



इजलासमा वादी वा प्रतिवादीका पक्षमा नियुक्ति नभई कसैले पनि आफ्नो कुरा राख्न सक्दैन । नियुक्त भएका व्यक्तिले भने निष्पक्ष आफ्नो कुरा राख्न सक्दछ ।

## दण्डनीय र चोखा न्यायाधिश

**युक्तरूपं ब्रुवन् सभ्यो नाप्नुयाद् द्वेषकिल्विषे ।**
**ब्रुवाणस्त्वन्यथा सद्यस्तदेवोभयमाप्नुयात् ॥६७॥**

न्यायाधीशका युक्तिपूर्ण, शास्त्रसम्मत र सत्यतामा आधारित निर्णयले कसैलाई हुने हानीमा ती उत्तरदायी हुँदैनन् । तीनलाई कुनै पाप लाग्दैन । यस विपरीतका न्यायाधीशले भने लोकको अबजश र मृत्युपछि नरक भोग्नु पर्दछ ।

## न्यायाधिशको परीक्षण

राजा तु धार्मिकान् सभ्यान्नियुञ्ज्यात् सुपरीक्षितान् ।
व्यवहारधुरं वोढुं ये शक्ताः सद्गवा इव ॥६८॥

जसरी भारी बोक्न बलियो साँढे छानिन्छ त्यसरी नै राजाले पनि जाँची धार्मिक पुरुषलाई सभ्य (न्यायाधिश) का रुपमा नियुक्त गरुन् ।

धर्मशास्त्रार्थकुशलाः कुलीनाः सत्यवादिनः ।
समाः शत्रौ च मित्रे च नृपतेः स्युः सभासदः ॥६९॥

न्यायालयमा धर्मशास्त्र र अर्थशास्त्रमा पारङ्गत, कुलीन र सत्यवादी तथा शत्रु र मित्रलाई समान देख्ने व्यक्तिलाई न्यायाधीशमा नियुक्त गर्नू ।



तत् प्रतिष्ठः स्मृतो धर्मो धर्ममुलाश्च पार्थिवः ।
सह सद्भिरतो राजा व्यवहारान्विशोधयेत् ॥७०॥

न्यायालयमा स्मृति वा धर्मशास्त्रद्वारा धर्म प्रतिष्ठित हुन्छ, धर्मको मूल राजा हुन् । यसैले सज्जन र विद्वान न्यायाधीशहरूको सहभागितामा नै राजाले मुद्दाहरुको किनारा लगाउनु पर्दछ ।

शुद्धेषु व्यवहारेषु शुद्धिं यान्ति सभासदः ।
शुद्धिश्च धर्मात्तेषां हि धर्ममेव वदेदतः ॥७१॥

फैसला शुद्ध हुँदा न्यायाधीशहरू पनि शुद्ध हुन्छन् । धर्मबाट नै तिनको शुद्धि हुन्छ र धर्मले नै तिनको शुद्धतालाई प्रकाशित गर्दछ ।

**यत्र धर्मो ह्यधर्मेण सत्यं यत्रानृतेन च ।**
**हन्यते प्रेक्षमाणानां हतास्तत्र सभासदः ॥७२॥**

जहाँ धर्म अधर्मबाट र सत्य झूटबाट आहत हुन्छ त्यहाँ सबै न्यायाधीश दोषी हुन्छन् ।

## इजलाश र बयान

**सभा वा न प्रवेष्टव्यं वक्तव्यं वा समञ्जसम् ।**
**अब्रुवन् विब्रुवन् वापि नरो भवति किल्बिषी ॥७३॥**



इजलासमा नजानू, जानै पर्ने भए उचित र सत्य कुरा बोल्नू, गएर केही नबोल्नाले वा अनुचित बोल्नाले मनुष्य पापको भागिदार हुन्छ ।

## अधर्मका चार पाउ

**पादोऽधर्मस्य कर्त्तारं पादः साक्षिणमृच्छति ।**
**पादः सभासदः सर्वान् पादो राजानमृच्छति ॥७४॥**

अधर्मका चार पाउ हुन्छन् । एक पाउ अधर्मकर्ताको, एक पाउ साक्षीको, एक पाउ इजलासको र एक पाउ राजाको हुन्छ ।

## न्यायालय र पाप

**राजा भवत्यनेनास्तु मुच्यन्ते च सभासदः ।**
**एनो गच्छति कर्त्तारं निन्दार्हो यत्र निन्द्यते ॥७५॥**

जुन न्यायालयमा निन्दनीय पुरुष निन्दित घोषित गरिन्छ त्यहाँ  राजा निष्पाप र इजलास पापमुक्त हुन्छ । पाप, आचरण गर्ने पुरुषलाई नै लाग्दछ ।

## बहसको आधार

**अन्धो मत्स्यानिवाश्नाति निरपेक्षः सकण्टकान् ।**
**परोक्षमर्थवैकल्याद्भाषते यः सभागतः ॥७६॥**

शास्त्र (कानुन) ज्ञान नभएकाले सभामा कुनै शास्त्रज्ञको सहायता बिना बोल्दा त्यसरी नै निन्दा र पापरुपी कष्ट पाउँदछ जसरी अन्धोले जानीबुझी माछा खाई त्यसको काँढाले गला र तालुमा कष्ट पाउँदछ ।



## फैसलाको आधार

**तस्मात्सभ्यः सभां प्राप्य रागद्वेषविवर्जितः ।**
**वचस्तथाविधं ब्रूयाद्यथा न नरकं पतेत् ॥७७॥**

यसैले न्यायाधीशले इजलासमा कसैप्रति अनुग्रह वा आक्रोश नराखी यथोचित न्याय बोल्नु उचित हुन्छ ताकि उ नरकमा गएर नखसोस् ।

## वकालत

**यथा शल्यं भिषग्विद्वानुद्धरद्यन्त्रयुक्तिभिः ।**
**प्राड्विवाकस्तथा शल्यमुद्धरेद् व्यवहारतः ॥७८॥**

जसरी वैद्यले यन्त्रशक्तिबाट काँढा झिक्दछ त्यसरी नै प्राड्विवाक व्यवहार (वकिल र न्यायाधिशका बीचमा हुने वहस) द्वारा अधर्मरुपी काँढा झिकिन्छ ।

## सर्वसम्मत निर्णय

**यत्र सभ्यो जनः सर्वः साध्वेतदिति मन्यते ।**
**स निश्शल्यो विवादः स्यात् सशल्यः स्यादतोऽन्यथा ॥७९॥**

"यो ठीक हो " भनी न्यायाधीशहरू सबै सहमत हुन्छन् भने मुद्दा फैसला हुन्छ । होइन भने विवाद् फेरी सकण्टक (घोचेर बस्ने वा बिझाउने) भएर रहन्छ ।

## इजलाश सभा, वृद्ध, धर्म र सत्य

**न सा सभा यत्र न सन्ति वृद्धा, त ते वृद्धा ये न वदन्ति धर्मम् ।**
**नासौ धर्मो यत्र न सत्यमस्ति न तत् सत्यं यच्छलेनानुविद्धम् ॥८०॥**

त्यो सभा नै होइन जहाँ वृद्ध हुँदैनन् । ती वृद्ध नै होइनन् जो धर्म बोल्दैनन् । त्यो धर्म नै होइन जहाँ सत्य छैन र त्यो सत्य नै होइन जुन छलकपटले भरपूर छ ।

**इति व्यवहारदर्शनविधिः**

✷

नारदीयमनुसंहिता अन्तर्गत विवाद वा मुद्दामामिला हेर्ने विधिका बारेमा वर्णन गरिएको व्यववहारदर्शन विधि खण्डको मोहन प्रसाद सापकोटाद्वारा

नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

शुरुदेखिका श्लोकको संख्याः ०+८०=८०

## विवादपदम्
## (विवाद)
## (अथ ऋणादानं प्रथमं विवादपदम् )
## ऋणको लेनदेन सम्बन्धी पहिलो विवाद

### ऋणको लेनदेन



ऋणं देयमदेयञ्च येन यत्र यथा च यत् ।
दानग्रहणधर्माश्च ऋणादानमिति स्मृतम् ॥१॥

ऋण दिने, नदिने, कसले दिने, कहाँ दिने, कसलाई दिने, कसरी दिने, के दिने आदि लेनदेनका धार्मिक (कानुनी) विधिलाई “ऋणदान” भनिन्छ ।

### अंशियारले पहिला पैत्रिक ऋण तिर्नू

पितर्युपरते पुत्रा ऋणं दद्युर्यथांशतः ।
विभक्ता ह्यविभक्ता वा यस्तामुद्वहते धुरम् ॥२॥

पिताको शेषपछि छोराहरुले मिलेर पहिले बाबुले लिएको ऋण तिर्नू । भिन्न भइसकेको भए आआफ्ना भागमा परेको बाबुले लिएको ऋण तिर्नू । भिन्न हुन खोजिएको भए पहिले बाबुले लिएको ऋण तिर्नु र ऋण तिरी बाँकी बचेको श्रीसम्पत्तिलाई भाग लगाउनू ।

पितृव्येणाविभक्तेन भ्रात्रा वा यदृणं कृतम् ।
माता वा यत् कुटुम्बार्थे दद्युस्तद्रिक्थिनोऽखिलम् ॥३॥

भिन्न नहुँदै बाबुका दाजुभाइले, आफ्ना दाजुभाइले वा आमाले परिवारको पालनपोषणका लागि जुन ऋण लिएका हुन्छन् छुट्टिनु अघि अंश पाउनेहरुले त्यो ऋण पहिले चुक्ता गर्नु पर्दछ ।



क्रमादव्याहतं प्राप्तं पुत्रैर्यन्नर्णमुद्धृतम् ।
दद्युः पैतामहं पौत्रास्तच्चतुर्थान्निवर्त्तते ॥४॥

हजुरबाले लिएको ऋण उनको मृत्युपछि क्रमैले उनका छोराहरुले तिर्नू, नतिरे नातिले तिर्नू । त्यसपछिको चौथो पुस्ताको पुरुष ऋणी हुँदैन ।

## पुत्रप्रतिको विश्वास

इच्छन्ति पितरः पुत्रान् स्वार्थहेतोर्यतस्ततः ।
उत्तमर्णाधमर्णेभ्यो मामयं मोचयिष्यति ॥५॥

पितृले आफ्नो स्वार्थका लागि जतातत्तै छोरा चाहेका छन् । किनकि तिनलाई आफूले लिएको ऋण छोराबाटै तिरिने छ, उठाउने रकम पनि तीबाट नै जम्मा पारिने छ र आफ्नो मुक्ति पनि तीबाट नै हुन्छ भन्ने विश्वास छ ।

## पुत्रको कर्तव्य

अतः पुत्रेण जातेन स्वार्थमुत्सृज्य यत्नतः ।
ऋणात् पिता समुद्धार्यो यथा न नरकं पतेत् ॥६॥

यसैले जन्मिएका छोराहरूले स्वार्थ त्यागी पितालाई ऋणबाट मुक्त गर्नू, जसले गर्दा उनी नरकमा नखसून् ।



## ऋण नतिरी मरेका व्यक्तिको धर्मकर्मको फल साहूले पाउँदछ

तपस्वी चाग्निहोत्री च म्रियते चेदृणी यदि ।
तपश्चैवाग्निहोत्रं च तत्सर्वं धनिनां धनम् ॥७॥

कुनै तपस्वी वा अग्निहोत्री कसैको ऋण नतिरी मर्दछ भने, त्यसले गरेको तपस्या र अग्निहोत्रको फल पनि ऋणदाता साहूले नै पाउँदछ ।

## तिर्न नपर्ने खालका ऋण

न पुत्रर्णं पिता दद्यात् दद्यात् पुत्रस्तु पैतृकम् ।
कामक्रोधसुराद्यूतप्रातिभाव्यकृताद्विना ॥८॥

काम, क्रोध, सुरापान, जुवा र जमानी बसेको ऋण : बाबुले छोराको र छोराले बाबुको तिर्न पर्दैन ।

## बाबुले तिर्नुपर्ने ऋण

पितुरेव नियोगाद्यत्कुटुम्बभरणाय वा ।
कृतं वा यदृणं कृच्छ्रे दद्यात् पुत्रस्य तत् पिता ॥९॥

बाबुको सल्लाहले वा कुटुम्ब (परिवार) को पालनपोषणका लागि, अति कष्टकर अवस्थामा परिवारका जोसुकैले ऋण लिएको भएपनि त्यो ऋण बाबुले तिर्नु पर्दछ ।



## स्वामीले तिर्नुपर्ने ऋण

शिष्यान्तेवासिदासस्त्रीवैयावृत्त्यकरैश्च यत् ।
कुटुम्बहेतोरुच्छिन्नं वोढव्यं तत् कुटुम्बिना ॥१०॥

स्वामीको आज्ञा नलिई कुटुम्बका लागि शिष्य, चेलो, दास, स्त्री र नोकरबाट जुन खर्च गरिन्छ त्यो उसका स्वामीले तिर्नुपर्दछ ।

## बीस वर्षपछि छोराले तिर्नुपर्ने ऋण

नार्वाक् संवत्सराद्विंशात्पितरि प्रोषिते सुतः ।
ऋणं दद्यात् पितृव्ये वा ज्येष्ठे भ्रातर्यथापि वा ॥११॥

बाबु, बाबुका दाजुभाई वा जेठो दाजू ऋण लिएर विदेश गई वा अपहरणमा परी वा कतै लुकी उतै हराए भने, बीस वर्ष पहिले (अगाडि) छोराले ऋण तिर्नु पर्दैन । (बेपत्ता भएको बीस वर्षपछि छोराले ऋण तिर्नु पर्दछ) ।

### सगोलको ऋण

दाप्यः परर्णमेकोऽपि जीवत्स्वधिकृतैः कृतम् ।
प्रेतेषु तु न तत् पुत्रः परर्णं दातुमर्हति ॥१२॥

सगोलको ऋण, सगोलका सबै बिती एउटा जीवित भए उसैले तिर्नु पर्दछ । उसको पनि मृत्यु भए उसका छोराले आफ्नो भाग अनुसार तिर्नुपर्दछ ।



### पत्नी वा माताले तिर्नुपर्ने ऋण

न स्त्री पतिकृतं दद्यादृणं पुत्रकृतन्तथा ।
अभ्युपेतादृते यद्वा सह पत्या कृतन्तथा ॥१३॥

पति वा पुत्र बितेपछि लिइएको ऋण पत्नी वा माताले तिर्नु पर्दछ । यस्तो नमान्ने हो भने स्त्री ऋण तिर्न सक्दिन (मान्दिन) ।

### एकलमहिला र अपुताली खानेले तिर्नुपर्ने ऋण

दद्यात् त्वपुत्रा विधवा नियुक्ता वा मुमूर्षुणा ।

योवा तद्रिक्थमादद्याद्यतो रिक्थमृणं ततः ॥१४॥

पतिको अन्तिम वचनानुसार पुत्र नहुने एकल महिलाले पतिले लिएको ऋण तिर्नू वा उसको अपुताली खानेले त्यो ऋण तिर्नू । किनकि अपुताली पनि ऋण नै हो ।

## पतिले तिर्नुपर्ने र नपर्ने ऋण

न च भार्याकृतमृणं कथञ्चित् पत्युराभवेत् ।
आपत्कृतादृते पुंसां कुटुम्बार्थो हि विस्तरः ॥१५॥

आपतमा बाहेक पत्नीले लिएको ऋण पतिले तिर्न पर्दैन । टाढा जाँदा परिवारका लागि पत्नीले लिएको ऋण भने पतिले अवश्य तिर्नू ।



अन्यत्र रजकव्याधगोपशौण्डिकयोषितः ।
तेषां तत्प्रत्यया वृत्तिः कुटुम्बञ्च तदाश्रयम् ॥१६॥

धोबी, व्याधा, गोपाल र मदिरा व्यवसायीका पत्नीले लिएको ऋण पतिले तिर्नू, किनकि ती विश्वासिला हुन्छन् र परिवार यिनैका भरमा बाँचेको हुन्छ ।

## एकलमहिलाको धनमाथि अरुको अधिकार

पुत्रिणी तु समुत्सृज्य पुत्रं स्त्री यान्यमाश्रयेत् ।
तस्या रिक्थं हरेत् सर्वं निःस्वायाः पुत्र एव तु ॥१७॥

पुत्रवती एकलमहिलाले पुत्र छोडी अर्कै पुरुषसँग विवाह गरे उनको स्त्रीधन त्यही पुरुषले लिन्छ । सो बाहेकको पूर्वपतिको धनसम्पत्ति छाडेको छोराले लिन्छ ।

## एकलमहिलाले लिएको ऋण तिर्ने दायित्व

या च सप्रधनैव स्त्री सापत्या चान्यमाश्रयेत् ।
सोऽस्या दद्यादृणं भर्तुरुत्सृजेद्वा तथैव ताम् ॥१८॥

जो एकलमहिला आफ्ना पुत्र र पतिले लिएको ऋण बोकी अर्कै पुरुषसँग विवाह गर्दछे, त्यो उनको दोश्रो पतिले पहिलो पतिको ऋण तिरिदिएर उनलाई ऋणमुक्त गर्नु पर्दछ ।



अधनस्य ह्यपुत्रस्य मृतस्योपैति यः स्त्रियम् ।
ऋणं वोढुः स भजते तदेतस्य धनं स्मृतम् ॥१९॥

निर्धन एवं पुत्र नभएकी एकलमहिलासँग जसले विवाह गर्दछ उ तिनको पूर्वपतिले लिएको ऋण तिर्दछ किनकि ती स्त्री पनि त्यो पुरुषकी धन नै त हुन् ।

## मृतकले लिएको ऋण तिर्ने दायित्व

धनस्त्रीहारिपुत्राणामृणभाग् यो धनं हरेत् ।
पुत्रोऽसतोः स्त्रीधनिनोः स्त्रीहारी धनिपुत्रयोः ॥२०॥

मरेका ऋणग्रस्त पुरुषको धन, स्त्री र पुत्रमध्ये : धन लिनेले, धन र स्त्री लिने नभए पुत्रले तथा स्त्रीलिने भए उसैले मृतकले लिएको ऋण तिर्नू ।

## स्वैरिणी र पुनर्भूले लिएको ऋण तिर्ने दायित्व

उत्तमा स्वैरिणीनां या पुनर्भ्वामुत्तमा तथा ।
ऋणं तयोः पतिकृतं दद्याद्यस्ते उपाश्नुते ॥२१॥

अन्तिम स्वैरिणी (कुमारी अवस्थामै आफ्ना पतिलाई त्यागी समान वर्णको पुरुषसँग पोइल गएकी स्त्री) र पहिली पुनर्भू (पोइल गएकी) का पतिले लिएका ऋण ती स्त्रीलाई उपभोग गर्ने पुरुषले तिर्दछन् ।



## स्त्रीका अप्रमाणिक र प्रामाणिक कार्य

स्वीकृतान्यप्रमाणानि कार्याण्याहरनापदि ।
विशेषतो गृहक्षेत्रदानाधमनविक्रयाः ॥२२॥

विद्वानहरुले भनेका छन् कि यसरी नारी अधिकारिणी भएर पनि विशेष गरी गृह र भूमिको दान, बन्धकी तथा बिक्रीका बारेमा उनले गर्ने कार्य अप्रामाणिक हुन्छ ।

एतान्येव प्रमाणानि भर्ता यद्यनुमन्यते ।
पुत्रः पत्युरभावे वा राजा वा पतिपुत्रयोः ॥२३॥

पतिले आज्ञा दिएको ठाऊँमा भने प्रामाणिक हुन सक्दछ । स्त्रीलाई पति नहुँदा पुत्रको र पतिपुत्र दुवै नहुँदा राजाको अनुमति चाहिन्छ ।

## पत्नीको अधिकार

भर्त्रा प्रीतेन यद्दत्तं स्त्रियै तस्मिन् मृतेऽपि तत् ।
सा यथाकाममश्नीयाद्दद्याद्वा स्थावरादृते ॥२४॥

पति प्रेमपूर्वक पत्नीलाई जे दिन्छ उसको मृत्युपछि चलअचल सम्पत्ति पत्नी स्वेच्छाचारिणी (जथाभावी गर्ने) नभई उपभोग गर्न सक्दछे ।

## नोकरले गर्ने कार्य अप्रमाणिक



तथा दासकृतं कार्यमकृतं परिचक्षते ।
अन्यत्र स्वामिसन्देशान्न दासः प्रभुरात्मनः ॥२५॥

मालिकको आज्ञा नभई नोकरले अन्यत्र गरेको काम प्रमाणिक हुँदैन, किन कि नोकर आफैं मालिक होइन ।

## छोराले गरेका कार्य अप्रमाणिक

पुत्रेण च कृतं कार्यं यत्स्यादच्छन्दतः पितुः ।
तदप्यकृतमेवाहुर्दासः पुत्रश्च तौ समौ ॥२६॥

बाबुको चाहना विपरीत छोराले गरेका कार्य प्रामाणिक हुँदैन किनकि नोकर र पुत्रको कार्य प्रामाणिकताका मामिलामा समान हुन्छन् ।

## नावालक र ऋणको दायित्व

अप्राप्तव्यवहारस्तु स्वतन्त्रोऽपि नचर्णभाक् ।
स्वातन्त्र्यं तु स्मृतं ज्येष्ठे ज्यैष्ठ्यं गुणवयः कृतम् ॥२७॥

स्वतन्त्र भएर पनि यदि नावालक छ भने त छोरो ऋणी हुँदैन । जेठो माथि स्वतन्त्रता रहेको हुन्छ । ज्येष्ठता गुण र उमेरले हुन्छ ।

## स्वतन्त्र र अस्वतन्त्र व्यक्ति



त्रयः स्वतन्त्रा लोकेऽस्मिन् राजाचार्यस्तथैव च ।
प्रति प्रति च सर्वेषां वर्णानां स्वगृहे गृही ॥२८॥

लोकसमाजमा तीन थरी नै स्वतन्त्र छन्-राजा, आचार्य र आआफ्ना वर्णमा वर्णी तथा आआफ्नो घरमा गृहस्थी ।

अस्वतन्त्राः प्रजाः सर्वाः स्वतन्त्रः पृथिवीपतिः ।
अस्वतन्त्रः स्मृतः शिष्य आचार्ये च स्वतन्त्रता ॥२९॥

प्रजा अस्वतन्त्र र राजा स्वतन्त्र हुन्छन् । शिष्य अस्वतन्त्र र आचार्य स्वतन्त्र हुन्छ ।

**अस्वतन्त्रा स्त्रियः पुत्रा दासाश्च सपरिग्रहाः ।**
**स्वतन्त्रस्तत्र तु गृही यस्य स्यात्तत्क्रमागतम् ॥३०॥**

स्त्री, पुत्र, दास र आश्रित व्यक्ति अस्वतन्त्र हुन्छन् । त्यो गृहस्थ स्वतन्त्र हुन्छ जसलाई क्रमानुसार पैतृक सम्पत्ति आएको हुन्छ ।

## नाबालकको परिभाषा

**गर्भस्थसदृशो ज्ञेयः आष्टमाद्वत्सराच्छिशुः ।**
**बाल आ षोडशाद् वर्षात् पौगण्डश्चेति शब्द्यते ॥३१॥**



आठ वर्षसम्मको बालक गर्भस्थ बालक समान हुन्छ । जुन बालकको उमेर सोह्र वर्ष पुगेको छैन उ नाबालक (दश वर्ष मुनीको केटो सरह) हुन्छ ।

## बालिक र उसको अधिकार

**परतो व्यवहारज्ञः स्वतन्त्रः पितरावृते ।**
**जीवतोर्ह्यस्वतन्त्रः स्याज्जरयापि समन्वितः ॥३२॥**

त्यसपछि बाबुआमा पछि उ व्यवहारज्ञ र स्वतन्त्र हुन्छ । आमाबाबु अति बुढा हुने समयमा पनि व्यवहारमा भिजेको पुत्र स्वतन्त्र हुन्छ ।

## माता र पिताको प्रमाणिकता

तयोरपि पिता श्रेयान्बीजप्राधान्यदर्शनात् ।
अभावे बीजिनो माता तदभावे तु पूर्वजः ॥३३॥

माता र पितामध्ये पिता बढी प्रमाणिक हुन्छ किनकि (योनीभन्दा) बीज प्रधान हुन्छ । पिता नहुँदा माता र माता पनि नहुँदा जेठो दाजु स्वतन्त्र हुन्छ ।

## आश्रित जन र व्यवहार

स्वतन्त्राः सर्व एवैते परतन्त्रेषु सर्वदा ।
अनुशिष्टौ निसर्गे च विक्रये चेश्वरा मताः ॥३४॥



ती व्यक्तिमाथि निर्भर व्यक्तिका बीचमा ती स्वतन्त्र हुन्छन् । अनुशासन, दान र बेचबिखनमा ती मालिक हुन्छन् ।

## बालकले गर्ने कार्य अप्रमाणिक

यद् बालः कुरुते कार्यमस्वतन्त्रस्तथैव च ।
अकृतं तदिति प्राहुः शास्त्रे शास्त्रविदो जनाः ॥३५॥

जस्तो बालक कार्य गर्दछ त्यस्तै ऊ अस्वतन्त्र हुन्छ । धर्मशास्त्रज्ञहरुले भनेका छन् कि उसले गरेका कार्य प्रमाणिक हुँदैन ।

## स्वभाव विपरीतका कार्य अप्रमाणिक

स्वतन्त्रोऽपि हि यत् कार्यं कुर्यादप्रकृतिं गतः ।
तदप्यकृतमेवाहुरस्वतन्त्रः स हेतुतः ॥३६॥

स्वतन्त्र भएर पनि आफ्नो स्वभावलाई छोडी जसले काम गर्दछ, स्वभावजन्य स्वतन्त्रता नभएका कारण त्यो कार्य प्रमाण हुँदैन ।

कामक्रोधाभियुक्तार्तभयव्यसनपीडिताः ।
रागद्वेषपरीताश्च ज्ञेयास्त्वप्रकृतिं गताः ॥३७॥

काम र क्रोधका वशमा परेको, दुःखी, डर र व्यसनले पीडित तथा राग वा द्वेषले आसक्त व्यक्ति आफ्नो स्वभाव अनुसारको काम गर्दछ : यी प्रामाणिक हुँदैनन् ।



## प्रमाणिक कार्य

कुले ज्येष्ठस्तथा श्रेष्ठः प्रकृतिस्थस्तु यो भवेत् ।
तत्कृतं स्यात् कृतं कार्यं नास्वतन्त्रकृतं कृतम् ॥३८॥

वंशमा प्राकृतिक ज्येष्ठ र श्रेष्ठ पुरुषले गरेका काम प्रमाण हुन्छन् । स्वतन्त्र नहुनेले गरेका काम प्रमाण हुँदैनन् ।

## धन आर्जन र चलाउने विधि

**धनमूलाः क्रियाः सर्वा यत्नस्तत्साधने मतः ।**
**वर्धनं रक्षणं भोग इति तस्य विधिः क्रमात् ॥३९॥**

सबै खाले कर्म धनमूलक हुन् । यसैले धन कमाउन प्रयत्न गर्नु पर्दछ । रक्षा, वृद्धि र भोग–यी धन चलाउने विधि हुन् ।

## धनका किसिम

**तत् पुनस्त्रिविधं ज्ञेयं शुक्लं शबलमेव च ।**
**कृष्णञ्च तस्य विज्ञेयः प्रभेदः सप्तधा पुनः ॥४०॥**



फेरी त्यो धन पनि सेतो, शबल र कालो गरी तीन थरीको हुन्छ । त्यसका पनि सात उपभेद हुन्छन् ।

## सेतो धन

**श्रुतशौर्यतपःकन्याशिष्ययाज्यान्वयागतम् ।**
**धनं सप्तविधं शुक्लमुदयोऽप्यस्य तद्विधः ॥४१॥**

विद्या, वीरता, तपस्या, कन्या, शिष्य, पुरोहित्याइँ र पुर्ख्यौलीका माध्यमबाट आउने धन सेतो धन हो र त्यसरी धन आर्जन गर्न गरिने उद्यम पनि सेता उद्यम हुन् ।

## शबल धन

**कुसीदकृषिवाणिज्यशुल्कशिल्पानुवृत्तिभिः ।**
**कृतोपकारादाप्तञ्च शबलं समुदाहृतम् ॥४२॥**

ब्याज, कृषि, व्यापार, शुल्क, शिल्प र सेवाका माध्यमबाट र उपकारका बदलामा आउने धन शबल धन हो ।

## कालो धन

**पार्श्वकद्यूतदूतार्तप्रतिरूपकसाहसैः ।**
**व्याजेनोपार्जितं यच्च तत् कृष्णं समुदाहृतम् ॥४३॥**



घुस लिने आदि जस्ता बेइमानी गरी, जूवा, दूतकार्य, अरुलाई पिडा दिएर, नक्कली मुद्रा आदि बनाएर, चोरी-डकैती तथा ब्याज खाएर कमाएको धन कालो धन हो ।

## धनको उपभोग

**तेन क्रयो विक्रयश्च दानं ग्रहणमेव च ।**
**विविधाश्च प्रयुज्यन्ते क्रियाः सम्भोग एव च ॥४४॥**

यी तीन किसिमका धनबाट खरिदबिक्री, दानको लेनदेन, अनेक थरी कर्म र उपभोगको काम हुन्छ ।

## धन उपभोग र फल

यथाविधेन द्रव्येण यत्किञ्चित् कुरुते नरः ।
तथाविधमवाप्नोति स फलं प्रेत्य चेह च ॥४५॥

यी तीन प्रकारका धनमध्ये जुन धनलाई लिएर मानिस कर्म गर्दछ, उसलाई अहिले र मरणोपरान्त त्यसै अनुसार फल मिल्दछ ।

## ब्याजका प्रकार

तत् पुनर्द्वादशविधं प्रतिवर्णाश्रयं स्मृतम् ।
साधारणं स्यात् त्रिविधं शेषं नवविधं स्मृतम् ॥४६॥



प्रत्येक वर्णलाई लिएर बाह्र थरी ब्याज हुन्छ । यिमध्ये तीन थरी प्रत्येक वर्णको र नौ थरी विशेष वर्णको हुन्छ ।

## समान खालका धन

क्रमागतं प्रीतिदायं प्राप्तञ्च सह भार्यया ।
अविशेषेण सर्वेषां वर्णानां त्रिविधं धनम् ॥४७॥

साधारणतया पैतृक सम्पत्ति, मायाबाट प्राप्त धन तथा दाइजो : यी तीन धन सबै वर्णका लागि समान खालका धन हुन् ।

## ब्राह्मणका शुद्ध धन

**वैशेषिक धनं ज्ञेयं ब्राह्मणस्य त्रिलक्षणम् ।**
**प्रतिग्रहेण लब्धञ्च याज्यतः शिष्यतस्तथा ॥४८॥**

विशेष गरी ब्राह्मणको तीन किसिमबाट प्राप्त हुने धन-दानबाट, पुरोहित्याइँ गरेर र गुरुदक्षिणाबाट प्राप्त हुने धन शुद्ध धन हुन्छ ।

## क्षत्रियको शुद्ध धन

**त्रिविधं क्षात्त्रियस्यापि प्राहुर्वैशेषिकं धनम् ।**
**युद्धोपलब्धं कारश्च दण्डश्च व्यवहारतः ॥४९॥**



क्षत्रियको पनि तीन किसिमको-खजानाको, युद्धबाट प्राप्त हुने र मुद्दाको दण्ड-जरिवाना तिरिएको रकमबाट प्राप्त हुने धन शुद्ध धन हुन्छ ।

## वैश्य र शूद्रको शुद्ध धन

**वैशेषिकं धनं ज्ञेयं वैश्यस्यापि त्रिलक्षणम् ।**
**कृषिगोरक्षवाणिज्यं शुद्रस्यैभ्यस्त्वनुग्रहात् ॥५०॥**

वैश्यका पनि तीन किसिमका-कृषि, गोधन र व्यापारबाट पाएको धन शुद्ध धन हो । यी तीन वर्णको कृपाबाट शुद्रलाई जे मिल्दछ त्यो शूद्रको शुद्ध धन हो ।

## अधर्मसूचक धन

सर्वेषामेव वर्णानामेष धर्म्यो धनागमः ।
विपर्ययादधर्म्यः स्यान्न चेदापद् गरीयसी ॥५१॥

सबै वर्णको यो धर्म अनुसारको धनार्जन हो । अती नै सङ्कट पर्दामा बाहेक यसको उल्टो बाटोबाट कमाइएको धन अधर्मसूचक धन हो ।

## चार वर्णको आपत्कालीन पेसा

आपत्स्वनन्तरा वृत्तिर्ब्राह्मणस्य विधीयते ।
वैश्यवृत्तिस्ततश्चोक्ता न जघन्या कथञ्चन ॥५२॥



आपत्कालमा ब्राह्मणका लागि क्षत्रियको पेसा र यो पेसाको अभावमा वैश्यको पेसा गर्न स्वीकृति छ तर शूद्रको पेसा गर्न कहिल्यै स्वीकृति छैन ।

## वर्ण अनुसार निषेधित कर्म

न कथञ्चन कुर्वीत ब्राह्मणः कर्म वार्षलम् ।
वृषलः कर्म न ब्राह्मं पतनीयौ हि तौ तयोः ॥५३॥

कुनै पनि परिस्थितिमा ब्राह्मणलाई शूद्रकर्म गर्ने अनुमति छैन । ब्राह्मणका कर्म पनि शूद्रका लागि गर्न नहुने हुन्छ । यी दुवै थरी कर्म दुवैका लागि पतनीय कर्म हुन् ।

## अस्थाई पेसा

**उत्कृष्टं चापकृष्टं च तयोः कर्म न विद्यते ।**
**मध्यमे कर्मणी हित्वा सर्वसाधारणे हि ते ॥५४॥**

आपदमा शुद्रले अपनाउने क्षत्रीय वृत्ति ब्राह्मणले अपनाउने वैश्य वृत्तिलाई न त उत्कृष्ट वृत्ति भनिन्छ न त निकृष्ट । यसभन्दा तलको वृत्ति अपनाउन ब्राह्मण र यसभन्दा माथिको वृत्ति अपनाउन शूद्र सक्दैन । यी वृत्ति यिनका लागि अस्थाई वृत्ति हुन् ।

## आपत्कालीन पेसा सामान्य अवस्था भएपछि छाड्नू

**आपदं ब्राह्मणस्तीर्त्वा क्षत्त्रवृत्त्या भृते जने ।**
**उत्सृजेत् क्षत्त्रवृत्तिं तां कृत्वा पावनमात्मनः ॥५५॥**

ब्राह्मणले आपदकालमा अपनाएको क्षत्रियवृत्तिलाई आपदबाट पार भएपछि छोडी प्रायश्चित गर्नु पर्दछ । प्रायश्चित गरेपछि उ पवित्र हुन्छ ।

**तस्यामेव तु यो वृत्तौ रमते ब्राह्मणो रसात् ।**
**काण्डपृष्ठश्च्युतो मार्गात् सोऽपाङ्क्तेयः प्रकीर्त्तितः ॥५६॥**

जुन ब्राह्मण लोभले यो पेसा (क्षत्रिय वा वैश्य) मा आशक्त रहन्छ उ ‘काण्डपृष्ठ’ नामले चिनिदै आचारभ्रष्ट भई ब्राह्मणका पङ्क्तिमा राख्न अयोग्य हुन्छ ।

## आपत्कालमा ब्यापार गर्ने ब्राह्मणले बेच्न हुने र नहुने कुरा

वैश्यवृत्यावविक्रेयं ब्राह्मणस्य पयो दधि ।
घृतं मधु मधूच्छिष्टं लाक्षाक्षाररसासवाः ॥५७॥

धेरै सङ्कट परी वैश्यवृत्ति गर्ने ब्राह्मणले निम्नलिखित वस्तु बिक्री गर्न निषेध छ :- दूध, दही, घिऊ, मह, सोम, लाहा, सखर, क्षार, सुरा, ..।

मांसौदनतिलक्षौमसोमपुष्पफलोपलाः ।
मनुष्यविषशस्त्राम्बुलवणापूपवीरुधः ॥५८॥

मासु, अन्न, तिल, आलसको कपडा, फूल, फल, ढुङ्गा, मानिस, विष, हतियार, पानी, नुन, मालपूवा, फैलिएको लहरा,.. ।



नीलकौशेयचर्मास्थिकुतपैकशफा मृदः ।
उदश्वित्केशपिण्याकशाकाद्यौषधयस्तथा ॥५९॥

नीर, रेशम, छाला, हाड, कम्बल, एक खुरे जनावर, माटाका भाँडा, मोही, कपाल, पिना-हिङ, सागपात, अदुवा र औषधी नबेच्नू ।

ब्राह्मणस्य तु विक्रेयं शुष्कदारु तृणानि च ।
गन्धद्रव्यैरकालेयतूलमूलतुषादृते ॥६०॥

ब्राह्मण सुकेको दाउरा, घाँस, चन्दन बाहेकका सुगन्धी द्रव्य, कपास, कन्दमूल र भुस बेच्न सक्दछ ।

स्वयं विशीर्णं विदलं फलानां बदरेङ्गुदे ।
रज्जुः कार्पासिकं सूत्रं तच्चेदविकृतं भवेत् ॥६१॥

आफैं झरेको पात, बयर (गीठो?), चिउली, डोरी र विकृत नभएको कपासको धागो : यी कुरा ब्राह्मणबाट बेच्न योग्य हुन्छन् ।

अशक्तौ भेषजस्यार्थे यज्ञहेतोस्तथैव च ।
यद्यवश्यं तु विक्रेयास्तिला धान्येन तत्समाः ॥६२॥



अशक्तको लागि, औषधीका लागि, यज्ञका लागि तिल, धान वा त्यस्तै कुरा जुन् वस्तु बिक्रीयोग्य छ त्यो बेच्न सक्दछ ।

### बेच्न नहुने कुरा बेच्ने ब्राह्मण दण्डनीय

अविक्रेयाणि विक्रीणन् ब्राह्मणः प्रच्युतः पथः ।
मार्गे पुनरवस्थाप्यो राज्ञा दण्डेन भूयसा ॥६३॥

बेच्न नहुने बेचेर पदच्यूत भएको ब्राह्मणलाई राजाबाट अधिकतम दण्ड तिराई फेरी आफ्नो पेसामा लगाउनु पर्दछ ।

## कानुनको पालना

**प्रमाणानि प्रमाणस्थैः परिपाल्यानि यत्नतः ।**
**सीदन्ति हि प्रमाणानि प्रमाणैरव्यवस्थितैः ॥६४॥**

जेजति कानुन (प्रमाण) प्रचलनमा छन् तिनलाई प्रयत्नपूर्वक पालना गर्नू वा गर्न लगाउनू । कानुनलाई लागू गरिएन, समयानुसार थपघट गरिएन वा व्यवस्थापन गरिएन भने यो नष्ट भएर जान्छ । (कानुन बलियो भएन भने सबै मनलाग्दी गर्न थाल्दछन्) ।

## प्रमाणका किसिम



**लिखितं साक्षिणो भुक्तिः प्रमाणं त्रिविधं विदुः ।**
**धनस्वीकरणे येन धनी धनमुपाश्नुते ॥६५॥**

लिखित, साछी र कब्जा (भुक्ति) गरी तीन प्रकारका प्रमाण हुन्छन् । कसले, कहिले र कहाँ पाउने सम्पत्ति पायो भन्ने कुराको निर्णय यिनै प्रमाणका आधारमा गरिन्छ ।

## प्रमाणको बल

**लिखितं बलवन्नित्यं जीवन्तस्त्वेव साक्षिणः ।**
**कालातिहरणाद्भुक्तिरिति शास्त्रेषु निश्चयः ॥६६॥**

लिखित प्रमाण सदा बलवान हुन्छ । जीवित भए साछीहरु प्रमाण हुन्छन् । समय बितेपछि भुक्ति (कब्जा वा भोगचलन) प्रमाण हुन्छ भन्ने शास्त्रको निश्चय छ ।

**त्रिविधस्यास्य दृष्टस्य प्रमाणस्य यथाक्रमम् ।**
**पूर्वं पूर्वं गुरु ज्ञेयं भुक्तिर्वैषां गरीयसी ॥६७॥**

यि तीन थरी प्रमाणमध्ये अघिल्ला ठूला (बलिया) हुन् तर पनि भुक्ति (कब्जा वा भोगचलन) सबभन्दा बलियो प्रमाण हो ।

**सम्पत्तिको भोग, प्रमाण र हक अधिकार**

**विद्यमानेऽपि लिखिते जीवत्स्वपि हि साक्षिषु ।**

**विशेषतः स्थावराणां यन्न भुक्तं न तत् स्थिरम् ॥६८॥**

लिखित प्रमाण हुँदाहुँदै वा साक्षीहरु नमर्दा खेरी पनि, आफ्नो सम्पत्ति (विशेषगरी अचल सम्पत्ति) जबसम्म आफैंले भोगचलन गर्दिन तबसम्म वास्तविकरूपमा आफ्नो हुँदैन ।

**भुज्यमानान् परैरर्थान् यः स्वमौढ्यादुपेक्षते ।**
**समक्षं जीवतोऽप्यस्य तान् भुक्तिः कुरुते स्वकान् ॥६९॥**

मूर्खतावश आफ्नो धनसम्पत्ति अरुले भोगचलन गर्दा बेलैमा वास्ता नगरे, आफू स्वयं जीवित हुँदा र आफूसँग सबै प्रमाण हुँदाहुँदै पनि त्यो धनसम्पत्ति भोगचलन गर्नेले खाइदिन सक्दछ ।

यत् किञ्चिद्दशवर्षाणि सन्निधौ प्रेक्षते धनी ।
भुज्यमानं परैस्तूष्णीं न स तल्लब्धुमर्हति ॥७०॥

अरुले दश वर्ष लगातार भोग गरेको देखेर पनि धनसम्पत्तिको वास्तविक स्वामी निष्क्रिय रहन्छ भने, त्यो धनसम्पत्ति भोगचलन गर्नेले नै आफ्नो स्वामित्वमा लिन योग्य हुन्छ, वास्तविक स्वामीको स्वामित्व स्वतः काम नलाग्ने हुन पुग्दछ ।

उपेक्षां कुर्वतस्तस्य तूष्णम्भूतस्य तिष्ठतः ।
कालेऽतिपन्ने पूर्वोक्तो व्यवहारो न विद्यते ॥७१॥

आफ्नो सम्पत्तिको उपेक्षा गरी सन्तोष मानेर बस्दछ र माथि बताइएको समय गुज्रन्छ भने त्यसपछि मुद्दा लाग्दैन ।



## लिखत प्रमाणको महत्व

नाकरिष्यद्यदा स्रष्टा लिखितं चक्षुरुत्तमम् ।
तत्रेयमस्य लोकस्य नाभभिष्यच्छुभा गतिः ॥७०॥

यदि विश्वका सृष्टिकर्ता भगवान चक्षुरुपी त्यो लिखित प्रमाणको सृष्टि गर्दैन थिए त यो लोकको कल्याण नै हुँदैन थियो ।

## भोगचलन गर्नेको सम्पत्ति माथिको अधिकार

अजलश्चेदपोगण्डो विषये चास्य भुज्यते ।
भग्नं तद्व्यवहारेण भोक्ता तद्धनमर्हति ॥७२॥

धनको मालिक जड वा पोगण्ड छैन र अघिल्तिरै अरुले उसको धनसम्पत्ति भोगचलन गर्दछ भने धनीको अधिकार त्यो धनसम्पत्ति माथि समाप्त हुन्छ र भोगचलन गर्ने व्यक्ति कानुनका सहायताले त्यो धनसम्पत्तिको स्वामी हुन्छ । (जड- होस नभएको, मूर्ख, लाटो वा पक्षाघात भएको । पोगण्ड-दश वर्षसम्मको बालक, विकलाङ्ग । शरीरपाणिचरणैर्निसर्गेण शरीरिणः । विकलाः सद्भिरुच्यन्ते पोगण्डकुणिपङ्गवः ॥) ।



आधिः सीमा बालधनं निक्षेपोपनिधीस्त्रियः ।
राजस्वं श्रोत्रियस्वं च नोपभोगेन जीर्यति ॥७३॥

धितो, सीमा (बलपूर्वक खोसिएको धनसम्पत्ति), बाल-धन, नासो, उपनिधि (कुनै भाँडा आदिमा बन्द गरेर वा छाप लगाएर राखिएको धितो), स्त्रीधन (दाइजो, पेवा), राजस्व (सरकारी सम्पत्ति) र श्रोत्रियद्रव्य (दानदक्षिणा) कसैले भोगचलन गर्दैमा त्यसको मूल स्वामित्व नष्ट हुँदैन ।

प्रत्यक्षपरिभोगाच्च स्वामिनो द्विदशाः समाः ।
आध्यादीन्यपि जीर्येयुः स्त्रीनरेन्द्रधनादृते ॥७४॥

स्त्री वा स्त्रीका र राजाका बाहेक जुन धनसम्पत्ति लगातार बीस वर्षसम्म अरुबाट प्रत्यक्षरूपमा भोगचलन हुन्छ, त्यो धनसम्पत्ति भोगचलन गर्नेको हुन्छ ।

**स्त्री धनञ्च नरेन्द्राणां न कथञ्चन जीर्यति ।**
**अनागमं भुज्यमानं वत्सराणां शतैरपि ॥७५॥**

स्त्री-धन, राज-धन तथा आगम(स्रोत) नभै भोगचलन गरिरहेको धन सय वर्षसम्म भोग गरेपनि भोगकर्ताको हुँदैन ।

**अधिकारका लागि भोगचलनभन्दा प्रमाण ठूलो हुन्छ**

**निर्भोगो यत्र दृश्येत न दृश्येतागमः क्वचित् ।**

**आगमः कारणं तत्र न भोगस्तत्र कारणम् ॥७६॥**

कुनै सम्पत्ति माथि कोही कब्जा गरेर बसिरहेको छ तर उसँग लिखित प्रमाण छैन भने भोगचलनले मात्र कुनै महत्व राख्दैन । श्रोत वा प्रमाण ठूलो कुरो हुन्छ, भोगचलन मात्र होइन ।

**भोगचलन र पुस्तान्तरण**

**भुज्यतेऽनागमं यत्तु न तद्भोगोऽतिवर्तते ।**
**प्रेते तु भोक्तरि धनं याति तद्वंश्यभोग्यताम् ॥७७॥**

बिना प्रमाण अर्काको सम्पत्ति भोग गरिरहेको व्यक्ति कहिल्यै त्यो सम्पत्तिको मालिक बन्न सक्दैन । तर, अदालतबाट अन्यथा निर्णय नहुँदासम्म उ मरेपनि उसका सन्तानमा भोगचलन भने सर्दै जान्छ ।

## भोगचलन गर्नेमा स्वतः अधिकार जाने अवस्था

**आहर्तैर्वाभियुक्तः सन्नर्थतस्तरेत् पदम् ।**
**भुक्तिरेव विशुद्धिः स्यात् प्राप्तानां पितृतः क्रमात् ॥७८॥**

कब्जा गरिएको सम्पत्तिको वास्तविक मालिकले उक्त सम्पत्ति पाउन मुद्दा हाली अदालतले तोकेको अवधिमा तोकेको रकम अदालतमा दाखिला गर्दैन वा गर्न पाउँदैन भने त्यो सम्पत्ति जसले पुस्तौंदेखि भोगचलन गर्दै आएको छ उसैको स्वामित्वमा जान्छ, पछि उसले कुनै दाबी गर्न पाउँदैन ।



## हकदाबीको मुद्दा

**अन्वाहितहृतन्यस्तबलवष्टब्धयाचितम् ।**
**अप्रत्यक्षं च यद्भुक्तं षडेतान्यागमाद्विना ॥७९॥**

कसैले एउटालाई विश्वास गरी भोगचलन गर्न दिएको धनसम्पत्ति स्वामीलाई नसोधी अर्कोलाई दिइएको छ भने, बलपूर्वक खोसिएको भए, धरौटी वा नासो हो भने, लुकीछिपी उपभोग भइरहेको छ भने, ऋण लिएर वा धितो राखेर सम्पत्ति फिर्ता नगरिएको भए र धनी बाहिर गएको अवस्थामा कब्जा गरिएको भए त्यस्तो भोगचलनमा वास्तविक धनीबाट हकदाबीको मुद्दा लाग्दछ ।

## भोगचलनमा स्वामित्व परिवर्तन

तथारुढविवादस्य प्रेतस्य व्यवहारिणः ।
पुत्रेण सोऽर्थः संशोध्यो न तद्भोगोऽतिवर्तते ॥८०॥

मुद्दा छिनिनु अघि वादी वा प्रतिवादीको मृत्यु भएमा निजको छोराले विवादित भोगचलनलाई संशोधन गर्नू (स्वामित्व आफ्नो नाममा लेराउनू)। केवल भोगचलन गर्नु मात्र कुनै प्रमाण हुँदैन ।

## भोगचलन र पुस्ता

आगमेन विना पूर्वं भुक्तं पूर्वैस्त्रिभिस्तु यत् ।

न तच्छक्यमपाकर्तुं क्रमात्त्रिपुरुषागतम् ॥८१॥

पिताभन्दा अघिका तीन पुस्तादेखि अन्यायपूर्वक (प्रमाण बिना) नै भएपनि जुन पदार्थको भोग भइरहेको छ, कसैले त्यो धन छिन्न सक्दैन । (तीन पुस्तासम्म आफ्नो सम्पत्तिको खोजीनीति नगर्ने व्यक्तिलाई त्यो सम्पत्तिको उपभोग गर्ने अधिकार हुँदैन) ।

## ऋणीको मृत्युपछि साछीको प्रमाणिकता

सन्तोऽपि न प्रमाणं स्युर्मृते धनिनि साक्षिणः ।
अन्यत्र श्रावितं यत् स्यात् स्वयमासन्नमृत्युना ॥८२॥

ऋणीको मृत्युपछि जीवित साछीहरुको विचार प्रमाण हुँदैन, तर मर्ने बेलामा ऋणीले सो विषयमा केही भनेको छ भने त्यो कुरा सुन्ने साछी प्रमाण हुन सक्दछ ।

### प्रतिवादीको मृत्युपछि साछीको प्रमाणिकता

**नहि प्रत्यर्थिनि प्रेते प्रमाणं साक्षिणां वचः ।**
**साक्षिमत् करणं तत्र प्रमाणं स्याद्विनिश्चये ॥८३॥**

प्रतिवादीको मृत्युपछि उसका साछीहरुको कुरा प्रमाण हुँदैन । उ जीवित हुँदा मात्र उसका साछीहरु प्रमाण हुन्छन् ।



**श्रावितस्त्वातुरेणापि यस्त्वर्थो धर्मसंहितः ।**
**मृतेऽपि तत्र साक्ष्यं स्यात् षट्सु चान्वाहितादिषु ॥८४॥**

तर, रोगीले मर्नेबेलामा जो विधिसम्मत (लेनदेनका सत्यतथ्य) कुरा जसलाई भन्दछ, उसको मृत्युपछि त्यो कुरा सुन्ने व्यक्ति (माथि श्लोक ८२ मा बताइएका अवस्थामा) पनि साछी हुन सक्दछ ।

### पछिल्ला र अघिल्ला प्रमाण

**क्रियर्णादिषु सर्वेषु बलवत्युत्तरोत्तरा ।**
**प्रतिग्रहाधिक्रीतेषु पूर्वा पूर्वा गरीयसी ॥८५॥**

ऋण लेनदेनका सबैखाले मुद्दामा पछिल्ला र दान, धितो आदिका मुद्दामा अघिल्ला प्रमाण बलिया हुन्छन् ।

## ब्याजवृत्ति

स्थानलाभनिमित्तं हि दानग्रहणमिष्यते ।
तत्कुसीदमिति ज्ञेयं तेन वृत्तिः कुसीदिनाम् ॥८६॥

मूलधनमा केही धन थपेर फिर्ता लिनेगरी धनको लेनदेन गर्नुलाई कुशीद (ब्याजवृत्ति) भनिन्छ । यो पेसा हो, पाप वा गैरकानुनी कार्य होइन ।

## ब्याज वा ब्याजदरका किसिम



कायिका कालिका चैवं कारिका च तथास्मृता ।
चक्रवृद्धिश्च शास्त्रेषु तस्य वृद्धिश्चतुर्विधा ॥८७॥

कायिका, कालिका, कारिका र चक्रवृद्धि गरी चार प्रकारका ब्याज बताइएको छ ।

कायाविरोधिनी शश्वत् पणपादादि कायिका ।
प्रतिमासं स्रवन्ती या वृद्धिः सा कालिका स्मृता ॥८८॥

सावाँब्याज किस्ताकिस्तामा तिरिन्छ भने त्यो 'कायिका' हो । प्रतिमहिना तिरिने ब्याजलाई 'कालिका' भनिन्छ ।

वृद्धिः सा कारिता नाम यर्णिकेन स्वयं कृता ।
वृद्धेरपि पुनर्वृद्धिश्चक्रवृद्धिरुदाहृता ॥८९॥

ऋणीले कबुलेर पहिले पहिलेको महिनाको ब्याज समेत जोडी दुई, तीन महिनामा तिर्ने ब्याजलाई 'कारिता' भनिन्छ । सावाँब्याज एकमुष्ट तिर्दा ब्याजको पनि ब्याज लिनुलाई 'चक्रवृद्धि' भनिन्छ ।

ऋणानां सार्वाभौमोऽयं विधिर्वृद्धौ कृतः स्मृतः ।
देशाचारविधिस्त्वन्यो यत्रर्णमवतिष्ठति ॥९०॥

धन बढाउनका लागि यो ब्याजदर विधि सार्वभौम (सर्वसम्मत वा अधिक प्रचलित) विधि हो । तर देश, परिस्थिति आदि अनुसार ऋणको ब्याज-व्यवस्था वा ब्याजदर फरक फरक हुन्छ, हुन सक्दछ ।



द्विगुणं त्रिगुणञ्चैव तथान्यस्मिँश्चतुर्गुणम् ।
तथाष्टगुणमन्यस्मिन् देशे देशेऽवतिष्ठते ॥९१॥

देश अनुसार कतै दोबर (दुई प्रतिशत), कतै तेबर (कतै तीन प्रतिशत), कतै चौबर (कतै चार प्रतिशत) र कतै आठ गुना (आठ प्रतिशत) ब्याजदर प्रचलन छ । देश अनुसार ब्याजदर फरक फरक छ ।

## ब्याजदर

हिरण्यधान्यवस्त्राणां वृद्धिर्द्वित्रिचतुर्गुणा ।

घृतस्याष्टगुणा वृद्धिः स्त्रीपशूनां तु सन्ततिः ॥९२॥

सुन, अनाज र कपडामा क्रमशः दुई, तीन र चार प्रतिशत र घिउमा आठ प्रतिशत ब्याज लिनु । स्त्री र पशुमा ब्याज नलिनु, सन्तान नै ब्याज हुन्छ ।

## ब्याज लिन नहुने कुरा र ब्याज लाग्न शुरु हुने समय

न वृद्धिः प्रतिदत्तानां स्यादनाकारिता क्वचित् ।
अनाकारितमप्यूर्ध्वं वत्सरार्धाद्विवर्धते ॥९३॥

दान, उपहार आदि मायाले दिएको धनमा सावाँब्याज दुवै लिइन्न, लिन हुँदैन । सहमति अनुसार निश्चित अवधिका लागि ब्याज लेनदेन नहुने गरी भएको लेनदेनको कारोबारमा सो अवधि सकिएपछि ब्याज लिन सकिन्छ ।



## बार्धुष्य ब्याज

एष वृद्धिविधिः प्रोक्तः प्रवृद्धस्येह धर्मतः ।
वृद्धिस्तु योक्ता धान्यानां वार्धुष्यं तदुदाहृतम् ॥९४॥

प्रेमपूर्वक दिइएको वस्तुको यो ब्याज-व्यवस्था हो (माथि बताइएका कायिका आदि पनि अपनाउन सकिन्छ) । ब्याजकारूपमा अनाज लिनुलाई 'बार्धुष्य' भनिन्छ ।

## ब्याजका रूपमा अनाजको प्रयोग

आपदं निस्तरेद्वैश्यः कामं बार्धुषकर्मणा ।
आपत्स्वपि हि कष्टासु ब्राह्मणस्य न बार्धुषम् ॥९५॥

ब्याजकारूपमा अनाज दिने काम गरेर वैश्य आर्थिक दुर्गतिबाट पार पाउन सक्दछ । तर, जतिसुकै आपद् पर्दापनि ब्राह्मणले ब्याजकोरूपमा अन्न दिएर कसैसँग ऋण नलिनू ।

## ब्राह्मण र ब्याज

ब्राह्मणस्य तु यद्देयं सान्वयस्य न चास्ति सः ।

सपिण्डेभ्योऽस्य निवपेत् तदभावेऽस्य बन्धुषु ॥९६॥

ब्राह्मणसँग न ऋण दिन धन हुन्छ न ऋण लिनुपर्ने अवस्था नै उसलाई पर्दछ । अभाव हुँदा उसले आफैँलाई आफ्ना सपिण्डी दाजुभाइ र ती नहुँदा बन्धुजनका समीपमा धितो राखी काम चलाउनू ।

## ब्राह्मण र ऋण चुक्ता

यदा च न सकुल्याः स्युर्नच सम्बन्धिबान्धवाः ।
तदा दद्यात् स्वजातिभ्यस्तेष्वसत्स्वप्सु निक्षिपेत् ॥९७॥

यसरी आफैंलाई धितो राखी ऋण लिएका ब्राह्मणले आफूले लिएको ऋण तिर्न खोज्दा उक्त कुलमा कोही जीवित छैनन् वा ऋण फिर्ता लिन मान्दैनन् भने तिनका सजातीय बन्धुबान्धवलाई ऋण तिर्नू । ती पनि नहुँदा पानीमा फ्याँक्नू ।

## ब्याज तिर्नु कर्तव्य हो

गृहीत्वोपगतं दद्यादृणिकायोदयं धनी ।
अदद्याच्यमानस्तु शेषहानिमवाप्नुयात् ॥९८॥

धनीसँग ऋण लिएपछि उसलाई ब्याज अवश्य दिनू । धनीले माग्दा साँवाब्याज दिँदैन भने उसले विश्वास र आफूसँग भएको अरु धन पनि गुमाउँदछ ।



## तमसुक र भर्पाई

लेख्यं दद्यादृणे शुद्धे तदभावे प्रतिश्रवम् ।
धनिकर्णिकयोरेवं विशुद्धिः स्यात् परस्परम् ॥९९॥

ऋण तिरेपछि साहुले तमसुक ऋणीलाई फिर्ता दिनू । तमसुक नदिए वा दिन सक्ने अवस्था नभए प्रमाणका रुपमा ऋण तिरेको कागत (भर्पाई) गरिदिनू । साहु र ऋणीका बीचको व्यवहारलाई यस्ता कागजले शुद्धता (प्रामाणिकता) दिन्छ ।

## लेनदेनका प्रमाण

विश्रम्भहेतू द्वावत्र प्रतिभूराधिरेव च ।

लिखितं साक्षिणश्च द्वे प्रमाणे व्यक्तिकारणे ॥१००॥

ऋणको लेनदेनमा विश्वासका कारण दुई वटा हुन्छन्-(१) जमानी र (२) धितो । यसैगरी व्यवहारमा लिखत (तमसुक) र साछी गरी दुई वटा प्रमाण हुन्छन् ।

## जमानीका आधार

उपस्थानाय दानाय प्रत्ययाय तथैव च ।
त्रिविधः प्रतिभूर्दृष्टस्त्रिष्वेवार्थेषु सूरिभिः ॥१०१॥

विद्वान अर्थशास्त्रीहरूले ऋणीको विश्वसनीयता, ऋणीले ऋण नतिरे म तिर्दछु भन्ने प्रतिवद्धता र धितो गरी तीन कुरालाई जमानी हुन चाहिने आधारभूत कुरा भनी बताएका छन् ।



## जमानी बस्नेको दायित्व

ऋणिष्वप्रतिकुर्वत्सु प्रत्यये वा विवादिते ।
प्रतिभूस्तदृणं दद्यादनुपस्थापयंस्तथा ॥१०२॥

धितो नराखी लिइएको ऋण ऋणीले तिर्दैन वा तिर्न खोज्दैन भने जमानीले त्यो ऋण सावाँब्याज समेत तिर्नुपर्दछ ।

## धेरै जना जमानी र दायित्व

बहवः स्युः प्रतिभुवो दद्युस्तेऽर्थं यथाकृतम् ।
अर्थेऽविशेषिते त्वेषु धनिनश्छन्दतः क्रिया ॥१०३॥

धेरै जमानी बसेका छन् भने आफूले कबूल गरे अनुसार वा दामासाहीले ऋणको सावाँब्याज तिर्नुपर्दछ ।

## विशेष ब्याजदर

यमर्थं प्रतिभूर्दद्याद्धनिकेनोपपीडितः ।
ऋणिकस्तं प्रतिभुवे द्विगुणं प्रतिदापयेत् ॥१०४॥



धनी स्वयं समस्याग्रस्त हुँदाहुँदै दिएको ऋण रकममा त्यती नै बराबरको ब्याज रकम हाली ऋणीले धनीलाई बुझाउनु पर्दछ ।

## धितोको परिभाषा र किसिम

अधिक्रियत इत्याधिः स तु ज्ञेयो द्विलक्षणः ।
कृतकालोपनेयश्च यावद्देयोद्यतस्तथा ॥१०५॥

ऋणको सावाँब्याज नतिरे अधिकारपूर्वक लिन सकिने गरी ऋणीले साहूसमक्ष राखेको चलअचल सम्पत्तिलाई धितो भनिन्छ । यो दुई थरी हुन्छ- (१) तोकिएको

समय भित्र निफन्न सकिने र (२) इच्छा वा सहमती अनुसार अनिश्चित कालपछि निफन्न सकिने ।

स पुनर्द्विविधः प्रोक्तो गोप्यो भोग्यस्तथैव च ।
प्रतिदानं तथैवास्य लाभहानिर्विपर्यये ॥१०६॥

उपयोगका दृष्टिले धितो फेरी दुई प्रकारको हुन्छ । गोप्य (सुन, चाँदी आदि) र भोग्य (जग्गा, घर आदि) । यी दुई (गोप्य र भोग्य) नै यसका लक्षण हुन् । यो सुल्टो हुँदा फाइदा र उल्टो हुँदा (गोप्य राख्नुपर्नेलाई भोग गर्दा र भोग गर्नुपर्नेलाई गोप्य राख्दा) हानी हुन्छ ।

## सावाँ भुक्तानी



प्रमादाद्धनिनस्तद्वदाधौ विकृतमागते ।
विनष्टे मूलनाशः स्याद्दैवराजकृतादृते ॥१०७॥

दैवदोष (चोरी, आगलागी, थोत्रिनु आदि) वा राजदोष (सरकारीकरण) हुँदा पनि ऋणको सावाँ तिर्नु पर्दछ । बिना, प्रमाद (असाबधानीले) ले धनीले राखेको ऋणीको धितो नाश हुँदा ऋणको सावाँ पनि नाश हुन्छ । विकृत हुँदा पनि यस्तै हुन्छ ।

## धितो नाश हुँदाका नियम

रक्ष्यमाणोऽपि यत्राधिः कालेनेयादसारताम् ।
तत्राधिरन्योऽधिकर्तव्यो देयं वा धनिने धनम् ॥१०८॥

जोगाएर राख्न खोज्दाखोज्दै पनि समय बितेपछि कहिलेकाहीँ धितोको नाश हुन सक्दछ । जस्तैः पशुधितोमा पशु मर्नु । यसबेला कि त साहूको ऋण तिर्नुपर्दछ कि अर्को धितो राख्नु पर्दछ ।

## ऋण उठाइ दिने काम राजाको हो

ऋणिकः सधनो यस्तु दौरात्म्यान्न प्रयच्छति ।
राज्ञा दापयितव्यः स्याद् गृहीत्वांशं तु विंशकम् ॥१०९॥

ऋणी धनी र समर्थ भएर पनि दुर्विचारले ऋणीले ऋण तिर्दैन वा तिर्न आनाकानी गर्दछ भने राजाले बीस भाग लिई त्यस्तो ऋण उठाई धनीलाई दिनू ।



## असमर्थतामा ऋण असुली

अथ शक्तिविहीनः स्यादृणी कालविपर्ययात् ।
शक्त्यपेक्षमृणं दाप्यः काले काले यथोदयम् ॥११०॥

कालको मार (दैवी विपत्ती आदि) परी कहिलेकाहीँ ऋणी शक्तिहीन हुन सक्दछ । यस्तो अवस्थामा उसको सामर्थ्य अनुसारको रकम तत्काल लिई बाँकी रकम अलिअलि गरेर लिने शर्तमा उसको धितो उसलाई फिर्ता दिनु पर्दछ ।

नश्येद् द्रव्यपरीमाणं कालेनेहर्णिकस्य चेत् ।
जातिसंज्ञाधिवासानामागमो लेख्यतः स्मृतः ॥१११॥

ऋणी ऋण तिर्न सक्दैन र उसको श्रीसम्पत्ति पनि केही छैन भने अदालतले जाति, नाम, ठेगाना आदि सबै लेखी “ऋणीले वा उसका वंशजले सकेका बेलामा साहूको ऋणको सावाँब्याज तिर्नू” भन्ने आदेश जारी गर्नू ।

## कबुलियतनामा

लेख्यन्तु द्विविधं ज्ञेयं स्वहस्तान्यकृतन्तथा ।
असाक्षिकं साक्षिमच्च सिद्धिर्देशस्थितेस्तयोः ॥११२॥

ऋणीद्वारा समर्थ हुँदा साहूको ऋण तिर्न गरिने कबुलियनामा (क) ऋणीको आफ्नै हातले लेखी दस्तखत गरेको र (ख) अरुले लेखेकोमा दस्तखत गरेको गरी दुई थरी हुन्छ । देश, परिस्थिति हेरी कबुलियतनामाका फेरी दुई भेद हुन्छन् : (क) साछी भएको र (ख) साछी नभएको ।



## प्रमाणित कागज

देशाचाराविरुद्धं यद् व्यक्ताधिकृतलक्षणम् ।
तत् प्रमाणं स्मृतं लेख्यमविप्लुतक्रमाक्षरम् ॥११३॥

देशको प्रचलित कानुनको विरुद्ध नहुने गरी, नियमानुसार, क्रमैले, उल्टोपुल्टो नपारी, स्पष्टसँग लेखिएको कागजलाई प्रमाणित कागज मानिन्छ ।

## अप्रमाणित कागज

**मत्ताभियुक्तस्त्रीबालबलात्कारकृतश्च यत् ।**
**तदप्रमाणं करणं भीतोपधिकृतन्तथा ॥११४॥**

मादक पदार्थ पिएको वा खाएको, अभियोग लागेको, स्त्री र बालकबाट लेखिएको तथा बलपूर्वक तर्साएर वा झुक्याएर लेखिएको कागजात प्रमाण हुँदैन ।

## लिखित प्रमाण अमान्य हुने अवस्था

**मृताः स्युः साक्षिणो यत्र धनिकर्णिकलेखकाः ।**
**तदप्यपार्थं लिखितमृते त्वाधेः स्थिराश्रयात् ॥११५॥**



धितो राखिएको छैन, विश्वासमा लेनदेन भएको छ तर कागज (लिखत) गरिएको छ भने त्यस्तो अवस्थामा साक्षी, धनी तथा ऋणीको मृत्यु भएपछिको सो लिखित प्रमाण स्वीकार्य हुँदैन, स्वतः निष्क्रिय हुन्छ ।

## धितोको उपभोग

**आधिर्यो द्विविधः प्रोक्तः स्थावरो जङ्गमस्तथा ।**
**सिद्धिरस्योभयस्यापि भोगो यद्यस्ति नान्यथा ॥११६॥**

धितो दुई प्रकारको हुन्छ-अचल र चल । वास्तविकरुपमा यी दुवै थरीको उपभोग (भोगचलन) ऋणदाता गर्दछ भने मात्र त्यो धितो (बन्धक) हुन्छ नत्र हुँदैन ।

## प्रमाणिक कागज

दर्शितं प्रतिकालं यच्छ्रावितं स्रावितं च यत् ।
लेख्यं सिद्ध्यति सर्वत्र मृतेष्वपि हि साक्षिषु ॥११७॥

बेलाबखतमा अरु मानिसहरूलाई देखाइने गरिएको वा ऋणीलाई बताइ रहिएको कागज साक्षीहरु मरेर गए पनि प्रामाणिक हुन्छ ।

## साछी मात्र प्रमाण नहुने अवस्था

अश्रुतार्थमदृष्टार्थं व्यवहारार्थमेव च ।

न लेख्यं सिद्धिमाप्नोति जीवत्स्वपि हि साक्षिषु ॥११८॥

जहाँ ऋणीका उमेर पुगेका पुत्र वा उत्तराधिकारीहरुले बाबुले गरेको कागज देखेका र सुनेका पनि छैनन् त्यहाँ जीवित साक्षीहरुबाट मात्र लेनदेनको कुरा प्रमाणित हुन सक्दैन ।

## लिखत नवीकरण आदि गर्न समय दिनू

लेख्ये देशान्तरन्यस्ते दग्धे दुर्लिखिते हृते ।
सतस्तत्कालकरणमसतोऽदृष्टदर्शनम् ॥११९॥

लिखत अर्कै देशमा भए, जले, अस्पष्ट भए, गले वा पुरानो भई पुनर्स्थापित गर्नु परे सो गर्न तत्काल नसक्ने भए पूरा समय दिनू । नष्ट भए देख्नेलाई न्यायालयमा उपस्थित गराउन समय दिनु पर्दछ ।

## लिखत प्रमाणीकरण

यस्मिन् स्यात् संशयो लेख्ये भूताभूतकृते क्वचित् ।
तत् स्वहस्तक्रियाचिह्नप्राप्तियुक्तिभिरुद्धरेत् ॥१२०॥

कुनै लिखतमा शङ्का भए आफ्नो हस्तचिह्न (दस्तखत), साछी, लिपी, जुक्ति र प्रमाणबाट तथा ऋणदातासँग कसरी भेटियो भन्ने प्रश्नगरी त्यसबाट पनि शङ्का हटाउनू ।



लेख्यं यच्चान्यनामाङ्कं हेत्वन्तरकृतं भवेत् ।
विप्रत्यये परीक्ष्यं तत् सम्बन्धागमहेतुभिः ॥१२१॥

कारणवश लिखत अर्को नामको भई विश्वास गर्न नसकिए सम्बन्ध (ऋण लिनुदिनुको प्रयोजन), आगम (जे प्रयोजन बताइन्छ ऋण नलिएको भनिए त्यो प्रयोजनमा खर्च भएको रकमको श्रोत) र कारण (लिएको अस्वीकार गर्नुको कारण) लाई लिई परीक्षा गर्नू ।

लिखितं लिखितेनैव साक्षिमत् साक्षिभिर्हरेत् ।
साक्षिभ्यो लिखितं श्रेयो लिखितेन तु साक्षिणः ॥१२२॥

लिखतबाट ऋण दिएको भए सोहीबाट र साछी राखिएको भए साछीबाट शङ्का हटाउनू । साछीभन्दा लिखत श्रेष्ठ हुन्छ, लिखतले साछी पनि श्रेष्ठ हुन पुग्दछ ।

## लिखत पुनः बनाउनु पर्ने अवस्था

छिन्नभिन्नहृतोन्मृष्टनष्टदुर्लिखितेषु च ।
लेख्यमन्यद्धि कर्तव्यमेष लेख्यविधिः स्मृतः ॥१२३॥

लिखत च्यातिए, प्वाल परे, चोरिए, दोब्रिए, नभेटिए वा नबुझिए, अर्को लिखत बनाउनू । यो शास्त्रीय लेख्यविधि हो ।

## साछी



सन्दिग्धेषु तु कार्येषु द्वयोर्विवदमानयोः ।
दृष्टश्रुतानुभूतत्वात् साक्षिभ्यो व्यक्तिदर्शनम् ॥१२४॥

वादी र प्रतिवादीका बीचको कार्यमा शङ्का हुँदा यो कार्य देख्ने, सुन्ने र अनुभव गर्ने साछीहरुले सत्यतथ्य प्रकाश गर्नु पर्दछ ।

## साछीको परिभाषा

समक्षदर्शनात् साक्षी विज्ञेयः श्रोत्रचक्षुषोः ।
श्रोत्रस्य यत् परो ब्रूते चक्षुषः कायकर्म यत् ॥१२५॥

दुई पक्ष बीच भएको सहमतीलाई कान र आँखाले जसले अनुभव गर्दछ त्यो साछी हो । लोकको बोलेको कानले सुनिन्छ र सहमती गर्नेलाई आँखाले देखिन्छ ।

## साछीका प्रकार

एकादशविधः साक्षी स तु दृष्टो मनीषिभिः ।
कृतः पञ्चविधस्तत्र षड्विधोऽकृत उच्यते ॥१२६॥

विद्वानहरुले साछीका एघार थरी भेद शास्त्रमा देखेका छन् । तीमध्ये पाँच थरीलाई ‘कृत’ (मनोनित) र छ थरीलाई ‘अकृत’ भनिन्छ ।

लेखितः स्मारितश्चैव यदृच्छाभिज्ञ एव च ।

गूढश्चोत्तरसाक्षी च साक्षी पञ्चविधः स्मृतः ॥१२७॥

लिखित (लिखतमा हस्ताक्षर गरेर साछी बस्ने), स्मारित (आफ्ना कानले सुनेका कुरा बताउने), यदृच्छाभिज्ञ (लेनदेनका समयमा एक्कासी आइपुगी सबै कुराको जानकारी राख्ने), गूढ (लुकेर सबै कुरा हेर्ने वा सुन्ने) र उत्तरसाक्षी (त्यो कुरा मेरा कानमा छुस्स परेको थियो भन्ने) : यी पाँच प्रकारका कृत साक्षी हुन् ।

## साछी राख्न अयोग्य व्यक्ति

अकृतः षड्विधो नित्यः सूरिभिः परिकीर्तितः ।
ग्रामश्च प्राड्विवाकश्च राजा च व्यवहारिणाम् ॥१२८॥
कार्येष्वधिकृतो यः स्यादर्थिना प्रहितश्च यः ।

**कुलं कुलविवादेषु भवेयुस्तेऽपि साक्षिणः ॥१२९॥**

अकृत साक्षीका छ प्रकारहरु हुन् : (१) ग्राम (गाउँले), (२) प्राड्विवाक (धर्माधिकारी वा वकिल वा न्यायाधीश), (३) राजकर्मचारी, (४) कार्य विशेषका लागि नियुक्त गरिएको अथवा बोलाइएको व्यक्ति, (५) चूपचाप सुनिरहन वा हेरिरहन बाध्य परिवारको सदस्य र (६) कुलको झगडाको कुलको सदस्य । यिनलाई साछी बनाउन सकिन्न ।

## साछी हुन योग्य व्यक्ति र साछीको सङ्ख्या

**कुलीना ऋजवः शुद्धा जन्मतः कर्मतोऽर्थतः ।**
**त्र्यवराः साक्षिणोऽनिन्द्याः शुचयः सुबुद्धयः ॥१३०॥**



जन्म-कर्म र अर्थका विषयमा कुलीन, सरल, शुद्ध आचरणका, अनिन्दित र शुद्ध बुद्धि एवं विचार भएका बढीमा तीन जना मानिस साछी हुन सक्दछन् ।

## साछीसम्बन्धी अन्य नियम

**ब्राह्मणाः क्षत्रियाः वैश्याः शूद्रा ये चाप्यनिन्दिताः ।**
**प्रतिवर्णं भवेयुस्ते सर्वे सर्वेषु वा पुनः ॥१३१॥**

अनिन्दित ब्राह्मण, क्षत्रीय, वैश्य र शुद्र आ-आफ्नो वर्णका साक्षी हुन सक्दछन् । आफन्त सबै सबैका साक्षी हुन सक्दछन् ।

श्रेणीषु श्रेणीपुरुषाः स्वेषु वर्गेषु वर्गिणः ।
बहिर्वासिषु बाह्याश्च स्त्रियः स्त्रीषु च साक्षिणः ॥१३२॥

श्रेणी (ब्यापारी आदिको समूह) मा श्रेणीका, वर्ग (पेसाकर्मी) मा वर्गका, बाहिरी क्षेत्रमा बाहिरी व्यक्ति र स्त्रीहरुमा स्त्रीहरुनै साछी हुन्छन् ।

अयोग्य साछी

श्रेण्यादिषु च सर्वेषु कश्चिच्चेद् द्वेष्यतामियात् ।
तेभ्य एव न साक्षी स्याद् द्वेष्टारः सर्व एव ते ॥१३३॥

श्रेणीमा यदि कोही द्वेष गरेर बोल्दछ वा पूर्वाग्रही छ भने त ती मध्येबाट कसैलाई पनि साछी लिन हुँदैन किनकि यी सबै साछी-धर्म निभाउन सक्दैनन् ।



असाक्ष्यपि हि शास्त्रेषु  दृष्टः पञ्चविधो बुधैः ।
वचनाद्दोषतो भेदात् स्वयमुक्तेर्मृतान्तरात् ॥१३४॥

पण्डितहरु शास्त्रमा पाँच थरीका असाछी (साछी बन्न अयोग्य) लाई जान्दछन् ती हुन्-बचन (कुरा फेर्ने), दोष (शारीरिक वा चारित्रिक खोट भएको), भेद (व्यक्ति नै पिच्छे बेग्लाबेग्लै कुरा गरेर जुधाउने), स्वयम् उक्ति (आफैं म साछी हुँ भन्ने) र मृत व्यक्ति ।

श्रोत्रियाद्या वचनतः स्तेनाद्या दोषदर्शनात् ।
भेदाद् विप्रतिपत्तिः स्याद् विवादे यत्र साक्षिणः ॥१३५॥

श्रोत्रिय आदि वचनले गर्दा र चोर आदि दोषले गर्दा साछी हुन सक्दैनन् । राखिए विवादमा उल्टो बदनामी हुन थाल्दछ ।

**अन्य साछी नमानिने व्यक्ति र कारण**

**स्वयमुक्तेरनिर्दिष्टः स्वयमेवैत्य यो वदेत् ।**
**मृतान्तरोऽर्थिनि प्रेते मुमूर्षुश्रावितादृते ॥१३६॥**

नियुक्त नगरिएको स्वघोषित साछी उपस्थित भई "मर्ने बेलामा फलानाले यसो भनेको थियो" भन्दछ भने त्यो पनि असाछी हुन्छ ।



**श्रोत्रियास्तापसा वृद्धा ये च प्रव्रजिता नराः ।**
**असाक्षिणस्ते बचनान्नात्र हेतुरुदाहृतः ॥१३७॥**

श्रोत्रिय (वेद पढेको र पढ्ने ब्राह्मण), तपस्वी, वयोवृद्ध र सन्यासी यी अरु कारणले नभई वचन (विरक्तिएका) का कारणले गर्दा साछी हुन सक्दैनन् भनिएको छ ।

**स्तेनाः साहसिकाश्चण्डाः कितवा बधकाश्च ये ।**
**असाक्षिणस्ते दृष्टत्वात्तेषु सत्यं न विद्यते ॥१३८॥**

चोर, डाँकु, निष्ठुर, मूर्ख र घातक (जीव हत्यारा) : यी व्यक्तिहरु दुष्टताका कारण साक्षी हुन सक्दैनन् किनकि यिनमा सत्यता रहँदैन, अवसर हेरी धोका दिन्छन् ।

राज्ञा परिगृहीतेषु साक्षिष्वेकार्थनिश्चये ।
वचनं यत्र भिद्येत ते स्युर्भेदादसाक्षिणः ॥१३९॥

केही कुरा निश्चित गर्नका लागि स्वीकृत गरिएका साछीहरुमा (अदालत भित्र र बाहिर) बोली फरक परे ती व्यक्ति साछी हुन सक्दैनन् । यहाँ बोली फरक पर्नु (अस्थिर स्वभाव) नै साछी हुन नसक्नुको प्रमुख कारण बताइएको छ ।

स्वयमुक्तेरनुद्दिष्टः स्वयमेवैत्य यो वदेत् ।
सूचीत्युक्तः स शास्त्रेषु न स साक्षित्वमर्हति ॥१४०॥

घटनास्थलमा नहुने कुनै व्यक्ति आफैं आएर "म पनि साछी बस्न योग्य छ वा चाहन्छु" भन्दछ भने पनि उ साछी हुन सक्दैन । यस्तो साछीलाई धर्मविरुद्धको साछी भनी बताइएको छ ।



योऽर्थः श्रावयितव्यः स्यात् तस्मिन्नसति चार्थिनि ।
क्व तद् वदति साक्षित्वमित्यसाक्षी मृतान्तरः ॥१४१॥

बयानका बेलामा जे कुरा साछीले अदालतमा भन्नु पर्दछ त्यो मृतक साछीले कसरी भन्नु ? साछी बितेपछि उसको आडमा फलाना साछीले मर्नुभन्दा अघि यसो भनेको थियो भन्ने साछी 'मृतान्तर साछी' का नामले प्रसिद्ध छ । वास्तवमा त्यो साछी नै होइन ।

## साछीहरूमध्येमा प्राथमिकता

**द्वयोर्विवदतोरर्थे द्वयोः सत्सु च साक्षिषु ।**
**पूर्वपक्षो भवेद्यस्य भवेयुस्तस्य साक्षिणः ॥१४२॥**

कुनै विषयमा विवाद भई वादी र प्रतिवादी दुवैका साछी हुँदा, पहिलो पक्ष (वादी) का साछीलाई नै लिनु पर्दछ (प्राथमिकता दिनु पर्दछ) ।

**आधर्यं पूर्वपक्षस्य यस्मिन्नर्थवशाद्भवेत् ।**
**विवादे साक्षिणस्तत्र प्रष्टव्याः प्रतिवादिनः ॥१४३॥**

जहाँ वादी आफ्ना साछी-दोषका कारण हीन (कमजोर) हुन्छ त्यहाँ प्रतिवादीका साछीलाई महत्व दिई प्रष्ट हुनु पर्दछ ।



## साछीसँग गोप्य कुरा नगर्नू

**न परेण समुद्दिष्टमुपेयात् साक्षिणं रहः ।**
**भेदयेत्तं न चान्येन हीयेतैवं समाचरन् ॥१४४॥**

विपक्षीका साछीहरुसँग गोप्य वार्ता नगर्नू । एउटाको साछीलाई अर्को पक्षले नभाँड्नू । यसो गरे हीनपक्ष (आफ्नो पक्ष कमजोर) हुन जान्छ ।

## साछीको मृत्युमा वैकल्पिक व्यवस्था

साक्ष्युद्दिष्टो यदि प्रेयाद् गच्छेद्वापि दिगन्तरम् ।
तच्छ्रोतारः प्रमाणं स्युः प्रमाणं ह्युत्तरक्रिया ॥१४५॥

भनिएको साछी मरेमा वा विदेश गएमा सो अघि उसका कुरा सुन्ने निकटस्थ व्यक्तिलाई साछीका रुपमा प्रमाणित गर्नू पर्दछ । यस्ता साछीलाई उत्तर-साछी भनिन्छ ।

## लिखत

सुदीर्घेणापि कालेन लिखितः सिद्धिमाप्नुयात् ।

आत्मनैव लिखेज्जानन्नजानानस्तु लेखयेत् ॥१४६॥

धेरै अघि गरिएको लेनदेन पनि लिखत प्रमाणबाट पुष्टी हुन्छ । विधि थाहा छ भने आफैंले र विधि थाहा नभए अरु कोही जान्ने व्यक्तिबाट लेनदेनको बेलामा लिखत लेखाउनु पर्दछ ।

## साछी मान्य हुने अवधि

आष्टमाद् वत्सरात् सिद्धिः स्मारितस्येह साक्षिणः ।
आपञ्चमात् तथा सिद्धिर्यदृच्छोपगतस्य च ॥१४७॥

साक्षी भनी स्वीकृत र विवादको जानकार व्यक्ति आठ वर्षसम्म र कार्यस्थलमा स्वयं उपस्थित भई आफैं साक्षीकारुपमा स्वीकृत व्यक्ति भए पाँच वर्षसम्म साछी भनी प्रमाणित हुने गर्दछ ।

**आतृतीयात्तथा वर्षात् सिद्धिर्गूढस्य साक्षिणः ।**
**आवत्सरात्तथा सिद्धिं वदन्त्युत्तरसाक्षिणः ॥१४८॥**

ऋण आदिको गोप्य लेनदेनमा साछीका स्वीकृत प्रमाण तीन वर्षसम्म र उत्तरसाछीको प्रमाण एक वर्षसम्म प्रमाणित रहन्छ ।

**अथवा कालनियमो न दृष्टः साक्षिणं प्रति ।**
**स्मृत्यपेक्षं हि साक्षित्वमाहुः शास्त्रविदो जनाः ॥१४९॥**



साछीका बारेमा समय नहेर्न पनि सकिन्छ । विवादमा स्मृतिकाल देखिनै साक्ष्यको प्रामाणिकता छ भनेर पनि (केही) शास्त्रज्ञ बताउँदछन् ।

**साछीका गुण**

**यस्य नोपहता पुंसः स्मृतिः श्रोत्रञ्च नित्यशः ।**
**सुदीर्घेणापि कालेन स साक्षी साक्ष्यमर्हति ॥१५०॥**

जुन साछीको बुद्धि, सम्झना शक्ति र सुन्ने शक्ति नासिएको छैन त्यस्तो व्यक्ति : घटना जति वर्ष पहिले घटेको भएपनि वा साछी जति वर्षको भएपनि उ साछी बस्न उपयुक्त मानिन्छ ।

## स्वतः अपराधी हुने अवस्था

असाक्षिप्रत्ययास्त्वन्ये षड् विवादाः प्रकीर्त्तिताः ।
लक्षणान्येव साक्षित्वं तेषामाहुर्मनीषिणः ॥१५१॥

निम्न छ प्रकारका घटनामा दसीप्रमाण सहीत समातिएका व्यक्ति स्वतः अपराधी हुन्छन् । साछीको आवश्यकता हुँदैन ।

उल्काहस्तोऽग्निदो ज्ञेयः शस्त्रपाणिस्तु घातकः ।
केशाकेशिगृहीतस्तु युगपत् पारदारिकः ॥१५२॥
कुद्दालपाणिर्विज्ञेयः सेतुभेत्ता समीपगः ।

तथा कुठारपाणिश्च बनच्छेत्ता प्रकीर्तितः ॥१५३॥

हातमा : मसाल भए आगो लगाउने, हतियार भए मार्ने, लामा कपाल भए परायास्त्री गमन गर्ने, कोदालो भए बाँध भत्काउने, बञ्चरो भए बन मास्ने : यी प्रत्यक्ष चिह्न (दसीप्रमाण) ले अपराधीमा स्वीकृत हुन्छन् र यहाँ साछीको आवश्यकता हुँदैन ।

## साछी नचाहिने अपराधमा अनुसन्धान

अभ्यग्रचिह्नो विज्ञेयो दण्डपारुष्यकृन्नरः ।
असाक्षिप्रत्यया ह्येते पारुष्ये तु परीक्षणम् ॥१५४॥

साछी नहुने उल्लेखित अपराधमा, अपराधीको अनुहारको हाउभाउ, उसका गतिविधि आदिल उ अपराधी भएको देखिन्छ तर पनि निश्चित हुन अलिबढी सोधखोज अवश्य गर्नु पर्दछ ।

## गलत दोषारोपणको परीक्षा

**कश्चित्कृत्वात्मनश्चिह्नं द्वेषात् परमभिद्रवेत् ।**
**हुत्वर्थगतिसामर्थ्यैस्तत्र युक्तं परीक्षणम् ॥१५५॥**

कसैले आफैं आफ्नो शरीरमा चिह्न बनाई अरुलाई दोषारोपणको प्रयत्न गर्दछ भने त्यहाँ कारण, अर्थ, गति र सामर्थ्य मार्फत जुक्ति लगाई परीक्षा गर्नू ।



## थप अयोग्य साछी

**नार्थसम्बन्धिनो नाप्ता न सहाया न वैरिणः ।**
**न दृष्टदोषाः प्रष्टव्याः साक्षिण प्रतिदूषिताः ॥१५६॥**

जोसँग आर्थिक लेनदेनको हिसाब छ (साझेदार), जो आत्मीय छन्, जो जसको सहायक छ, जो शत्रु छ र जो व्यवहारमा झूटो भनी प्रमाणित भएको छ ती सबैलाई सत्य थाहा पाउनका लागि साछीका रुपमा लिन सकिँदैन ।

**दासनैकृतिकाश्रद्धवृद्धस्त्री बाल चाक्रिकाः ।**
**मत्तोन्मत्तप्रमत्तार्तकितव ग्रामयाजकाः ॥१५७॥**

दास, छलकपटको व्यवहार गर्ने, श्रद्धाको अयोग्य, वृद्ध, स्त्री, बालक, कुम्हाले वा तेली (पाङ्ग्रा घुमाएर पेट पाल्ने), मत्त (नशाबाज), उन्मत्त (सुस्त मनस्थितिको), प्रमत्त (अल्छी), आर्त्त (आपदमा परेको), जुवाडे, ग्रामयाजक (जसले बोलाए पनि जजमानी गर्ने),...।

महापथिकसामुद्रवणिक् प्रव्रजितातुराः ।
लुब्धैकश्रोत्रियाचारहीनक्लीबकुशीलवाः ॥१५८॥

महापथिक (विदेशतिर डुलिरहने), सामुद्रिक (समुद्री जीव वा वस्तुबाट पेट पाल्ने), व्यापारी, सन्यासी, रोगी, लोभी, एकलकाटे, श्रोत्रीय (वेदपढेको ब्राह्मण), आचारहीन, नपुंसक, नाच-गान-बजानबाट जीविका चलाउने,...।



नास्तिकव्रात्यदाराग्नित्यागिनोऽयाज्ययाज्यकाः ।
एकस्थालीसहायारिचरज्ञातिसनाभयः ॥१५९॥

नास्तिक, व्रात्य (बेलैमा संस्कार नगरिएको), पत्नीत्यागी, अग्नित्यागी, अयाज्ययाजक (नहुनेको यज्ञ गराउने), एउटै पात्रमा संयुक्त भोजन गर्ने, मित्रको शत्रु, चर (गुप्तचर), ज्ञाति (नातेदार), सहोदर,...।

प्राग्दृष्टदोषशैलूषविषजीव्याहितुण्डिकाः ।
गरदाग्निदकीनाशशूद्रापुत्रोपपातकाः ॥१६०॥

जसको दोष पहिले नै थाहा छ, नट (नाटकमा काम गर्ने), विषको कारोवार गर्ने, सर्पआदि समाउने पेसा भएको, विष खुवाउने, आगो लगाउने, पशुहिंसा गरी पेट

पाल्ने, शूद्राको पुत्र, उपपापी,...।

क्लान्तसाहसिकश्रान्तनिर्धूतान्त्यावसायिनः ।
भिन्नवृत्त्यसमावृत्तभल्लतैलिकमूलकाः ॥१६१॥

क्लान्त (निराश), साहसिक (बलपूर्वक कुकृत्य गर्ने), श्रान्त (थकित), कुल आदिबाट निष्काशित(निर्धूत), चण्डाल, आफ्नो परम्परागत पेसा छोडी अर्काको पेसा गर्ने, असमावृत्त (आफ्नो स्तर नसुहाउने उच्च वा नीच पेसा गर्ने, भल्ल (जाति विशेष), तेली, विद्या-चोर,...।

भूताविष्टनृपद्विष्टवर्षनक्षत्रसूचकाः ।
अघशंस्यात्मविक्रेतृहीनाङ्गभगवृत्तयः ॥१६२॥



भूतप्रेत लागेको (वा तन्त्रमन्त्र गर्ने), राजद्रोही, ज्यौतिष, ताइ न तुइका कुरा गर्ने, आत्मविक्रयी (दास), कम अङ्ग हुने, आफू बाँच्न स्वास्नी-छोरी आदिलाई वेश्या बनाउने,...।

कुनखी श्यावदन् श्वित्री मित्रध्रुक्छठशौण्डिकाः ।
ऐन्द्रजालिकलुब्धोग्रश्रेणीगणविरोधिनः ॥१६३॥

कुनखी (मैला नङ हुने), मद्यपान वा धूमपान आदिका कारण काला दाँत भएको, कसष्ठरोगी, मित्रद्रोही, शठ (धूर्त), मद्यविक्रयी, ईन्द्रजाली (जादूगर), लोभी, कठोर, श्रेणीविरोधी (जाति विरोधी), गणविरोधी (वर्णव्यवस्था विरोधी),..।

वधकृच्चित्रकृन्मङ्ख पतितः कूटकारकः ।
कुहकः प्रत्यवसृतस्तस्करो राजपुरुषः ॥१६४॥

ज्यानमारा, चित्रकार, देवतालाई बोकेर माग्दै हिँड्ने (मङ्ख), पतित, कुटिल, ठग, सन्यासबाट फर्कने, तस्कर, राजपुरुष (कर्मचारी),...।

मनुष्यविषशस्त्राम्बुलवणापूपवीरुधाम् ।
विक्रेता ब्राह्मणश्चैव द्विजो वार्धूषिकश्च यः ॥१६५॥

मनुष्य-विष-हतियार-पानी-नुन-मालपुवा र लहरा बेच्ने ब्राह्मण तथा ब्याज लिएर पेट पाल्ने द्विज,...।



च्युतः स्वधर्मात् कुलिकः स्तावको हीनसेविताः ।
पित्रा विवदमानश्च भेदकृच्चेत्यसाक्षिणः ॥१६६॥

आफ्नो धर्मबाट च्यूत (धर्मभ्रष्ट), शिल्पकार, स्तुतिकर्ता (भाट), हीन व्यक्तिको सेवा गर्ने, बाबुसँग विवाद गर्ने र जासुस (परिवारमा विग्रह गराउने) -यी साछी हुन सक्दैनन् (भएपनि यिनको पूरा विश्वास गर्न सकिन्न) ।

साछी हुनमा लचकता

असाक्षिणो ये निर्दिष्टा दासनैकृतिकादयः ।
कार्यगौरवमासाद्य भवेयुस्तेऽपि साक्षिणः ॥१६७॥

दास, बेइमान आदि साछी हुन सक्दैनन् त भनियो तर कामको सघनता हेरेर अरु नपाउँदा (यि जो) पनि साछी हुन सक्दछन् ।

## साछीको जाँचपडताल

साहसेषु च सर्वेषु स्तेयसङ्ग्रहणेषु च ।
पारुष्ययोश्चाप्युभयोरसाक्षी नोपपद्यते ॥१६८॥

सबै थरीका साहस (डकैती, बलजफ्ती), चोरी, सङ्ग्रहण, गालीगलौच र मारपिटमा साछीहरुको जाँचपडताल हुँदैन (असाछी भन्ने हुँदैन) ।

## अन्य अयोग्य साछी



न तत्रापि च बालः स्यान्नैको न स्त्री न कूटकृत् ।
न बान्धवो न चारातिर्ब्रूयुस्ते साक्ष्यमन्यथा ॥१६९॥

तीमध्येमा पनि कोही बालक, स्त्री, आपराधिक सोचले गर्दा आँखा जुधाउन नसक्ने, बान्धव र शत्रु भए : ती डकैती आदिको साछी हुन सक्दैनन् किनकि तिनले अन्यथा (असत्य) बोल्न सक्दछन् ।

बालोऽज्ञानदसत्यात्स्त्री पापाभ्यासात्तु कूटकृत् ।
विब्रुयाद् बान्धवः स्नेहाद्वैरनिर्यातनादरिः ॥१७०॥

अज्ञानले गर्दा बालक, असत्य बोल्ने बानी हुनाले स्त्री, पापको अभ्यासले गर्दा कूटकारी, स्नेहले अर्कोथरी बोल्ने हुनाले बान्धव तथा द्वेष भाव राख्ने हुनाले गर्दा शत्रु अन्यथा (सत्यभन्दा बाहिरका कुरा) बोल्दछन् ।

## सहमतीमा साछीको मान्यता

अथवानुमतो यः स्याद् द्वयोर्विवदमानयोः ।
असाक्षिकोऽपि साक्षित्वे प्रष्टव्यः स्यात् स संसदि ॥१७१॥

विवादमा वादी र प्रतिवादी दुवैले स्वीकार गरेको व्यक्ति साक्षीको लागि योग्य नभए पनि उसलाई अदालतमा सोधपुछ गरी साछीको मान्यता दिन सकिन्छ ।



## झूटो साछीका लक्षण

यस्त्वात्मदोषभिन्नत्वादस्वस्थ इव लक्ष्यते ।
स्थानात् स्थानान्तरं गच्छेदेकैकं चोपधावति ॥१७२॥
कासत्यनिभृतोऽकस्मादभीक्ष्णं निःश्वसित्यपि ।
भूमिं लिखति पादाभ्यां बाहु वासा धुनोति च ॥१७३॥
भिद्यते मुखवर्णोऽस्य ललाटं स्विद्यते तथा ।
शोषमागच्छतश्चोष्ठावूर्ध्वं तिर्यक् च वीक्षते ॥१७४॥
त्वरमाण इवापृष्टो बह्वबद्धञ्च भाषते ।
कूटसाक्षी स विज्ञेयस्तं पापं बिनयेद्धृशम् ॥१७५॥

मेरा गल्ती पो थाहा पाउँदछन् कि भनी डराउनु, स्थीर आसन नहुनु, एउटा एउटा व्यक्तिलाई पछ्याउनु, अरु सबै चूप लाग्दा डराउनु, छिनछिनमा लामो सास फेर्नु, औंलाले जमिनमा कोतर्न थाल्नु, त्यत्तिकै हात र लगाएका लुगा चलाइरहनु, अनुहारको रङ्ग बदलिनु, निधारमा पसिना आउनु, घाँटीमुख सुक्नु, यताउती वा माथितिर हेरी सिधा आँखा जुधाएर नहेर्नु, मतिमा चञ्चलता झल्किनु र थोरै सोद्धा धेरै जवाफ दिनु-यी झूटो साछीका लक्षण हुन् । यस्ताका बारेमा जाहेरी गर्नू ।

## दुष्ट साछी

**श्रावयित्वा तथान्येभ्यः साक्षित्वं योऽपि निह्नते ।**
**स विनेयो भृशतरं कूटसाक्ष्यधिको हि सः ॥१७६॥**



साछी बस्न मानेर पनि : उपस्थित भएर साछी बस्न असहमत हुने, अदालतमा उपस्थित हुनुपर्ने बेलामा बिनाकारण अनुपस्थित हुने र नचाहिँदा बाहना बनाउने व्यक्ति झूटो साछीभन्दा पनि खराब साछी हो । उसका बारेमा विशेषरूपमा जाहेरी हुनु पर्दछ ।

## साछीलाई खुवाइने शपथ र लिइने बयान

**आहूय साक्षिणः पृच्छेन्नियमय शपथैर्भृशम् ।**
**समस्तान् विदिताचारान् विज्ञातार्थान् पृथक् पृथक् ॥१७७॥**

साछीहरुलाई बयान लिने ठाउँमा राखी, ऊनीहरुको आचरण मतलब नगरी (राम्रो नराम्रो जस्तो भएपनि) सबैलाई किरिया ख्वाई छुट्टाछुट्टै प्रश्न घुमाइफिराइ सोध्नू ।

सत्येन शापयेद्विप्रं क्षत्त्रियं वाहनायुधैः ।
गोबीजकाञ्चनैर्वैश्यं शूद्रं सर्वैस्तु पातकैः ॥१७८॥

साछी बस्ने ब्राह्मणलाई सत्यको, क्षत्रियलाई वाहन र हतियारको, वैश्यलाई गाई-बिउ र सुनको तथा शूद्रलाई सबै खाले पाप लाग्ने श्रापको किरिया खुवाउनू ।

पुराणैर्धर्मवचनैः सत्यमाहात्म्यकीर्तनैः ।
अनृतस्यापवादैश्च भृशमुत्त्रास्य साक्षिणः ॥१७९॥

न्यायाधीशले साछीलाई पुराण आदिका सत्कथा सुनाएर सत्य र असत्यको फल बताउँदै, सत्य कुरा भन्न प्रेरित गर्नु पर्दछ ।



नग्नो मुण्डः कपालेन भिक्षार्थी क्षुत्पिपासितः ।
क्रुद्धः शत्रुगृहं गच्छेद्यः साक्ष्यमनृतं वदेत् ॥१८०॥

न्यायाधीशले रवाफिलो स्वरमा साछीलाई भन्नु कि “झूटो कुरा बोल्ने साछीले नाङ्गैमुडुल्लै, भोकतिर्खाले पीडित भई, हातमा खप्पर बोकेर रिसाहा शत्रुका घरघरमा माग्न जानु पर्नेछ ।

नगरे प्रतिरुद्धः सत् बहिर्द्वारो बुभुक्षितः ।
अमित्रान् भूयशः पश्येद्यः साक्ष्यमनृतं वदेत् ॥१८१॥

शहर भित्र जान नपाए पत्नीविहीन भई खान पाउने आशमा शहर बाहिरै बस्नु पर्नेछ । पाइलापाइलामा शत्रुको सामना (सबैबाट लज्जित र अपमानित हुनुपर्नेछ) गर्नुपर्नेछ ।

**यां रात्रिमधिविन्ना स्त्री यां चैवाक्षपराजितः ।**
**यां चातिभारतप्ताङ्गो दुर्विवक्तास्म तां वसेत् ॥१८२॥**

जस्तो पीडा पतिले सौता हाल्दा स्त्रीलाई हुन्छ, जस्तो पीडा जुवामा सर्वस्व हार्दा जुवाडेलाई हुन्छ अनि जस्तो पीडा आफ्नो क्षमताभन्दा बढीको बोझ बोक्न विवश हुँदा श्रमिकलाई हुन्छ, त्यस्तै पीडा झूटो साछीलाई हुन्छ ।

**साक्षी साक्ष्यसमुद्देशे गोकर्णशिथिलञ्चरन् ।**

**सहस्रं वारुणान् पाशानात्मनि प्रतिमुञ्चति ॥१८३॥**

जुन साछी इजलासमा उपस्थित भएर स्पष्ट र दृढतापूर्वक बोल्दैन, गाईले कान हल्लाएजसरी मुण्टो मात्र हल्लाएर बस्दछ, उसलाई मृत्युपछि हजारौं वरुण-पाश (वरुणदेवताको पासो वा डोरी) ले बाँध्दछन् ।

**तस्य वर्षशते पूर्णे पाश एकः प्रमुच्यते ।**
**एवं स बन्धनात्तस्मान्मुच्यते नियताः समाः ॥१८४॥**

हजारौं डोरीले बाँधिएपछि एउटा डोरीबाट मुक्त हुन पनि सय वर्ष लाग्दछ । यसरी उसलाई बन्धनमुक्त हुन लाखौं वर्ष लाग्दछ ।

यावतो बान्धवान् यस्मिन् हन्ति साक्ष्येऽनृतं वदन् ।
तावतः सङ्ख्यया तस्मिञ्श्रृणु सौम्यानुपूर्वशः ॥१८५॥

उसले के का लागि भूट बोल्दा कति बन्धुबान्धवलाई मारेसरहको पाप बोक्नु पर्दछ ती कुरा क्रमशः भन्दछु, सुन ।

पञ्च पश्वनृते हन्ति दश हन्ति गवानृते ।
शतमश्वानृते हन्ति सहस्रं पुरुषानृते ॥१८६॥

बाख्रा आदि पशुका विषयमा भूटो बोले पाँच (माता, पिता, पत्नी, सन्तान र आफू), गाईका विषयमा भूटो बोले दश, घोडाका विषयमा भूटो बोले सय र मानिसका विषयमा भूटो बोले हजारौं आफन्त मारेसरह पाप लाग्दछ । (यसले त्यतिलाई पिरोल्दछ) ।



हन्ति जातानजातौँश्च हिरण्यार्थेऽनृतं वदन् ।
सर्वं भूम्यनृते हन्ति मा स्म भूम्यनृतं वदीः (दः) ॥१८७॥

सुनका विषयमा भूटो बोले जन्मिसकेका र जन्मने सन्तानलाई पिरोल्दछ । जमिनका विषयमा भूटो बोले पूरै वंश सखाप हुन्छ, नबोल्नू ।

एकमेवाद्वितीयं तत्प्राहुः पावनमात्मनः ।
सत्यं स्वर्गस्य सोपानं पारावारस्य नौरिव ॥१८८॥

नदी तर्ने एकमात्र साधन डुङ्गा भएजस्तै आत्मा पवित्र पार्ने एकमात्र साधन सत्य हो । सत्यले नै स्वर्गको भोग गराउँदछ ।

अश्वमेधसहस्रं च सत्यं च तुलया धृतम् ।
अश्वमेधसहस्रात् तु सत्यमेव विशिष्यते ॥१८९॥

तराजुमा एकातिर हजार वटा अश्वमेध यज्ञलाई र अर्कोतिर सत्यलाई राखेर जोख्ने हो भने सत्यतिरकै पल्ला गह्रौं हुन्छ ।

वरं कूपशताद्वापि वरं वापीशतात्क्रतुः ।
वरं क्रतुशतात् पुत्रः सत्यं पुत्रशताद्वरम् ॥१९०॥



सयवटा कुवा (कूप–पाँच हातदेखि पचास हातसम्म फराकिलो जलाशय, कुवा, इनार) खनाउनु भन्दा एउटा वापी (ढुङ्गा आदिले सिँढी बनाइएको गहिरो कुवा, इनार वा पोखरी) खनाउनु श्रेयस्कर हुन्छ, सय वापी खनाउनुभन्दा वेदसम्मत ढङ्गले एउटा यज्ञ गर्नु श्रेयस्कर हुन्छ, यस्ता सय यज्ञ गर्नुभन्दा एउटा छोरो जन्माउनु श्रेयस्कर हुन्छ र सय जना छोराको पिता हुनुभन्दा सत्यमा अडिक रहनु श्रेयस्कर हुन्छ ।

भूर्धारयति सत्येन सत्येनोदयते रविः ।
सत्येन वायुः पवते सत्येनापः स्रवन्ति च ॥१९१॥

सत्यको बलमा नै पृथ्वीले सबै कुरा धारण गर्दछिन् (बोक्दछिन्) । सत्यकै बलमा सूर्य उदाउँदछन् । सत्यले गर्दा नै वायु बहन्छ । सत्यका कारण नै जल तलतिर बग्दछ ।

**सत्यमेव परं दानं सत्यमेव परं तपः ।**
**सत्यमेव परो धर्मो लोकानामिति नः श्रुतम् ॥१९२॥**

वेद्ले : सत्य नै सर्वोत्तम दान हो, सत्य नै सर्वोत्तम तपस्या हो र सत्य नै सर्वोत्तम धर्म हो भनेको छ ।

**सत्यं देवाः समासेन मनुष्यास्त्वनृतं स्मृताः ।**
**इहैव तस्य देवत्वं यस्य सत्ये स्थिता मतिः ॥१९३॥**

निचोडमा भन्नुपर्दा देवता सत्य हुन्, मानिस असत्य हो । यदि सत्यमा बुद्धि जान्छ भने यहीँ नै मानवलाई देवत्व प्राप्त हुन्छ ।



**सत्यं ब्रूह्यनृतं त्यक्त्वा सत्येन स्वर्गमेष्यसि ।**
**उक्त्वानृतं महाघोरं नरकं प्रतिपत्स्यते ॥१९४॥**

त्यसैले तिमी झूटलाई छाडी सत्य कुरा बोल, सत्यले नै स्वर्ग पाउँदछौ, असत्य बोले अति डरलाग्दो नरकमा पर्नु पर्दछ ।

**निरयेषु च ते शश्वज्जिह्वामुत्कृत्य दारुणाः ।**
**असिभिः शातयिष्यन्ति बलिनो यमकिङ्कराः ॥१९५॥**

असत्य बोल्नेलाई मरेपछि बलिया यमदूतले जिभ्रो काटी आरामा चिर्दछन् ।

**शूले मत्स्येनिवाक्षिप्य क्रोशन्तमपरायणम् ।**
**अवाक्छिरसमुत्क्षिप्य क्षेप्स्यन्त्यग्निहृदेषु च ॥१९६॥**

माछालाईझैं भालाले घोप्दछन् र दिक्क लाग्दोगरी कराइरहेको उसलाई त्यहाँबाट झिकी पुनः उधमुण्टो पारी अग्निकुण्डमा (र जलकुण्डमा) फाली दिन्छन् ।

**अनुभूय च दुःखास्ताश्चिरं नरकवेदनाः ।**
**इहायास्यस्यभव्यासु गृध्रकाकादियोनिषु ॥१९७॥**

नरकको त्यो अती डरलाग्दो पीडा लामोसमयसम्म भोगेपछि ती यहाँ गीद्ध, काग आदि भएर जन्मन्छन् ।



**ज्ञात्वैताननृते दोषान् ज्ञात्वा सत्ये च सद्गुणान् ।**
**सत्यं वदोद्धरात्मानं मात्मानं पीपतश्चिरम् ॥१९८॥**

सत्यका असल र असत्यका खराब गुण थाहा पाई साँचो कुरा बताऊ । आफ्नो आत्मालाई उद्धार गर्ने कि नरकमा डुबाउने भन्ने कुरा तिम्रै हातमा छ ।

**न बान्धवा न सुहृदो न धनानि महान्त्यपि ।**
**अलं तारयितुं शक्तास्तमस्युग्रे निमज्जतः ॥१९९॥**

बन्धुबान्धव, हितैषी आदि कसैले पनि तथा धन, समृद्धि आदि केही कुराले पनि घोर नरकमा डुबिरहेको त्यो (पाप) जीवलाई उद्धार गर्न सक्दैन ।

पितरस्त्ववलम्बन्ते त्वयि साक्षित्वमागते ।
तारयिष्यति किन्नवस्मानात्मानं पातयिष्यति ॥२००॥

तिमीले यहाँ के बोल्दछौ भनेर तिम्रा पितृहरु तिमीलाई हेरिरहेका छन् । हाम्रो सन्तानले हामीलाई तार्दछ कि नरकमा खसाल्दछ भनेर कुरिरहेका छन् ।

सत्यमात्मा मनुष्यस्य सर्वं सत्ये प्रतिष्ठितम् ।
सर्वथैवात्मनात्मानं श्रेयसा योजयिष्यसि ॥२०१॥

मानिसको आत्मा सत्य हुन्छ । सबै कुरा सत्यका टिकेका हुन्छन् । साँचो बोली तिमी आफ्नो आत्मालाई मोक्षसँग जोड्न सक्दछौ ।



यां रात्रिमजनिष्ठास्त्वं यां च रात्रिं मरिष्यसि ।
वृथा तदन्तरा ते स्यात् साक्ष्यं चेदन्यथा वदेः ॥२०२॥

यदि तिमी साँचो बोल्दैनौ र असत्य बोल्यौ भने त्यसपछि तिमीले अहिलेसम्म गरेका र यसपछि नमर्दासम्म गर्ने सबै सुकर्म व्यर्थ हुने छन् ।

नास्ति सत्यात् परो धर्मो नानृतात् पातकं परम् ।
साक्षिधर्मे विशेषेण सत्यमेव वदेरतः ॥२०३॥

विशेषगरी साछीधर्ममा सत्यभन्दा ठूलो धर्म र असत्यभन्दा ठूलो पाप अरु छैन । त्यसैले साँचो कुरा गर ।

**यः परार्थेऽपहरति स्वां वाचं पुरुषाधमः ।**
**आत्मार्थे किन्न कुर्यात्स पापो नरकनिर्भयः ॥२०४॥**

जो अधम मानिस अरुका लागि आफ्नो वचन प्रदूषित बनाउँदछ, त्यस्तो नरकसँग नडराउने मानिसले आफ्ना लागि कुन चाहिँ पाप गर्न बाँकी राख्ला र ? ।

**अर्था वै वाचि नियता वाङ्मूला वाचि मिश्रिताः ।**
**यो वैतां स्तेनयेद् वाचं स सर्वस्तेयकृन्नरः ॥२०५॥**

संसारका सबै गतिविधि वचनकै भरमा त चलेका हुन्छन् । जसले वचन चोर्दछ (झूट बोल्दछ) उसले सबै कुरा चोरेको मानिन्छ" । (यसरी साछीलाई न्यायाधीशले सम्झाउनू पर्दछ) ।



## साछीका कुरा बाझिएको अवस्था

**साक्षिविप्रतिपत्तौ तु प्रमाणं बहवो यतः ।**
**तत्साम्ये शुचयो ग्राह्यास्तत्साम्ये स्मृतिमत्तराः ॥२०६॥**

वादी र प्रतिवादीका साछीका कुरा बाझिए बढीभन्दा बढी प्रमाण हेर्नू । प्रमाणमा पनि समानता पाइए शुद्धता हेर्नू । शुद्धतामा पनि समानता पाइए प्रसिद्ध र स्मरणशील व्यक्ति (साछी) लाई आधार बनाउनू ।

## साछीको विकल्प : दिव्यसाछी

स्मृतिमत्साक्षिसाम्यन्तु विवादे यत्र दृश्यते ।
तीक्ष्णत्वात् साक्षिधर्मस्य साक्ष्यं व्यावर्तते पुनः ॥२०७॥

जुन मुद्दामा सम्झना शक्ति नभएका साछी हुन्छन्, त्यहाँ अन्य सम्झन सक्ने साछी नभए दिव्य साछीको विधि अपनाउनू किन कि साछी-धर्म अनुसार सम्झनाशक्ति नभएका व्यक्ति साछी बस्न योग्य हुँदैनन् ।

## अयोग्य साछी

निर्दिष्टेष्वर्थजातेषु साक्षी चेत् साक्ष्य आगते ।

न ब्रूयादक्षरसमं न तन्निगदितं भवेत् ॥२०८॥

लेनदेनका विषयमा बयान दिन उपस्थित साछी जे सोधे पनि "जान्दिन, थाहा छैन" आदि "न" जोडिएका शब्द बढी प्रयोग गर्दछ भने उसलाई साछी मानिँदैन । अथवा उसका कुरालाई प्रमाण मानिँदैन ।

देशकालवयोद्रव्यप्रमाणाकृतिज्ञातिषु ।
यत्र विप्रतिपत्तिः स्यात् साक्ष्यं तदपि चान्यथा ॥२०९॥

साछीका कुरा वास्तविक स्थान, समय, उमेर, वस्तु, परिमाण, रूप, जाति आदिसँग बाझिन्छन् भने त्यस्तो साछीलाई मान्यता नदिनू ।

ऊनमभ्यधिकं वार्थं प्रब्रूयुर्यत्र साक्षिणः ।
तदप्यनुक्तं विज्ञेयमेष साक्ष्यविधिः स्मृतः ॥२१०॥

विवादको विषय बनेको लेनदेनको परिमाणलाई कम वा बढी बताउने साछीलाई पनि अमान्य घोषणा गर्नु भनी साछीधर्ममा बताइएको छ ।

विश्वासमा हुने लेनदेनको सत्यतथ्य जाँचगर्ने विधि

प्रमादाद्धनिनो यत्र न स्याल्लेख्यं न साक्षिणः ।
अर्थं चापह्नुते वादी तत्रोक्तस्त्रिविधो विधिः ॥२११॥

वादी र प्रतिवादीका बीचमा भएको लेनदेनको लिखत, साछी केही छैन, सबै विश्वासका भरमा गरिएको छ भने दिनेले सत्य कुरा प्रमाणित गर्ने (निम्न) तीन विधि हुन्छन् ।



चोदना प्रतिकालं च युक्तिलेशस्तथैव च ।
तृतीयः शपथः प्रोक्तस्तैरर्थं शोधयेत् क्रमात् ॥२१२॥

ऋण दिएको समयमा के गरिरहेको आदिका बारेमा प्रतिवादीलाई गरिने सोधपुछ, वादीले के कामका लागि ऋण दिएको भनी उल्लेख गरेको छ सो काम प्रतिवादीले गरेको वा नगरेको र गरेको भए खर्चको श्रोत के थियो भनेर गरिने सोधपुछ र धर्म, ईश्वर, सन्तान आदिका नाममा किरिया खुवाएर सत्य कुरा बताउन लगाउनू ।

**अभीक्ष्णं चोद्यमानोऽपि प्रतिहन्यान्न तद्वचः ।**
**त्रिचतुष्पञ्चकृत्वो वा परतोऽर्थं समाचरेत् ॥२१३॥**

पटकपटक प्रश्न गर्दा एउटै उत्तर दिएपनि उसलाई तीन, चार, पाँच वा त्यसभन्दा बढी पटक त्यही कुरा सोधी रहनु पर्दछ । सधैं सत्य कुरा लुकाउन सकिन्न अनायाश मुखबाट फुत्किने गर्दछ ।

**चोदनाप्रतिघाते तु युक्तिलेशैस्तमन्वियात् ।**
**देशकालार्थसम्बन्धपरिमाणक्रियादिभिः ॥२१४॥**

सोझो तरिकाले सोद्धा नबताउने प्रतिवादीलाई स्थान, समय, धन, सम्बन्ध, परिमाण र लेनदेनका विषयमा घुमाएर सोधखोज गर्नु पर्दछ ।



**शपथ**

**युक्तिष्वप्यसमर्थासु शपथैरेनमर्दयेत् ।**
**अर्थकालबलापेक्षमग्न्यम्बुसुकृतादिभिः ॥२१५॥**

यसरी पनि साँचो नभने उसलाई अग्नि, जल र उसका पुण्य कर्मको किरिया खुवाएर सत्य कुरा बताउन लगाउनु पर्दछ ।

**दीप्तो यं न दहत्यग्निरापोऽन्धारयन्ति यम् ।**
**स तरत्यभिशापं तं किल्विषी स्याद् विपर्यये ॥२१६॥**

जसलाई रातो फलामका डल्लाले पनि पोल्दैन र जो तोकिएको अवधिसम्म पानीभित्र बस्न सक्दछ उ शुद्ध (सही) हुन्छ नसक्ने दोषी हुन्छ ।

**स्त्रीणां शीलाभियोगे च स्तेयसाहसयोरपि ।**
**एष एव विधिर्दृष्टः सर्वार्थापह्नवेषु च ॥२१७॥**

स्त्रीसम्बन्धी आचार-बलात्कार र अपमान सम्बन्धी विवादमा, चोरीमा, डकैतीमा र अर्काको धनसम्पत्ति पचाउन खोजेको विवादमा पनि यो विधि अपनाउन सकिन्छ ।

**शपथा ह्यृषिदेवानां पुरा सृष्टाः स्वयम्भुवा ।**
**वसिष्ठः शपथं शेपे यातुधाने तु शब्दितः ॥२१८॥**



ऋषि र देवताका लागि भनी प्राचिनकालमा ब्रह्माले शपथको सृष्टि गरेका थिए । वसिष्ठ ऋषिले पनि एक राक्षसलाई शपथ खुवाएका थिए ।

**सप्तर्षयस्तथा सेन्द्राः पुष्करार्थे तपोधनाः ।**
**शेपुः शपथमव्यग्राः परस्परविशुद्धये ॥२१९॥**

सप्तर्षिहरूले इन्द्रलाई पनि पुष्करका विषयमा शपथ खुवाएका थिए र शङ्का निवारण गरेका थिए ।

**आधा दण्ड दिन सकिने अवस्था**

**अयुक्तं साहसं कृत्वा प्रत्यापत्तिं भजेत यः ।**

ब्रूयात् स्वयं वा सदसि तस्यार्धविनयः स्मृतः ॥२२०॥

गर्न नहुने दुष्कर्म वा बलजफ्ती गर्नेले भूल स्वीकार गरेमा वा पश्चाताप गरमो वा आत्मसमर्पण गरेमा उक्त अपराधका लागि तोकिएको दण्डको आधा दण्ड दिनु पर्दछ ।

## दोब्बर दण्ड तिराउने अवस्था

गूहमानस्तु दौश्शील्याद्यदि पापं स हीयते ।
सभ्याश्चास्य न दुष्यन्ति तीव्रो दण्डश्च पार्थिवात् ॥२२१॥

अनौठा कुरा गरेर न्यायालयलाई भड्काउन खोज्नेलाई आरोपित अपराधमा तोकिएको दण्डभन्दा दोब्बर दण्ड दिए न्यायाधीशहरुलाई कुनै दोष लाग्दैन ।



इति ऋणादानं प्रथमं विवादपदम्

✷

नारदीयमनुसंहिता, विवादखण्ड अन्तर्गत ऋणको लेनदेन सम्बन्धी विधिका बारेमा वर्णन गरिएको ऋणादान उपखण्डको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिका श्लोकको संख्याः ८०+२२१=३०१

✷

## अथौपनिधिकं द्वितीयं विवादपदम्
## (निक्षेपसम्बन्धी विवाद)

### निक्षेपको परिभाषा

स्वद्रव्यं यत्र विश्रम्भान्निक्षिपत्यविशङ्कितः ।
निक्षेपो नाम तत् प्रोक्तं व्यवहारपदं बुधैः ॥१॥

विवादका विज्ञहरूले आफ्नो कुनै चल अचल सम्पत्तिलाई कुनै शङ्का नगरी विश्वासका साथ अरु कसैकोमा राख्नुलाई निक्षेप भनिन्छ भनी बताएका छन् । (निःशङ्कं निक्षिप्यते स्थाप्यते इति निक्षेपः) ।

### उपनिधिको परिभाषा

अन्यद्रव्यव्यवहितं द्रव्यमव्याकृतञ्च यत् ।
निक्षिप्यते परगृहे तदौपनिधिकं स्मृतम् ॥२॥

कुनै बाकस, थैलो, पोको आदिमा हाली भित्र के छ भन्ने जानकारी नदिई अरुका घरमा लगेर राख्न दिने निक्षेपलाई “उपनिधि” भनिन्छ ।

### निक्षेपका किसिम र फिर्ता दिने विधि

स पुनर्द्विविधः प्रोक्तः साक्षिमानितरस्तथा ।
प्रतिदानं तथैवास्य प्रत्ययः स्याद्विपर्यये ॥३॥

साछी राखेर राखिने र साछी नराखी राखिने गरी निक्षेप दुई किसिमको हुन्छ । साछी राखेर निक्षेप राखे साछीकै रोहवरमा र साछी नराखी निक्षेप राखिएको भए साछी नराखी फिर्ता दिनु पर्दछ । यसमा अन्यथा गर्न हुँदैन ।

### निक्षेप फिर्ता नदिएको अवस्था

**याच्यमानस्तु यो दात्रा निक्षेपं न प्रयच्छति ।**
**दण्डचः स राज्ञा दाप्यश्च नष्टे दाप्यश्च तत्समम् ॥४॥**

निक्षेप राख्नेले आफ्नो सामान फिर्ता माग्दा निक्षेप लिनेले नदिए उ राजाबाट दण्डनीय हुन्छ । निक्षेप राखिउको वस्तु नष्ट भएमा वा हराएमा त्यो वस्तु बराबरको मूल्य निक्षेप लिनेलाई तिराउनु पर्दछ ।



### निक्षेपको प्रयोग र दण्ड

**यश्चार्थं साधयेत्तेन निक्षेप्तुरननुज्ञया ।**
**तत्रापि दण्डचः स भवेत्तच्च सोदयमाप्नुयात् ॥५॥**

निक्षेप राख्नेको अनुमती नलिई निक्षेप राखिएको वस्तु प्रयोग गरी फाइदा लिइएको छ भने लिनेसँग त्यसरी कमाइएको रकमको ब्याज समेत निक्षेप कर्तालाई दिलाउनु पर्दछ र लिनेलाई यथोचित दण्ड पनि दिनु पर्दछ ।

## निक्षेप फिर्ता दिनुनपर्ने अवस्था

ग्रहीतुः सह योऽर्थेन नष्टो नष्टः स दायिनः ।
दैवराजकृते तद्वन्न चेत्तज्जिह्मकारितम् ॥६॥

निक्षेप लिनेलाई कुनै भवितव्य (आगलागी, डकैती आदि) परी राखिएको निक्षेप र आफ्नो धन समेत नष्ट भएमा वा सरकारले छापामारी लगेमा निक्षेप लिनेले निक्षेपको हानीनोक्सानी निक्षेपकर्तालाई व्यहोर्नु पर्दैन । तर, यो कुरा प्रमाणित हुनुपर्दछ ।

## निक्षेपसम्बन्धी नियम आकर्षित हुने अवस्था

एष एव विधिर्दृष्टो याचितान्वाहितादिषु ।

शिल्पिषूपनिधौ न्यासे प्रतिन्यासे तथैव च ॥७॥

मागेर काम चलाइएको तर फिर्ता दिन नचाहिएको, कसैलाई दिनुपर्ने वस्तु नदिई आफूसँग राखिएको, शिल्पकारले पैसा लिएर सामान बनाई नदिएको, शिल्पकारलाई नमुनाका लागि दिइएको वस्तु फिर्ता नगरिएको, एकछिन हेरी दिनु ल भनी छाडिएका सामान लिइएको र अरु कसैको केही कुरा आफूले राखिदिएको बदलामा उसलाई केही कुरा राख्न दिइएकोमा आफ्नो वस्तु सुरक्षित देखी उसको वस्तु सुरक्षा गर्न ध्यान नदिइएको अवस्थामा निक्षेपसम्बन्धी नियम आकर्षित हुन्छन् ।

प्रतिगृह्णाति पोगण्डं यश्च सप्रधनन्नरः ।
तस्याप्येष विधिर्दृष्टः षडेते विधयः समाः ॥८॥

नाबालकलाई फकाईफुल्याई उसँग लिइएको सामान उसलाई पछि फिर्ता दिँदैन भने उसलाई निक्षेप पचाउन खोजेको आरोपमा दण्डित गर्नुपर्दछ ।

इति औपनिधिकं द्वितीयं विवादपदम्

*

नारदीयमनुसंहिता, विवादखण्ड अन्तर्गत निक्षेप सम्बन्धी विधिका बारेमा वर्णन गरिएको
औपनिधि उपखण्डको मोहन प्रसाद सापकोटाद्वारा
नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

*

शुरुदेखिका श्लोकको संख्याः ३०१+८=३०९

*



## ॥ अथ सम्भूयसमुत्थानं तृतीयं विवादपदम् ॥
## साझेदारी व्यवसायसम्बन्धी विवाद

### साझेदारी व्यवसायको अर्थ

**वणिक् प्रभृतयो यत्र कर्म सम्भूय कुर्वते ।**
**तत् सम्भूयसमुत्थानं व्यवहारपदं स्मृतम् ॥१॥**

जब ब्यापारी आदि मिलेर ब्यापार-व्यवसाय गर्दछन् तब त्यसलाई "सम्भूयसमुत्थान (साझेदारी व्यवसाय)" भनिन्छ ।

## लाभांश वितरण

फलहेतोरुपायेन कर्म सम्भूय कुर्वताम् ।
आधारभूतः प्रक्षेपस्तेनोत्तिष्ठेयुरंशतः ॥२॥

नाफा कमाउने उद्देश्यले मिलेर गरिने साझेदारी व्यवसायमा व्यक्तिले गरको लगानी रकम अनुसार लाभांश वितरण हुन्छ ।

## लाभहानीको दायित्व

समोऽतिरिक्तो हीनो वा यत्रांशो यस्य तादृशः ।
क्षयव्ययौ तथा वृद्धिस्तस्य तत्र तथाविधाः ॥३॥



साझेदारका बीचमा बराबर, बढी वा कम भाग लाग्दछ अर्थात् व्यक्तिले गरेको लगानीको रकम अनुसार समानुपातिकरूपमा लाभहानी भाग लाग्दछ ।

## व्यहोर्नुपर्ने खर्च

भाण्डपिण्डव्ययोद्धारभारसारान्ववेक्षणम् ।
कुर्युस्ते व्यवहारेण समये स्वे व्यवस्थिताः ॥४॥

भण्डारण, ढुवानी, प्रशासनिक, विज्ञापन, गुणस्तर जोगाउन गरिने र सुरक्षा खर्च जस्ता खर्च हरेक साझेदारले व्यहोर्नु पर्दछ ।

## व्यहोर्नु नपर्ने नोक्सानी

प्रमादान्नाशितं दाप्यः प्रतिषिद्धकृतञ्च यत् ।
असन्दिष्टश्च यत् कुर्यात् सर्वैः सम्भूयकारिभिः ॥५॥

साझेदारमध्ये कसैले आफूखुशी कुनै सामान नष्ट गरे, बेचविखन नगर्नु भन्दाभन्दै कुनै सामान किनबेच गरे वा व्यक्तिगत गल्तीका कारण कुनै सामान गुमाए अरु साझेदारले त्यसको नोक्सानी व्यहोर्नु पर्दैन ।

## साझेदार विशेषले पाउने पुरस्कार

दैवतस्कर राजोत्थे व्यसने समुपस्थिते ।

यस्तत् स्वशक्त्या संरक्षेत्तस्यांशो दशमः स्मृतः ॥६॥

आगलागी आदिजस्ता भवितव्य, चोरी वा लुटपाट र सरकारी कर्मचारीसँग एक्लै जुधी कुनै साझेदारले जोगाएको व्यवसायको सम्पत्तिमध्ये दशमांश सो साझेदारलाई पुरस्कारस्वरूप दिनु पर्दछ ।

## लाभांशको उत्तराधिकारी

एकस्य चेत्स्याद्व्यसनं दायादोऽस्य तदाप्नुयात् ।
अन्यो वासति दायादेऽशक्ताश्चेत् सर्व एव वा ॥७॥

यसरी जुद्धा कुनै साझेदारको मृत्यु भएमा उसले पाउने लाभांश उसका पैत्रिक सम्पत्तिका उत्तराधिकारीलाई दिनु पर्दछ । सकिन्छ भने सधैं दिइरहनु पर्दछ ।

## ऋत्विज् आदिमा लाग्ने नियम

ऋत्विजां व्यसनेऽप्येवमन्यस्तत्कर्म निस्तरेत् ।
लभेत दक्षिणाभागं स तस्मात् सम्प्रकल्पितम् ॥८॥

यज्ञ आदि गराउने ऋत्विज्का सम्बन्धमा पनि यही नियम लागु हुन्छ । दक्षिणा नलिई मृत्यु हुने ऋत्विज्को दक्षिणा उसका उत्तराधिकारीलाई दिनु पर्दछ ।

## ऋत्विज् आदिको वरण र दण्ड



ऋत्विग् याज्यमदुष्टं यस्त्यजेदनपकारिणम् ।
अदुष्टमृत्विजं याज्यो विनेयौ तावुभावपि ॥९॥

वरण गरिसकेपछि ऋत्विज्, पुरोहित आदि निर्दोष जजमानको कर्म गर्दैनन् भने ऋत्विज्, पुरोहित आदिलाई तथा वरण गरिसकेपछि निर्दोष ऋत्विज्, पुरोहित आदिबाट कर्म गराउँदैन भने जजमानलाई कडा दण्ड दिनु पर्दछ ।

## ऋत्विज्का किसिम

ऋत्विक्तु त्रिविधः प्रोक्तः पूर्वैर्जुष्टः स्वयम्वृतः ।
यदृच्छया च यः कुर्यादार्त्विज्यं प्रीतिपूर्वकम् ॥१०॥

पुस्तैनी, अनुरोध गरेर डाकिएको र मन परेर डाकिएको गरी तीन थरीका ऋत्विज्हरू हुन्छन् ।

## ऋत्विज् त्याग गर्दाको दण्ड

क्रमागतेष्वेष धर्मो वृतेष्वृत्विक्षु च स्वयम् ।
यादृच्छिके तु सांयाज्ये तत्त्यागे नास्ति किल्बिषम् ॥११॥

पहिला दुई थरी ऋत्विज्लाई त्याग गर्दा वा यिनले जजमानलाई त्याग गर्दा त्यो दण्डनीय अपराध हुन्छ । तेश्रो थरी ऋत्विजलाई दोषका आधारमा त्याग गर्दा दण्डनीय हुँदैन ।



## ब्यापारीको सामान जफत गर्ने सम्बन्धी नियम

शुल्कस्थानं वणिक्प्राप्तः शुल्कं दद्याद्यथोपगम् ।
न तद्व्यतिहरेद्राज्ञां बलिरेष प्रकल्पितः ॥१२॥

प्रशासनलाई नियमानुसार कर तिर्ने ब्यापारीको सामान रोक्ने वा जफत गर्ने कुनै अधिकार राजालाई हुँदैन ।

## नियम मिच्ने ब्यापारीलाई दण्ड

शुल्कस्थानं परिहरन्न काले क्रयविक्रयी ।

मिथ्योक्त्वा च परीमाणं दाप्योऽष्टगुणमत्ययम् ॥१३॥

कर छल्ने, कर तिर्नु अघि सामान बेच्ने, कर अधिकृतलाई सामानको परिणाम ढाँट्ने ब्यापारीलाई जति कर छलिएको हो त्यसको आठ गुना जरिवाना गर्नुपर्दछ ।

विदेशस्थित ब्यापारीको सामानको सुरक्षा राजाले गर्नुपर्ने

कश्चिच्चेत् सञ्चरन् देशात् प्रेयादभ्यागतो वणिक् ।
राजास्य भाण्डं तद्रक्षेत्यावद्दायाददर्शनम् ॥१४॥

कुनै ब्यापारीको कामको सिलसिलामा विदेश गएको बेलामा उतै मृत्यु भए उसका उत्तराधिकारी त्यो देशमा आई नपुगुन्जेलसम्म उसका मालसामानको सुरक्षा गर्ने जिम्मा उ मरेको देशको राजाको हुन्छ ।



मृतक ब्यापारीको सामानको सुरक्षा

दायादेऽसति बन्धुभ्यो ज्ञातिभ्योऽस्य समर्पयेत् ।
तदभावे सुगुप्तं तद्धारयेद्दशतीः समाः ॥१५॥

मृतकका पुत्र नआए उसका अधिकारप्राप्त आफन्तलाई  सामान जिम्मा लगाउनू । ती पनि नआए दश वर्षसम्म उसका सबै सामान सुरक्षित राख्ने व्यवस्था राजाले मिलाउनु पर्दछ ।

अस्वामिकमदायादं दशवर्षोषितं ततः ।

**राजा तदात्मसात्कुर्यादेवं धर्मो न हीयते ॥१६॥**

**दश वर्षसम्म कोही लिन नआए त्यो सामान बेची आएको रकम राजस्वमा दाखिला गर्नु । यसबाट राजाको राजधर्म नष्ट हुँदैन ।**

इति सम्भूयसमुत्थानं तृतीयं विवादपदम्

नारदीयमनुसंहिता, विवादखण्ड अन्तर्गत साझेदारी व्यवसाय सम्बन्धी विधिका बारेमा वर्णन गरिएको सम्भूयसमुत्थान उपखण्डको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

शुरुदेखिका श्लोकको संख्या: ३०९+१६=३२५



## ॥ अथ दत्ताप्रदानिकं चतुर्थं विवादपदम् ॥
## दान फिर्ता लिने सम्बन्धी विवाद

### परिभाषा

**दत्त्वा द्रव्यमसम्यग्यः पुनरादातुमिच्छति ।**
**दत्ताप्रदानिकन्नाम तद्विवादपदं स्मृतम् ॥१॥**

**कुनै अयोग्य मानिसलाई योग्य ठानी दिइएको धन उ अयोग्य रहेछ भन्ने कुरा थाहापाएपछि फिर्ता लिन खोज्दा हुने विवादलाई "दत्ताप्रदानिक विवाद" भनिन्छ ।**

## दानको प्रकार

अथ देयमदेयञ्च दत्तञ्चादत्तमेव च ।
व्यवहारेषु विज्ञेयो दानमार्गश्चतुर्विधः ॥२॥

अदेय (दिन नहुने वस्तु दिनु), देय (दिन हुने वस्तु दिनु), दत्त (फिर्ता नलिने गरी दिनु) र अदत्त (फिर्ता आउने गरी दिनु) गरी चार प्रकारका दिने काम हुन्छन् ।

तत्रेहाष्टावदेयानि देयमेकविधं स्मृतम् ।
दत्तं सप्तविधं विद्याददत्तं षोडशात्मकम् ॥३॥

स्मृतिहरूमा अदेयका आठ, देयका एक, दत्तका सात र अदत्तका सोह्र किसिम हुन्छन् भनी बताइएको छ ।



## गृहस्थका अदेय कुरा

अन्वाहितं याचितकमाधिः साधारणञ्च यत् ।
निक्षेपः पुत्रदारञ्च सर्वस्वं चान्वये सति ॥४॥

गृहस्थका लागि कठिनसँग कमाइएको धन, मागिएको धन, नासो वा धरोहर, सानातिना कुरा, धितो, स्त्री, पुत्र र सर्वस्व अदेय हुन्छन् ।

आपत्स्वपि हि कष्टासु वर्तमानेन देहिना ।
अदेयान्याहुराचार्या यच्चान्यस्मै प्रतिश्रुतम् ॥५॥

ठूलो सङ्कट पर्दा र दिन्छु भनेर वचन दिँदा पनि यी आठ कुरा दिन हुन्न भनेर आचार्यहरूले बताएका छन् ।

## परिवारलाई मर्कामा पारी दान नदिनू

कुटुम्बभरणाद् द्रव्यं यत्किञ्चिदतिरिच्यते ।
तद्देयमुपहत्यान्यद्ददागः समाप्नुयात् ॥६॥

परिवारको पालनपोषण गरेर बाँकी बचेको धन नै (दत्तका रूपमा) दान दिनु पर्दछ । परिवारको आवश्यकतालाई लत्याएर वा मारेर दिइने दानले दाग (पाप) लाग्दछ ।



## दत्त दानका प्रकार

पण्यमूल्यं भृतिस्तुष्ट्या स्नेहात्प्रत्युपकारितम् ।
स्त्रीशुल्कानुग्रहार्थञ्च दत्तं दानविदो विदुः ॥७॥

किनिएका सामानको मोल तिर्नु, तलबभत्ता, पुरस्कार, उपहार, प्रत्युपकार, दाइजो र सहायता गरी सात प्रकारका दत्त हुन्छन् ।

## अदत्त दानका प्रकार

अदत्तन्तु भयक्रोधवेषशोकरुजान्वितैः ।
तथोत्कोचपरीहासव्यत्यासच्छलयोगतः ॥८॥

(१) डरले गरिएको, (२) रिसले गरिएको, (३) शोकमा गरिएको, (४) रोगी हुँदा निराश भएर गरिएको, (५) घूस, (६) ख्यालठट्टामा गरिएको, (७) विनिमयमा गरिएको, (८) देखासिकीमा गरिएको, (९) छलकपटले गरिएको,...।

बालप्रमूढास्वतन्त्रमत्तोन्मत्तापवर्जितम् ।
कर्ता ममायं कर्मेति प्रतिलाभेच्छया च यत् ॥९॥

(१०) बालकबाट गरिएको, (११) मूर्खबाट गरिएको, (१३) आश्रित व्यक्तिबाट गरिएको, (१४) नसामा हुँदा गरिएको, (१५) उन्मादमा जल बिना गरिएको र (१६) केही पाउने आशमा गरिएको गरी सोह्र प्रकारका अदत्त दान हुन्छन् ।



अपात्रे पात्रमित्युक्ते कार्ये चाधर्मसंहिते ।
यद्दत्तं स्यादविज्ञानाददत्तं तत् प्रकीर्तितम् ॥१०॥

यसैगरी अयोग्यले योग्य छु भनी लिएको र विशेष प्रयोजनको लागि लिइएको धन जूवा खेलेर वा मदिरा पिएर सक्नु पनि अदत्त दान हो ।

## दानका नियम मिच्नेलाई दण्ड दिनू

गृह्णात्यदत्तं यो लोभाद्यश्चादेयं प्रयच्छति ।
अदत्तादायको दण्ड्यस्तथादेयस्य दायकः ॥११॥

दिन नहुने अवस्थामा दिन हुने कुरा दान लिएदिए, दिने र लिने दुवै व्यक्तिलाई यथोचित दण्ड दिनु पर्दछ ।

इति दत्ताप्रदानिकं चतुर्थं विवादपदम्

✷

नारदीयमनुसंहिता, विवादखण्ड अन्तर्गत दानदातव्यसम्बन्धी विधिका बारेमा वर्णन गरिएको दत्ताप्रदानिक उपखण्डको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिका श्लोकको संख्याः ३२५+११=३३६

✷



## ॥ अथाभ्युपेत्याशुश्रूषा पञ्चमं विवादपदम् ॥
## सेवासम्बन्धी विवाद

### परिभाषा

**अभ्युपेत्य तु शुश्रूषां यस्तान्न प्रतिपद्यते ।**
**अशुश्रूषाभ्युपेत्यैतद्विवादपदमुच्यते ॥१॥**

सेवा गर्ने वचन दिएर त्यसबाट पछि हट्दा हुने विवादलाई “अभ्युप्रेत्याशुश्रूषा विवाद” भनिन्छ ।

## सेवक, कामदार र दासका किसिम

**शुश्रूषकः पञ्चविधः शास्त्रे दृष्टो मनीषिभिः ।**
**चतुर्विधः कर्मकरः शेषा दासास्त्रिपञ्चकाः ॥२॥**

विद्वानहरूले शास्त्रमा सेवक पाँच, कामदार चार र दास पन्ध्र किसिमका हुने कुरा बताएका छन् ।

**शिष्यान्तेवासिभृतकाश्चतुर्थस्त्वधिकर्मकृत् ।**
**एते कर्मकराः प्रोक्ता दासास्तु गृहजादयः ॥३॥**

गुरुकुलमा नबसी बाहिरबाट शिक्षा लिन आउने शिष्य, गुरुकुलमै बसी शिक्षा लिने शिष्य, पारिश्रमिक लिएर सेवा गर्ने व्यक्ति र पसल-कारखाना आदिमा काम गर्ने व्यक्ति गरी कामदार चार किसिमका हुन्छन् । दास भनेका चाहीँ प्रायः घरमै काम गर्ने हुन्छन् ।



## कामदार र स्वतन्त्रता

**सामान्यमस्वतन्त्रत्वमेषामाहुर्मनीषिणः ।**
**जातिकर्मकृतस्तूक्तो विशेषो वृत्तिरेव च ॥४॥**

विद्वानहरूले  जाति, कर्म र पेसामा भिन्नता भएपनि “यी सबैमा एउटा समानता हुन्छ-कामदार सामान्यतः स्वतन्त्र हुँदैनन्” भनेका छन् ।

## सेवाको किसिम

**कर्मापि द्विविधं ज्ञेयमशुभं शुभमेव च ।**
**अशुभं दासकर्मोक्तं शेषं कर्मकृतः स्मृतम् ॥५॥**

सेवा पनि शुभ र अशुभ गरी दुई किसिमको हुन्छ । दासले गर्ने काम अशुभ र अन्य सबै शुभ कर्म हुन् ।

**गृहद्वाराशुचिस्थानरथ्यावस्करशोधनम् ।**
**गुह्याङ्गस्पर्शनोच्छिष्ट विण्मूत्रग्रहणोज्झनम् ॥६॥**
**इष्टतः स्वामिनश्चाङ्गैरुपस्थानमथान्ततः ।**
**अशुभं कर्म विज्ञेयं शुभमन्यदतः परम् ॥७॥**



(क) घरको ढोका, अपवित्र स्थान, अपवित्र बाटो र अशुद्ध वस्तु सफा गर्ने कार्य, (ख) मालिकका गोप्य अङ्ग छुने कार्य, (ग) जुठो, मलमूत्र आदि सोरेर घरबाहिर फ्याँक्ने कार्य र (घ) मालिकलाई इन्द्रिय सुख दिने कार्य आदि अशुभ कर्म हुन् । यसबाहकेका कर्म शुभकर्म हुन् ।

## शिष्यका कर्तव्य

**आ विद्याग्रहणाच्छिष्यः शुश्रूषन् प्रयतो गुरुम् ।**
**तद्भक्तिर्गुरुदारेषु गुरुपुत्रे तथैव च ॥८॥**

शिष्यले विद्यार्थी हुँदासम्म पूरै समय दत्तचित्त भएर गुरुका सेवामा आफूलाई लगाउनु पर्दछ । यही व्यवहार गुरुआमा र गुरुपुत्रलाई पनि गर्नु पर्दछ ।

**ब्रह्मचारी चरेद्भैक्षमधःशाय्यनलङ्कृतः ।**
**जघन्यशायी सर्वेषां पूर्वोत्थायी गुरोर्गृहे ॥९॥**

उसले गुरुकुलमा बस्दा ब्रह्मचर्यमा रहने, भिक्षान्न खाने, जमिनमा सुत्ने, अलङ्कार नलगाउने र गुरुपरिवारभन्दा पछि सुती अघि उठ्ने गर्नुपर्दछ ।

**नासन्दिष्टः प्रतिष्ठेत तिष्ठेद्वापि गुरुं क्वचित् ।**
**सन्दिष्टः कर्म कुर्वीत शक्तश्चेदविलम्बयन् ॥१०॥**



आदेश नहुँदासम्म गुरुका अगिल्तिर उपस्थित भइरहनु, यताउता आफूखुशी नहिँड्नु र उनले अह्राएका कुरा निसङ्कोच पालना गर्नु शिष्यको धर्म र कर्तव्य हो ।

**यथाकालमधीयीत यावन्न विमना गुरुः ।**
**आसीनोऽधो गुरोः कूर्चे फलके वा समाहितः ॥११॥**

समयमै वेदाध्ययन शुरु गर्नु पर्दछ र गुरुको नरोक्दासम्म पढिरहनु पर्दछ । पढ्दा गुरुका सामु गुरु बसेको भन्दा होचो स्थानमा कुशासन वा फलेक (खुट्टा नहालिएको पिर्का) मा बसी पढ्नु पर्दछ ।

## शिष्यलाई दण्ड

अनुशिस्यश्च गुरुणा न चेदनुविधीयते ।
अवधेनाथवा शिष्यान् रज्ज्वा वेणुदलेन वा ॥१२॥

शिष्यलाई पढाउँदा भनेको मानेन भने गुरुले डोरी वा बाँसको छडी प्रयोग गरी अनुशाषित बनाउनु पर्दछ ।

भृशं न ताडयेदेनं नोत्तमाङ्गे न वक्षसि ।
अनुशिस्य च विश्वास्यो दण्ड्यो राज्ञान्यथा गुरुः ॥१३॥

गुरुले अनुशासनहीन शिष्यलाई पिट्दा उसका उत्तम अङ्ग, छाती आदिमा पिट्न हुँदैन । अनुशाषित शिष्यलाई पिट्न हुँदैन ।



## शिष्यको घर फिर्ती

समावृत्तश्च गुरवे प्रदाय गुरुदक्षिणाम् ।
प्रतीयात् स्वगृहानेषा शिष्यवृत्तिरुदाहृता ॥१४॥

गुरुकुलमा अध्ययन सकिएपछि गुरुलाई दक्षिणा दिएर शिष्य घर फर्किनु पर्दछ । शिष्यवृत्तिका बारेमा यही कुरा बताइएको छ ।

## व्यावसायिक शिक्षा

स्वशिल्पमिच्छन्नाहर्तुं बान्धवानामनुज्ञया ।
आचार्यस्य वसेदन्ते कालं कृत्वा सुनिश्चितम् ॥१५॥

शिल्पशास्त्र (व्यावसायिक शिक्षा) पढ्ने चाहना भए परिवार, बन्धुबान्धवसँग परामर्श लिएर पढ्नु र समय सीमा तोकी पढाई नसकिँदासम्म आचार्यका समीपमा गुरुकुलमा नै बसेर पढ्नू ।

## पढाउँदाका नियम

आचार्यः शिक्षयेदेनं स्वगृहाद्दत्तभोजनम् ।

नचान्यत्कारयेत्कर्म पुत्रवच्चैनमाचरेत् ॥१६॥

आफ्नो घरका खानेकुरा खुबाएर राखी, अरु व्यक्तिगत काम नलगाई आचार्यले पुत्रसमान गरी यस्ता शिष्यलाई पढाउनु पर्दछ ।

## अध्ययन गर्न दवाव

शिक्षयन्तमदुष्टञ्च य आचार्यं परित्यजेत् ।
बलाद्वासयितव्यः स्याद्वधबन्धौ च सोऽर्हति ॥१७॥

पढाइरहेका सज्जन आचार्यलाई छाड्ने शिष्यलाई उचित दण्ड दिई बलपूर्वक फर्काएर लेराई पढ्न लगाउनु पर्दछ ।

## व्यावसायिक शिक्षा लिनदिने क्रममा हुने लाभको अधिकार

शिक्षितोऽपि कृतं कालमन्तेवासी समाप्नुयात् ।
तत्र कर्म च यत्कुर्यादाचार्यस्यैव तत्फलम् ॥१८॥

शिल्पकला पढ्दा शिष्यबाट सिक्ने क्रममा बनाइएका सरसामानबाट हुने लाभ आचार्यको हुन्छ ।

## घर फिर्ती

गृहीतशिल्पः समये कृत्वाचार्यं प्रदक्षिणम् ।

शिक्षितश्चानुमान्यैनमन्तेवासी निवर्तयेत् ॥१९॥

शिल्पकलाको पढाइ सकिएपछि आचार्यलाई दक्षिणा दिई उनका आज्ञाले शिष्यले घर फर्कनु पर्दछ ।

## तलबलिने सेवकका प्रकार र तलब निर्धारण

भृतकस्त्रिविधो ज्ञेय उत्तमो मध्यमोऽधमः ।
शक्तिभक्त्यनुरूपा स्यादेषां कर्माश्रया भृतिः ॥२०॥

तलब लिएर सेवा गर्ने सेवक : उत्तम, मध्यम र अधम गरी तीन प्रकारका हुन्छन् । कार्यक्षमता, निष्ठा र कामको प्रकृति हेरी यिनलाई दिने तलब निर्धारण गर्नुपर्दछ ।

## कामको वर्गीकरण

उत्तमस्त्वायुधीयोऽत्र मध्यमस्तु कृषीवलः ।
अधमो भारवाहः स्यादित्येवं त्रिविधो भृतः ॥२१॥

हतियार बोकी देश एवं जनतालाई रक्षा गर्ने कामलाई उत्तम, कृषी आदि पेसालाई मध्यम र भारी बोक्ने कामलाई अधम काम भनेर तीन थरी कामको वर्गीकरण गरिएको छ ।

## अन्य सेवक



अर्थेष्वधिकृतो यः स्यात्कुटुम्बस्य तथोपरि ।
सोऽधिकर्मकरो ज्ञेयः स च कौटुम्बिकः स्मृतः ॥२२॥

परिवारको पालनपोषणको जिम्मा लिने, परिवारको धनसम्पत्ति हेरचाह गर्ने र आम्दानीको व्यवस्था गर्नेलाई पनि सेवक मानिन्छ ।

## शुभ-अशुभ कर्म र दासका प्रकार

शुभकर्मकरा ह्येते चत्वारः समुदाहृताः ।
जघन्यकर्मभाजस्तु शेषा दासास्त्रिपञ्चकाः ॥२३॥

शुभकर्म गर्ने यिनै चार थरी हुन् बाँकी सबै अशुभ कर्म गर्ने हुन् । दास पन्ध्र थरीका हुन्छन् ।

**गृहजातस्तथा क्रीतो लब्धो दायादुपागतः ।**
**अशनादिभृतस्तद्वदाधत्तः स्वामिना च यः ॥२४॥**

(१) घरमा राखिएको दासदासीबाट जन्मिएको, (२) किनिएको, (३) ब्यापार आदिमा लाभ लिनुपर्दा नगदको सट्टा प्राप्त, (४) पैत्रिक अंशमा प्राप्त, (५) आश्रय दिएर पालिएको, (६) बन्दी बनाएर राखिएको,..।

**ऋणाच्च मोक्षितोऽनल्पाद् युद्धप्राप्तः पणे जितः ।**
**तवाहमित्युपगतः प्रव्रज्यापसृतः कृतः ॥२५॥**



(७) ऋण तिरी दिएर लेराइएको, (८) युद्धमा पराजित राजाबाट खोसिएको वा युद्धमा बन्दी बनाइएको, (९) आवश्यकताका कारणले शरणमा आएको, (१०) सन्यासाश्रमबाट भ्रष्ट भएको, (११) करारमा लिइएको,..।

**भक्तदासश्च विज्ञेयस्तथैव बडबाभृतः ।**
**विक्रेता चात्मनः शास्त्रे दासाः पञ्चदशा स्मृताः ॥२६॥**

(१२) आफ्नो पालपोषणको बदलामा त्यहीँ बसेर काम गर्ने, (१३) दासीले सँगै लिएर आएको, (१४) बाजीमा जितिएको र (१५) आफूले आफैँलाई बेचेको गरी पन्ध्र प्रकारका दासदासी हुन्छन् ।

## दासत्वबाट मुक्ति

तत्र पूर्वश्चतुर्वर्गो दासत्वान्न विमुच्यते ।
प्रसादात् स्वामिनोऽन्यत्र दास्यमेषां क्रमागतम् ॥२७॥

यिमध्ये शुरुका चार दास मालिक खुशी भएर पनि दासत्वबाट मुक्त हुन सक्दैनन् किन कि यी वंशानुगत हुन्छन् ।

यश्चैषां स्वामिनं कश्चिन्मोक्षयेत्प्राणसंशयात् ।
दासत्वात्स विमुच्येत पुत्रभागं लभेत च ॥२८॥

आफ्नो ज्यान नै जोखिममा हालेर मालिकको ज्यान जोगाउने दास, दासत्वबाट मात्र मुक्त हुँदैन, मालिकको पुत्रतुल्य भई अंशको हकदार समेत हुन्छ ।



अनाकालभृतो दास्यान्मुच्यते गोयुगं ददत् ।
सम्भक्षितं यद्दुर्भिक्षे न तच्छुध्येत कर्मणा ॥२९॥

अनिकालमा पालनपोषण गरी दास भएको व्यक्ति लामोसमयसम्म मालिकको सेवा गरेर पनि दासत्वबाट मुक्त हुँदैन । समर्थ भएपछि गाई, साँढे आदि मालिकलाई दिएर भने उ दासत्वबाट मुक्त हुन सक्दछ ।

आधत्तोऽथ धनं दत्त्वा स्वामी यद्येनमुद्धरेत् ।
अथोपगमयेदेनं सोऽपि क्रीतादनन्तरः ॥३०॥

बन्धकमा आएको दास उसको मूल (पहिलो) स्वामीले ऋण चुकाएपछि मुक्त हुन्छ । समयमै उसले स्वामीलाई ऋण तिरेन भने यस्तो दास क्रीतदास (किनिएको दास) बन्न पुग्दछ ।

दत्त्वा तु सोदयमृणमृणी दास्याद् प्रमुच्यते ।
कृतकालाभ्युपगमात्कृतकोऽपि विमुच्यते ॥३१॥

ऋण तिरी दिएका कारण दास भएको व्यक्ति ब्याज समेत ऋण चुकाएपछि दासत्वबाट मुक्त हुन सक्दछ । करारमा दास भएको व्यक्ति करार अवधि सकिएपछि स्वतः दासत्वबाट मुक्त हुन्छ ।

तवाहमित्युपगतो युद्धप्राप्तः पणे जितः ।

प्रतिपूरूषदानेन मुच्येरँस्तुल्यकर्मणा ॥३२॥

आफैंलाई दास बनाएर समर्पण गर्ने र युद्धमा जिती बन्दी बनाएर लेराइएका दास, परिस्थिति बदलिए पछि अर्थात् आफ्नो पेटपाल्न सक्ने अवस्था भएपछि अथवा सन्धी भएपछि दासत्वबाट मुक्त हुन्छन् ।

राज्ञ एव तु दासः स्यात्प्रव्रज्यापसृतो नरः ।
न तस्य प्रतिमोक्षोऽस्ति न विशुद्धिः कथञ्चन ॥३३॥

सन्यास धर्मबाट भ्रष्ट भएको व्यक्ति राजाको दास हुन्छ, उसको लागि प्रायश्चित र मुक्तिको विधान छैन ।

भक्तस्योपेक्षणात्सद्यो भक्तदासः प्रमुच्यते ।
निग्रहाद् बडबायाश्च मुच्यते बडबाभृतः ॥३४॥

खानलाउन पाइन्छ भनेर दास भएको व्यक्ति खानलाउन नपाउँदा दासत्व छोड्न सक्दछ । दासीसँगै आएका उनका सन्तान आमा दासत्वबाट मुक्तहुँदा स्वतः हुन्छन् ।

विक्रीणाति स्वतन्त्रः सन् य आत्मानन्नराधमः ।
सुजघन्यतमस्तेषां सोऽपि दासान्न मुच्यते ॥३५॥

आफ्नो आत्मा बेचेर दास बन्ने अधम मानिसहरू सो जघन्य पापका कारण कहिल्यै दासत्वबाट मुक्त हुँदैनन् ।



चौरापहृतविक्रीता ये च दासीकृता बलात् ।
राज्ञा मोक्षयितव्यास्ते दासत्वं तेषु नेष्यते ॥३६॥

अपहरण गरेर बेचिएका र बलजफ्ती दास बनाइएका दासदासीलाई राजाबाट मुक्त गराइनु पर्दछ, तिनलाई लामोसमय दास बनाएर राख्न सकिन्न ।

## दास राख्ने नियम

वर्णानाम्प्रातिलोम्येन दासत्वन्न विधीयते ।
स्वधर्मत्यागिनोऽन्यत्र दारवद्दासता मता ॥३७॥

निम्न वर्णलाई उच्च वर्णका दास राख्ने अधिकार छैन । यो नियम स्त्री-विवाहको जस्तै नियम हो । नमान्नेले आफ्नो वर्णधर्म छाडेको मानिन्छ ।

## दासलाई मालिक परिवर्तन गर्ने अधिकार हुँदैन

तवाहस्मीति य आत्मानमस्वतन्त्रः प्रयच्छति ।
न स तम्प्राप्नुयात्कामं पूर्वस्वामी लभेत तम् ॥३८॥

पहिले नै कसैको दास भएको व्यक्तिले अरु कसैको दास हुन खोजे त्यसलाई स्वीकार गर्न सकिन्न । उसलाई नयाँ मालिक चुन्ने अधिकार छैन, पहिलेकै स्वामीकोमा फर्कनु पर्दछ ।



## दास र नीजि धन

अधनास्त्रय एवोक्ता भार्या दासस्तथा सुतः ।
यत्ते समधिगच्छन्ति यस्य ते तस्य तद्धनम् ॥३९॥

स्त्री, दास र पुत्रलाई नीजि धन राख्ने अधिकार छैन । यिनले जे काम गरेर जति कमाउँदछन् त्यो उसैको हुन्छ जसले यिनलाई राखेको छ । (यिनको धनमा क्रमशः पति, मालिक र पिताको अधिकार हुन्छ) ।

## दास मुक्तिको विधि

स्वदासमिच्छेद्यं कर्तुमदासं प्रीतमानसः ।

स्कन्धादादाय तस्याथ भिन्द्यात्कुम्भं सहाम्भसा ॥४०॥
अक्षताभिः सपुष्पाभिर्मूर्धन्येनमवाकिरेत् ।
अदास इति चोक्त्वा त्रिः प्राङ्मुखं तमथोत्सृजेत् ॥४१॥

उदारतापूर्वक दासलाई मुक्त गर्न चाहने मालिकले जलपूर्ण कलश दासको काँधबाट खसाली फुटाएर त्यससँगै अक्षाता र फूल सहितको जल दासको टाउकोमा छुवाउँदै खसाल्दै "अब तिमी दास रहेनौ" भनी घोषणा गर्नू । यसपछि दासत्वबाट मुक्त व्यक्ति तुरुन्त पूर्वतिर हिँड्नु पर्दछ ।

ततः प्रभृति वक्तव्यः स्वाम्यनुग्रहपालितः ।
भोज्यान्नः प्रतिगृह्यश्च भवत्यभिमतश्च सः ॥४२॥



दासत्वबाट मुक्त भएको दासले मालिकप्रति कृतज्ञता व्यक्त गर्नू । यतिखेर मालिकले सामलतुमल र बाटोखर्च दिएर पठाउनु पर्दछ भन्ने मत पनि पाइन्छ ।

इत्यभ्युपेत्याशुश्रूषा पञ्चमं विवादपदम्

✷

नारदीयमनुसंहिता, विवादखण्ड अन्तर्गत सेवासम्बन्धी विधिका बारेमा वर्णन गरिएको अभ्युपेताशुश्रूषा उपखण्डको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिका श्लोकको संख्या: ३३६+४२=३७८

✷

## ॥ अथ वेतनस्यानपाकर्म षष्ठं विवादपदम् ॥
## तलबसम्बन्धी विवाद

### परिभाषा

भृतानां वेतनस्योक्तो दानादानविधिक्रमः ।
वेतनस्यानपाकर्म तद्विवादपदं स्मृतम् ॥१॥

यस पूर्व बताइएका कर्मकर अर्थात् तलब लिएर सेवा गर्ने चार थरीका सेवकहरुको तलबसम्बन्धी विवादलाई "वेतनस्यानपाकर्म विवाद" भनिन्छ ।

### सहमती भए अनुसारको तलब दिनू



भृत्याय वेतनं दद्यात्कर्मस्वामी यथाकृतम् ।
आदौ मध्येऽवसाने वा कर्मणो यद्विनिश्चितम् ॥२॥

काम लगाउनेले सेवकलाई उसले गरेको कामका लागि तोकिए बमोजिमको तलब शुरुमा, बीचमा वा अन्तमा जतिबेला लिनेदिने सहमती भएको छ सो अनुसार नै दिनु पर्दछ ।

भृतावनिश्चितायान्तु दशभागं समाप्नुयुः ।
लाभगोबीजसस्यानां वणिग्गोपकृषीबलाः ॥३॥

तलब नतोकी सेवा लिइएको भए सेवकलाई : ब्यापारी भए आफूलाई सो काम उसलाई लगाए बापत प्राप्त हुने लाभको, पशुपालक भए दूध-दही-नौनी वा घिउको तथा कृषक भए बीउबिजन र अनाजको दशौं भाग तलबकारूपमा दिनु पर्दछ ।

## तलब कट्टाका नियम

कर्मोपकरणञ्चैषां क्रियां प्रति यदर्पितम् ।
आप्तभावेन कुर्वीत न जिह्मेन समाचरेत् ॥४॥

सेवकले कामका लागि प्रयोग हुने (तराजु, डोरी, हलो आदि) उपकरण सही ढङ्गले इमानदारीपूर्वक जोगाएर (आप्तभाव-मित्र वा हितैषीको भावनाले) चलाउनु पर्दछ । जथाभावी (जिह्म-बेइमानी, अल्छी) चलाएर हानीनोक्सानी नगर्नू । (जानीजानी नोक्सान गरे तलबबाट काट्नू) ।



## कामदारलाई दण्ड जरिवाना

कर्माकुर्वन्प्रतिश्रुत्य कार्यो दत्त्वा भृतिं बलात् ।
भृतिं गृहीत्वाकुर्वाणो द्विगुणां भृतिमावहेत् ॥५॥

तलब तोकी पेश्की समेत लिएका वा नलिएका काम नगर्ने सेवकलाई केही रकम दिएर बलपूर्वक काममा लगाउनु पर्दछ । तलब लिएर काम नगर्ने सेवकलाई तलबको दोब्बर रकम दण्ड तिराउनु पर्दछ ।

## सार्वजनिक सवारी साधन सम्बन्धी नियम

अनयन्नादयित्वा तु भाण्डं वा यानवाहने ।
दाप्यो भृतिचतुर्भागं सर्वामर्धपथे त्यजन् ॥६॥

यहाँसम्म लैजान्छु वा यतिसमयसम्म चलाउँदछु भनेर यान, बाहन चलाउने तर बीचमा छाड्ने सेवक (चालक) लाई चारभागको एक भाग भाडा तिराउनू । मालिकले वा यात्रुले आफूखुशी बीचमा छुटाए वा छोडे पूरै तलब वा भाडा दिनू ।

## बीचैमा काम छोड्ने कामदारको तलब

कालेऽपूर्णे त्यजन् कर्म भृतिनाशमवाप्नुयात् ।

स्वामिदोषादपक्रामेद् यावत् कृतकमालभेत् ॥७॥

तोकिएको समयसम्म काम नगरी बीचैमा छाड्ने सेवकले तलब गुमाउँदछ । मालिकका कारण बीचमा छाड्नु परेको अवस्थामा जति समय काम गरेको हो त्यति समयको तलब दिनु पर्दछ ।

## चालक र ढुवानीका नियम

भृतिषड्भागमाभाष्य पथि युग्यकृतन्त्यजन् ।
अददत् कारयित्वा तु कर्मैवं सोदयां भृतिम् ॥८॥

ढुवानीको जिम्मा लिई तोकिएको स्थानसम्म नपुऱ्याउने चालकलाई तोकिएको भाडाको छैटौं भाग दण्ड तिराउनु पर्दछ । बेलैमा ढुवानी-भाडा नतिर्ने खालको धनीलाई ब्याजसमेत तिर्न लगाउनू ।

अनयन्वाहकोऽप्येवं भृतिहानिमवाप्नुयात् ।
द्विगुणां तु भृतिं दाप्यः प्रस्थाने विघ्नमाचरन् ॥९॥

चढ्न बोलाइएको वाहन नचढ्ने मालिकले पनि सेवकलाई क्षतिपूर्ति दिनु पर्दछ । यसैगरी लैजान्छु भनी कबोल गरी नलैजाने सेवक (चालक) लाई तोकिएको भाडाको दोब्बर दण्ड तिराउनु पर्दछ ।

भाण्डं व्यसनमागच्छेद्यदि वाहकदोषतः ।

दाप्यो यत्तत्र नश्येत्तु दैवराजकृताद‍ृते ॥१०॥

भवितव्य (भूकम्प, दुर्घटना, लुटेरा, राजकीय सङ्कट आदि) बाहेकका कारणले सवारीमा हुने हानी चालकले व्यहोर्नु पर्दछ ।

## गोठालो सम्बन्धी नियम

गवां शताद्वत्सतरी धेनुः स्याद् द्विशताद् भृतिः ।
प्रतिसंवत्सरं गोपे सन्दोहो वाष्टमेऽहनि ॥११॥

सय वटा गाई चराउने गोठालोलाई पारिश्रमिका रूपमा एक वर्षमा एउटा भर्खरकी लैनू गाई दिनु पर्दछ । दुई वर्षसम्म चराउनेलाई एउटा भर्खरकी लैनू गाई बाच्छो

सहित दिनु पर्दछ । आठ दिनसम्म दूध दुहुने गोठालोलाई पारिश्रमिमका रूपमा आठौं दिनको दूध दिनु पर्दछ ।

उपानयेत्गा गोपाय प्रत्यहं रजनीक्षये ।
चीर्णाः पीताश्च ता गोपः सायाह्ने प्रत्युपानयेत् ॥१२॥

गोठालाले हरेक दिन मालिकसँग गाई लिई वनमा लगेर चराउनू, दिउस खुवाउनू पियाउनू र साँझमा फर्काएर लेराउनू ।

स्याच्चेद् गोव्यसनं गोपो व्यायच्छेत्तत्र शक्तितः ।
अशक्तावभिपत्यारं स्वामिने तन्निवेदयेत् ॥१३॥



सङ्कटग्रस्त गाईको क्षमताले भ्याएसम्म सेवा गर्नू, गम्भीर अवस्था भए मालिकलाई खबर गर्नू ।

अव्यायच्छन्नविक्रोशन्स्वामिने चानिवेदयन् ।
वोढुमर्हति गोपस्तं विनयञ्चापि राजतः ॥१४॥

सङ्कटग्रस्त गाई आदिको सेवा नगर्ने वा बेलैमा मालिकलाई खबर नगर्ने गोठालालाई मूल्य बराबरको रकम तिराउनू । राजाले उचित दण्ड पनि दिनू ।

नष्टं विनष्टं कृमिभिः श्वहतं विषमे मृतम् ।
हीनं पुरुषकारेण गोपायैव निपातयेत् ॥१५॥

गाई हराएमा तथा घाइते भएर वा सर्प आदिले टोकेर वा कुकुरले टोकेर उपचारका अभावमा मरे त्यसको मूल्य गोठालालाई तिराउनु पर्दछ ।

अजाविके तथा रुद्धे वृकैः पाले त्वनायति ।
यत्प्रसह्य वृको हन्यात्पाले तत्किल्बिषं भवेत् ॥१६॥

एक्लै पारी वा पाई कुनै हिंस्रक जनावरले वा शिकारीले कुनै घरपालुवा जनावर मारेमा वा ती जनावर वा शिकारीले घाइते बनाएका जनाबर पछि मरेका गोठालोले नै त्यसको मूल्य चुकाउनु पर्दछ । गोठालो नै पापी हुन्छ ।

तासामनवरुद्धानाञ्चरन्तीनां मिथो वने ।
याः प्रसह्य वृको हन्यान्न पालस्तत्र किल्बिषी ॥१७॥



देखभाल गर्दागर्दै हिंस्रक जनावरबाट मारिने समूहमा चरिरहेका पशुको मूल्य र पाप गोठालाले व्यहोर्नु पर्दैन ।

विघुष्य तु हृतञ्चौरैर्न पालो दातुमर्हति ।
यदि देशे च काले च स्वामिनः स्वस्य शंसति ॥१८॥

चोरले बलपूर्वक चोरेर लगेका जनावरका विषयमा बेलैमा पशुधनीलाई खबर गर्ने गोठालो पशुक्षतिको लागि उत्तरदायी हुँदैन ।

एतेन सर्वपालानां विवादः समुदाहृतः ।
मृतेषु च विशुद्धिः स्यात्पालस्याङ्कादिदर्शनात् ॥१९॥

गोठालो सम्बन्धी विवादका विषयमा यी कुरा बताइए । यसैगरी आफूआफूमा जुधेर वा चञ्चल स्वभावका कारण मर्ने जनावरको रौं, सिङ आदि लेराएर पशुधनीलाई देखाउने गोठालाले पनि नोक्सानी व्यहोर्नु पर्दैन ।

## नगरवधूसम्बन्धी नियम

शुल्कं गृहीत्वा पण्यस्त्री नेच्छन्ती द्विस्तदावहेत् ।
अप्रयच्छँस्तदा शुल्कमनुभूय पुमाँस्त्रियम् ॥२०॥

पैसा लिएर सेवा नगर्ने नगरवधूलाई लिएको पैसाको दोब्बर पैसा तिराउनू । यसैगरी पैसा दिने बाचा गरी फकाई पहिले नगरबधूलाई उपभोग गरी पछि पैसा नदिई हिँड्ने ग्राहकलाई पनि दोब्बर पैसा तिराउनू ।



अयोनौ क्रमते यस्तु बहुभिर्वापि वासयेत् ।
शुल्कमष्टगुणं दाप्यो विनयस्तावदेव च ॥२१॥

सहवासका लागि अयोग्य अङ्गमा सहवास गर्ने र एक्लै सहवास गर्ने आश्वासन दिई जबरजस्ती सामूहिक सहवास गर्ने ग्राहकहरूलाई तोकिएको रकमको आठ गुना दण्ड तिराउनू ।

## भाडावाल र घरधनी सम्बन्धी नियम

पराजिरे गृहं कृत्वा स्तोमं दत्त्वा वसेत्तु यः ।

स तद् गृहीत्वा निर्गच्छेत् त्यक्त्वा सर्वं मुधोषितः ॥२२॥

अरुका घरमा भाडामा बस्ने व्यक्तिले घरधनीको अनुमतिले आफ्नो खर्चमा अस्थाईरूपमा बनाएका कुरा घरछोड्दा आफूसँगै लैजाने पूरा अधिकार छ ।

## हुलाकी र ढुवानीका नियम

स्तोमवाहीनि भाण्डानि पूर्णकालान्युपानयेत् ।
ग्रहीतुराभवेद् भग्नं नष्टञ्चान्यत्र सम्प्लवात् ॥२३॥

ढुवानीको वा हुलाकीको जिम्मा लिनेले बेलैमा सामान नपुऱ्याउँदा उक्त सामानमा हुने हानीनोक्सानी तिर्नु पर्दछ । तर, भवितव्य पर्दा उ दोषी हुँदैन ।



इति वेतनस्यानपाकर्म षष्ठं विवादपदम्

नारदीयमनुसंहिता, विवादखण्ड अन्तर्गत तलब, भाडा आदि सम्बन्धी विधिका बारेमा वर्णन गरिएको वेतनस्यानपाकर्म उपखण्डको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

शुरुदेखिका श्लोकको संख्या: ३७८+२३=४०१

## ॥ अथ अस्वामिविक्रयः सप्तमं विवादपदम् ॥
## आफ्नो स्वामित्व नभएका कुरा बिक्रीसम्बन्धी विवाद

### परिभाषा

निक्षिप्तं वा परद्रव्यं नष्टं लब्ध्वापहृत्य वा ।
विक्रीयते परोक्षं यत् स ज्ञेयोऽस्वामिविक्रयः ॥१॥

कसैको नासो, कसैको धितो बन्धकी, कसैको हराएको सामान पाएर, कसैको सामान चोरेर-लुटेर वा छलेर अरु कसैलाई बेच्नुलाई अथवा सामानको मालिक आफू नहुँदा नहुँदै पनि कुनै सामान बेच्नुलाई "अस्वामिविक्रय" भनिन्छ ।



### अनधिकृत सामान गोप्यरूपमा किन्ने व्यक्ति दोषी हुन्छ

द्रव्यमस्वामिविक्रीतं प्राप्य स्वामी समाप्नुयात् ।
प्रकाशं क्रयतः शुद्धिः क्रेतुः स्तेयं रहःक्रयात् ॥२॥

यस्ता सामान खोजखबर गरी मालिकले खरिदकर्तासँग लिन सक्दछ । सार्वजनिकरूपमा यस्ता सामान किन्नेलाई कुनै दोष लाग्दैन तर गोप्यरूपमा किन्ने भने दोषी हुन्छ ।

अस्वाम्यनुमताद्दासादसतश्च जनाद्रहः ।
हीनमूल्यमवेलायां क्रीणँस्तद्दोषभाग्भवेत् ॥३॥

मालिकको अनुमति नलिई उसका सामान बेच्ने दासबाट सामान किन्ने, सामान बेचिरहेका बालबालिकासँग सामान किन्ने, लुकीछिपी बेच्नेसँग सामान किन्ने तथा कुसमयमा, राती र एकान्तमा बेचिरहिएका सामान किन्ने क्रेता दोषी हुन्छ । यस्तासँग सामानको वास्तविक मालिकले सामान लिन सक्दछ । उसलाई उचित दण्ड पनि दिइनु पर्दछ ।

**न गूहेदागमं क्रेता शुद्धिर्ह्यस्य तदागमात् ।**
**विपर्यये तुल्यदोषः सर्वं तद्दोषमर्हति ॥४॥**

श्रोत खुलेका सामान किन्दा वा सम्बन्धित निकायबाट अनुमति लिई कुनै सामान किन्दा किन्ने दोषी हुँदैन । यसमा अन्यथा भए उ दोषी हुन्छ ।



## अनधिकृत विक्रेतालाई कारवाही

**विक्रेता स्वामिनेऽर्थं च क्रेतुर्मूल्यञ्च तत्कृतम् ।**
**दद्याद्दण्डन्तथा राज्ञे विधिरस्वामिविक्रये ॥५॥**

यसरी अर्काको सामान बेच्ने समातिएपछि उसँगबाट बेचिएको सामान त्यसको वास्तविक मालिकलाई फिर्ता गराउनू, त्यो सामान किन्नेको पैसा फिर्ता गराउनू र राजाले उसलाई उचित दण्ड दिनू ।

## खसेको सामान सम्बन्धी नियम

**परेण निहितं लब्ध्वा राजन्युपहरेन्निधिम् ।**

राजगामी निधिः सर्वः सर्वेषां ब्राह्मणादृते ॥६॥

कसैको खसेको सामान पाइए त्यो सामान सरकारलाई बुझाउनू । राजा, ब्राह्मण बाहेकका सबैले यसरी भेट्टाउने सामान लिन सक्दछ । सबै प्रजाको धनसम्पत्तिको रक्षा गर्ने हुनाले राजा पनि ती धनसम्पत्तिको एकप्रकारले मालिक नै हुन्छ । त्यसमाथि जुन सामानको मालिकको अत्तो पत्तो हुँदैन त्यस्ता सामानको त राजा मालिक हुन्छ नै ।

ब्राह्मणोऽपि निधिँल्लब्ध्वा क्षिप्रं राज्ञे निवेदयेत् ।
तेन दत्तञ्च भुञ्जीत स्तेनः स्यादनिवेदयन् ॥७॥

ब्राह्मणले पनि यस्ता सामान पाउँदा राजालाई बुझाउनू । राजाले भोग गर्न दिए भोग गर्नू । तर, राजालाई जानकारी नदिई यस्ता सामान भोग गर्ने ब्राह्मण पनि चोर नै मानिन्छ ।



हराएको सामान पाएपछि राजालाई जानकारी दिनू

स्वमप्यर्थं तथा नष्टँल्लब्ध्वा राज्ञे निवेदयेत् ।
गृह्णीयात्तत्र तं शुद्धमशुद्धः स्यादतोऽन्यथा ॥८॥

आफ्ना हराएका धनसम्पत्ति पाउँदा पनि राजालाई खबर गरिनु पर्दछ । राजाले भोग गर्न दिए गर्नुपर्दछ अन्यथा त्यो कार्य पनि एकप्रकारले चोरी नै मानिन्छ र दण्डनीय हुन्छ ।

❧ इति अस्वामिविक्रयः सप्तमं विवादपदम् ☙

❧✷☙

❧ नारदीयमनुसंहिता, विवादखण्ड अन्तर्गत अनधिकृत खरिदबिक्रीसम्बन्धी विधिका बारेमा वर्णन गरिएको अस्वामिविक्रय उपखण्डको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो ☙

❧✷☙

शुरुदेखिका श्लोकको संख्याः ४०१+८=४०९

❧✷☙

## ॥ अथ विक्रीयासम्प्रदानमष्टमं विवादपदम् ॥

## क्रेता र बिक्रेता बीचको विवाद



### परिभाषा

**विक्रीय पण्यं मूल्येन क्रेतुर्यन्न प्रदीयते ।**
**विक्रीयासम्प्रदानं तद्विवादपदमुच्यते ॥१॥**

पैसा लिएर किन्नेलाई सामान नदिँदा हुने किन्ने र बेच्नेका बीचमा हुने विवादलाई " विक्रीय-असम्प्रदान विवाद" भनिन्छ ।

### पण्य

**लोकेऽस्मिन्द्विविधं द्रव्यं स्थावरञ्जङ्गमन्तथा ।**

क्रयविक्रयधर्मेषु सर्वं तत्पण्यमुच्यते ॥२॥

संसारमा किनबेच हुने चल र अचल गरी दुई किसिमका पदार्थ हुन्छन् । यी दुवैलाई किनबेचका लागि योग्य भएका कारण पण्य भनिन्छ ।

किनबेचका आधार

षड्विधस्तस्य तु बुधैर्दानादानविधिक्रमः ।
गणिमं तुलिमं मेयं क्रियया रूपतः श्रिया ॥३॥

किनबेच गणना गरेर, जोखेर, नापेर, क्षमता हेरेर (जस्तै घोडाको गति हेरेर), रूप हेरेर र चमक हेरेर गर्ने गरिन्छ ।



बेचेको सामान नदिनेलाई दण्ड

विक्रीय पण्यं मूल्येन क्रेतुर्यो न प्रयच्छति ।
स्थावरस्य क्षयं दाप्यो जङ्गमस्य क्रियाफलम् ॥४॥

सामान बेचेर तुरुन्त सामान नदिनेलाई चल सम्पत्ति भए हानी सहित र अचल सम्पत्ति भए उपभोगको मूल्य समेत थपेर ग्राहकलाई दिनु पर्दछ ।

अर्घश्चेदपहीयेत सोदयं पण्यमावहेत् ।
स्थायिनामेष नियमो दिग्लाभो दिग्विचारिणाम् ॥५॥

बिक्रेताले क्रेतालाई उसले खरिद गरेको पूरै वा आधा सामान समयमै नदिएको अवस्थामा सामानको मूल्य घटी हुने नोक्सानी बिक्रेताले क्रेतालाई दिनु पर्दछ । यो नियम स्थानीय वा स्वदेशी स्थाई ब्यापारमा लागु हुन्छ । घुमन्ते र विदेशी ब्यापारमा संलग्न हुने अस्थाई ब्यापारमा यो नियम लागु हुँदैन, त्यहाँ जे आपसमा सहमती भएको छ त्यहाँ त्यही लागु हुन्छ ।

## हानी नोक्सानी व्यहोर्ने नियम

उपहन्येत वा पण्यं दह्येतापह्रियेत वा ।
विक्रेतुरेव सोऽनर्थो विक्रीयासम्प्रयच्छतः ॥६॥

बेच्ने निश्चय गरी किन्नेलाई सामान नदिइएको अवस्थामा त्यो सामान चोरिए, गले, सडे, नासिए, जले वा राजाले जफत गरे हुने हानी विक्रेताको हुन्छ क्रेताको हुँदैन ।



## झुक्याएर सामान बेचेकोमा दण्ड

निर्दोषं दर्शयित्वा तु सदोषं यः प्रयच्छति ।
मूल्यं तद्द्विगुणं दाप्यो विनयन्तावदेव च ॥७॥

राम्रो छ भनी नराम्रो सामान बेच्नेलाई सामानको मूल्यको दोब्बर र नियमानुसारको थप दण्ड समेत तिराउनू ।

## एउटासँग पैसा लिई अर्कोलाई सामान बेचेको दण्ड

तथान्यहस्ते विक्रीय योऽन्यहस्ते प्रयच्छति ।
सोऽपि तद्द्विगुणं दाप्यो विनयं तावदेव च ॥८॥

एउटासँग पैसा लिएर अर्कोलाई त्यो सामान बेच्ने विक्रेतालाई सामानको मूल्यको दोब्बर र थप दण्ड समेत तिराउनू ।

## अर्कोलाई बेच्न पाइने अवस्था

दीयमानन्न गृह्णाति पण्यं क्रीतं हि यत् क्रयी ।
विक्रीणानस्तदन्यत्र विक्रेता नापराध्नुयात् ॥९॥



ग्राहकले नलगेका खण्डमा त्यो सामान बेच्नु नै पर्ने हुनाले बिक्रेताले अरुलाई बेच्न सक्दछ, दोष लाग्दैन ।

## उल्लेखित नियम लागु हुने अवस्था

दत्तमूल्यस्य पण्यस्य विधिरेष प्रकीर्तितः ।
अदत्तमूल्ये विक्रीते न विक्रेतुरतिक्रमः ॥१०॥

यी सबै नियम किन्नेले सामानको मूल्य तिरिसकेको अवस्थामा लागु हुन्छ । अरु अवस्थामा आफ्नो सामान अरुलाई बेच्न उ स्वतन्त्र छ । तर, आपसी विश्वासका कुरा भए, सोही अनुसार गर्न सकिन्छ ।

## लाभमा हुने घटबढ

**लाभार्थो वणिजां सर्वः पण्येषु क्रयविक्रयः ।**
**स च लाभोऽर्घमासाद्य महान् भवति वा न वा ॥११॥**

ब्यापारी फाइदाका लागि नै सामान किनबेच गर्दछन् । वस्तुको मूल्यमा तलमाथि हुँदा फाइदामा पनि तलमाथि हुने गर्दछ ।

**तस्माद्देशे च काले च वणिगर्घं प्रकल्पयेत् ।**
**न जिह्मेन प्रवर्तेत श्रेयानेष वणिक्पथः ॥१२॥**



यसै कारण ब्यापारीहरू स्थान, समय आदि हेरी वस्तुको मूल्य निर्धारण गर्ने गर्दछन् । तर पनि छलकपट भएन भने ब्यापार-व्यवसाय फस्टाउँदछ र ब्यापारीले पनि नाम कमाउँदछ ।

इति विक्रीयासम्प्रदानमष्टमं विवादपदम्

✷

नारदीयमनुसंहिता, विवादखण्ड अन्तर्गत अनधिकृत किन्नेबेच्नेको बीचको विवादका बारेमा वर्णन गरिएको विक्रीयासम्प्रदान उपखण्डको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिका श्लोकको संख्या: ४०९+१२=४२१

✷

## ॥ अथ क्रीत्वानुशयो नवमं विवादपदम् ॥
## किनबेचमा ठगी सम्बन्धी विवाद

### परिभाषा

क्रीत्वा मूल्येन यः पण्यं क्रेता न बहु मन्यते ।
क्रीत्वानुशय इत्येतद्विवादपदमुच्यते ॥१॥

पैसा तिरेर सामान किनिसकेपछि ठगेको र ठगिएको भनी किन्ने र बेच्नेका बीचमा हुने विवादलाई "क्रीत्वानुशय विवाद" भनिन्छ ।

### शङ्का लागे सामान पहिलो दिन फिर्ता गर्नू



क्रीत्वा मूल्येन यत्पण्यं दुष्क्रीतं मन्यते क्रयी ।
विक्रेतुः प्रतिदेयं तत् तत्रैवाहन्यविक्षतम् ॥२॥

मूल्य तिरेर किनेको सरसामानमा किन्नेलाई धोखा भयो भन्ने लागेमा, त्यही दिन सबै सामान जस्ताको तस्तै बेच्नेलाई फिर्ता दिनु पर्दछ ।

### अन्य दिन फिर्ता लिंदा कट्टा गर्न पाउने रकम

द्वितीयेऽह्नि ददत्क्रेता मूल्यात्त्रिंशांशमावहेत् ।
द्विगुणं तत्तृतीयेऽह्नि परतः क्रेतुरेव तत् ॥३॥

ग्राहकले किनेको सामान दोश्रो दिन फिर्ता गर्दछ भने तीस प्रतिशत कटाएर र तेश्रो दिन फिर्ता गर्दछ भने पचास प्रतिशत रकम कटाएर क्रेतालाई बिक्रेताले पैसा फिर्ता दिनू । त्यसपछि सामान फिर्ता लिने वा नलिने भन्ने कुराको निर्णय गर्न बिक्रेता स्वतन्त्र छ ।

## जाँच गरी किनिएको सामान फिर्ता हुँदैन

क्रेता पण्यं परीक्षेत प्राक्स्वयं गुणदोषतः ।
परीक्ष्याभिमतं क्रीतं विक्रेतुर्नाभवेत्पुनः ॥४॥

पहिले नै राम्ररी जाँची, बुझी, हेरी सामान किन्नु पर्दछ र यसरी किनिएको सामान भने फिर्ता हुँदैन ।



## फिर्ता गर्ने परीक्षण काल

त्र्यहाद्दोह्यं परीक्षेत पञ्चाहाद्वाह्यमेव च ।
मुक्तावज्रप्रबालानां सप्ताहं स्यात्परीक्षणम् ॥५॥

लैनू गाईको तीन दिन, भारवाहक वा जोतिने जनावरको पाँच दिन तथा मोति, हीरा, मुगा आदिको एक हप्ता परीक्षण काल हुन्छ । (परीक्षणकालसम्म घरमा लेराई उपभोग गरी कुनै त्रुटी पाए फिर्ता गर्न सकिन्छ) ।

द्विपदामर्धमासं स्यात्पुंसां तद्द्विगुणं स्त्रियाः ।
दशाहं सर्वबीजानामेकाहं लोहवाससाम् ॥६॥

यसैगरी, पुरुष (दास) को आधा महिना, स्त्री (दासी) को एक महिना, सबै खाले बिउबिजनको दश दिन तथा फलामका सामान र वस्त्रको एक दिन परीक्षण काल हुन्छ ।

## किनेपछि बिग्रेका सामान फिर्ता हुँदैन

परिभुक्तञ्च यद्वासः क्लिष्टरूपं मलीमसम् ।
सदोषमपि विक्रीतं विक्रेतुर्नाभवेत्पुनः ॥७॥

किनिसकेपछि उपभोग गरी फाटेका, मैलेका र दोष भेटिएका कपडा किन्नेकै हुन्छ, बेच्नेलाई फिर्ता गर्न सकिन्न ।



## कपडा धुँदा च्यातिए वा रङ गए फिर्ता गर्ने विधि

मूल्याष्टभागो हीयेत सकृद्धौतस्य वाससः ।
द्विः पादस्त्रिस्त्रिभागस्तु चतुर्धौतेऽर्धमेव च ॥८॥

धुँदा च्यातिए वा रङ्ग गए : पहिलो पटकमा आठ भागको एक भाग, दोश्रो पटकमा चार भागको एक भाग, तेश्रो पटकमा तीन भागको एक भाग र चौथो पटकमा आधा रकम कटाएर बिक्रेताले खरिद कर्तालाई रकम फिर्ता गर्नु पर्दछ ।

अर्धक्षयात्तु परतः पादांशापचयः क्रमात् ।
यावत्क्षीणदशं जीर्णं जीर्णस्यानियमः क्षये ॥९॥

पाँचदेखि आठ पटकसम्म धुँदा च्यातिने वा रङ्ग जाने कपडाको खरिदमूल्यको आठ भागको एक भाग बेच्नेले किन्नेलाई रकम दिनु पर्दछ । यसपछि कुनै नियम छैन ।

## जर्तीसम्बन्धी व्यवस्था

**लोहानामपि सर्वेषां हेतुरग्निक्रियाविधौ ।**
**क्षयः सँस्क्रियमाणानान्तेषां दृष्टोऽग्निसङ्गमात् ॥१०॥**

फलाम आदि धातु आगोमा तताएर शुद्ध हुन्छन् । यसरी तताउँदा (वा शुद्धता परीक्षण गर्दा) निम्नानुसार जर्ती जान्छ ।



**सुवर्णस्य क्षयो नास्ति रजते द्विपलं शतम् ।**
**शतमष्टपलं ज्ञेयं क्षयस्स्यात्त्रपुसीसयोः ॥११॥**

आगोमा तताएर सुनको जर्ती जाँदैन । चाँदीको दुई प्रतिशत तथा सीसा र राङमा आठ प्रतिशत जर्ती जान्छ ।

**ताम्रे पञ्चपलं विद्याद्विकारा ये च तन्मयाः ।**
**तद्धेतूनामनेकत्वादयसोऽनियमः क्षये ॥१२॥**

यसैगरी तामामा पाँच प्रतिशत जर्ती जान्छ र केही विकार (परिवर्तन) पनि आउँदछ । धातु धेरै र प्रकार पनि धेरै हुने हुनाले सबै धातुको जर्तीका बारेमा यहाँ बताउन सकिन्न ।

## तौलमा घटबढ हुने अवस्था

**तान्तवस्य च संस्कारे क्षयवृद्धी उदाहृते ।**
**सूत्रकार्पासिकोर्णानां वृद्धिर्दशपलं शते ॥१३॥**

रेशादार वस्तुले बनेका कपडा धोईपखाली गर्दा त्यसको तौलमा घटबढ हुन्छ । कपास, ऊन आदिको धागोको (वा यसले बनेका कपडाको) तौल दश प्रतिशतले बढ्दछ ।

**स्थूलसूत्रवतामेषां मध्यानां पञ्चकं शते ।**
**त्रिपलन्तु सुसूक्ष्माणामन्तः क्षय उदाहृतः ॥१४॥**



यसैगरी मोटो धागोले बनेका कपडाको तौलमा पनि दश प्रतिशतले वृद्धि हुन्छ, मध्यमस्तरको धागोले बनेका कपडामा पाँच प्रतिशत र मसिना धागोले बनेका कपडाको तौलमा तीन प्रतिशतले वृद्धि हुन्छ ।

**त्रिंशांशो रोमविद्धस्य क्षयः कर्मकृतस्य तु ।**
**कौशेयवल्कलानान्तु नैव वृद्धिर्न च क्षयः ॥१५॥**

पशुपंक्षीको रौँले बनेका कपडा धोइपखाली गर्दा (संस्कार गर्दा) तीस प्रतिशत तौल घट्दछ । तर, रेशम र रुखको बोक्रा (सन, सिस्नु, अल्लो आदि) ले बनेका कपडाको तौलमा तलमाथि हुँदैन ।

**क्रीत्वा नानुशयं कुर्याद्वणिक्पण्ये विचक्षणः ।**
**क्षयवृद्धि च जानीयात्पण्यानामागमं तथा ॥१६॥**

वस्तुको तौलमा वा अन्य कुरामा हुने थपघटलाई बिचार गरेर मात्र ब्यापारीले वस्तुको खरिद्बिक्री गर्नु पर्दछ । यसरी किनबेच गर्दा उ निश्चिन्त हुन्छ, पछुताउनु पर्दैन ।

इति क्रीत्वानुशयो नवमं विवादपदम्

✷

नारदीयमनुसंहिता, विवादखण्ड अन्तर्गत किन्नेबेच्नेको बीचको ठगी विवादका बारेमा वर्णन गरिएको क्रीत्वानुशय उपखण्डको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिका श्लोकको संख्याः ४२१+१६=४३७



✷

## ॥ अथ समयस्यानपाकर्म दशमं विवादपदम् ॥

## पाखण्ड र एकाधिकार सम्बन्धी विवाद

### परिभाषा

**पाषण्डनैगमादीनां स्थितिः समय उच्यते ।**
**समयस्यानपाकर्म तद्विवादपदं स्मृतम् ॥१॥**

पाखण्ड (ऋक्, यजु र साम वेद विरुद्धको आचरण गर्ने) र नैगम (ब्यापारी आदिको समूह) ले आफ्नो प्रभुत्व जमाउन बनाउने परिस्थितिलाई “समय” भनिन्छ । यस्तो समयसम्बन्धी विवादलाई “समयस्यानपाकर्म विवाद” भनिन्छ ।

## राज्यभित्र सङ्गठित हुन दिन नहुने वर्ग

**पाषण्डनैगमश्रेणी पूगव्रातगणादिषु ।**
**संरक्षेत्समयं राजा दुर्गे जनपदे तथा ॥२॥**

पाखण्डी, नैगम, श्रेणी (शिल्पकारहरूको समूह), पूग (धन कमाउन मात्र महत्व दिने ब्यापारिक सङ्गठन), व्रात (हतियारधारीको समूह) र ब्राह्मणहरूको मण्डली : यिनलाई राजाले आफ्नो राज्यभित्र सङ्गठित हुन, गर्न नदिनू ।



## यस्ता सङ्गठनले कुनै गतिविधि गर्दा पूर्वस्वीकृति लिनुपर्ने

**यो धर्मः कर्म यच्चैषामुपस्थानविधिश्च यः ।**
**यच्चैषां वृत्त्युपादानमनुमन्येत तत्तथा ॥३॥**

उल्लेखित सङ्गठनहरूले आफ्ना धार्मिक कर्म, भिक्षाटन, बाजा बनाएर गरिने पूजा वा शोभायात्रा, जीवनवृत्तिका उपाय आदि गर्न राज्यबाट पूर्वस्वीकृति लिनु पर्दछ, अन्यथा ती दण्डनीय हुन्छन् ।

## प्रतिवन्ध लगाउने पर्ने गतिविधि

प्रतिकूलञ्च यद्राज्ञः प्रकृत्यवमतञ्च यत् ।
बाधकञ्च यदर्थानां तत्तेभ्यो विनिवर्तयेत् ॥४॥

आफ्नो, देशको र प्रजाको हीतको प्रतिकूल हुने खालका तथा आर्थिक विकासका लागि लाभदायक नहुने खालका कुनै पनि सम्प्रदायका कुनै पनि गतिविधिलाई तुरुन्त प्रतिवन्ध लगाउनू ।

## दबाउनु पर्ने गतिविधि

मिथः सङ्घातकरणमहिते शस्त्रधारणम् ।

परस्परोपतापञ्च तेषां राजा न मर्षयेत् ॥५॥

उद्देश्यविहीन तरिकाले वा छद्म काम गर्ने, जनतामा आतङ्क फैलाउन हातहतियार बोक्ने तथा अशान्ति र अराजकता फैलाउने खालका सङ्घ-सङ्गठनलाई राजाले निर्ममतापूर्वक दबाउनु पर्दछ, फैलन दिनु हुँदैन ।

## बेलैमा नियन्त्रण गर्नुपर्ने गतिविधि

पृथग्गणान् ये भिन्द्युस्ते विनेया विशेषतः ।
आवहेयुर्भयं घोरं व्याधिवत्ते ह्युपेक्षिताः ॥६॥

राजाले आफ्ना गण, सङ्गठन आदिबाट विद्रोह गरी अशान्ति र उपद्रो फैलाउने व्यक्ति वा समूहलाई जतिशक्दो चाँदो दण्ड दिनु पर्दछ, उपेक्षा गरिए यसले पछि महामारीको रूप लिन्छ ।

दोषवत्करणं यत्स्यादनाम्नायप्रकल्पितम् ।
प्रवृत्तमपि तद्राजा श्रेयस्कामो निवर्तयेत् ॥७॥

भलो चाहने राजाले शास्त्र, देश र प्रजा विरुद्धका कुनै पनि गतिविधिलाई नियन्त्रण गर्नुपर्दछ । प्रतिकूलतासँग जुध्दै अनुकूलता बढाउनु पर्दछ ।

इति समयस्यानपाकर्म दशमं विवादपदम्

✷

नारदीयमनुसंहिता, विवादखण्ड अन्तर्गत एकाधिकार र पाखण्ड सम्बन्धी विवादका बारेमा वर्णन गरिएको समयस्यानपाकर्म उपखण्डको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिका श्लोकको संख्याः ४३७+७=४४४

✷

## ॥ अथ क्षेत्रविवाद एकादशं विवादपदम् ॥

## क्षेत्रविवाद

### परिभाषा

सेतुकेदारमर्यादा विकृष्टाकृष्टनिश्चयाः ।
क्षेत्राधिकारा यत्र स्युर्विवादः क्षेत्रजस्तु सः तु ॥१॥

पुल र कृषिक्षेत्रको सीमा र अधिकारलाई लिएर सम्बन्धित क्षेत्रका वासिन्दाका बीचमा हुने विवादलाई “क्षेत्रविवाद” भनिन्छ ।

### क्षेत्रविवादमा मध्यस्तकर्ता



क्षेत्रसीमाविरोधेषु सामन्तेभ्यो विनिश्चयः ।
नगरग्रामगणिनो ये च वृद्धतमा नराः ॥२॥

क्षेत्रसम्बन्धी विवादमा त्यसक्षेत्रमा बस्ने गण्यमान्य व्यक्ति, सीमा सम्बन्धमा जानकारी राख्ने सरकारी अधिकारी र सबभन्दा बूढापाकालाई मध्यस्तकर्ता बनाइनु पर्दछ ।

ग्रामसीमासु च बहिर्ये स्युस्तत्कृषिजीविनः ।
गोपशाकुनिकव्याधा ये चान्ये वनगोचराः ॥३॥

गाउँका सीमानामा वा त्यसको आसपास खेतीपाती गरेर बस्ने कृषक, गोठालाहरू, पशुपंक्षी समाउने व्यक्ति, शिकारी र वनमा बसोबास गर्ने चोर, महात्मा आदिको पनि मध्यस्थता लिन सकिन्छ ।

## क्षेत्रविवादमा आधार

समुन्नयेयुस्ते सीमां लक्षणैरुपलक्षिताम् ।
तुषाङ्गारकपालानां कुम्भैरायतनैर्द्रुमैः ॥४॥

सीमा निर्धारणका लागि भुस, अँगार, खप्पर, पानीको श्रोत र रुखलाई आधार बनाउन सकिन्छ ।



अभिज्ञानैश्च वल्मीकस्थलनिम्नोन्नतादिभिः ।
केदारारामर्मार्गैश्च पुराणैः सेतुभिस्तथा ॥५॥

धमिराको गोलो, ढिस्को, खाल्डो, उर्वरता वा रुखोपना, पुरानो बाटो, पुराना पुल आदिलाई पनि सीमा विवाद सुल्झाउन आधार लिन सकिन्छ ।

निम्नगापहृतोत्सृष्ट नष्टचिह्नासु भूमिषु ।
तत्प्रदेशानुमानाच्च प्रमाणैर्भोगदर्शनैः ॥६॥

जमिन नदीले डुबाएको अवस्थामा र सीमा चिह्न नष्ट हुँदा अनुमान, प्रमाण र भोगचलन हेरी सीमा विवाद सुल्झाउनु पर्दछ ।

## पक्षपात गर्नेलाई दण्ड

अथ चेदनृतं ब्रूयुः सामन्तास्तद्विनिर्णये ।
सर्वे पृथक्पृथग्दण्ड्या राज्ञा मध्यमसाहसम् ॥७॥

बूढापाका वा गण्यमान्य व्यक्तिले सीमा विवादमा पक्षपात गरे वा झूटो बोले तिनलाई मध्यमसाहसको दण्ड दिनू ।

गणवृद्धादयस्त्वन्ये दण्डं दाप्याः पृथक्पृथक् ।
विनेयाः प्रथमेन स्युः साहसेनानृते स्थिताः ॥८॥

अन्य मध्यस्तकर्ताले पक्षपात गरेमा वा झूटो बोलेमा तिनलाई प्रथम साहसको दण्ड दिई अनुशासित बनाउनु पर्दछ ।



## क्षेत्रविवादमा गहन छलफलबाट निर्णय गर्नू

नैकः समुन्नयेत्सीमान्नरः प्रत्ययवानपि ।
गुरुत्वादस्य धर्मस्य क्रियैषा बहुषु स्मृता ॥९॥

जतिसुकै गुनिलो वा विश्वासिलो व्यक्ति भएपनि सीमा सम्बन्धी विवाद एउटाको कुरा सुनेर नसुल्झाउनू, यसमा गहन छलफल हुनु पर्दछ ।

## विवाद् सुल्झाउने विशेष विधि

एकश्चेदुन्नयेत्सीमां सोपवासः समुन्नयेत् ।
रक्तमाल्याम्बरधरः क्षितिमारोप्य मूर्धनि ॥१०॥

यदि सज्जन र विश्वासिलो एउटै व्यक्तिलाई सीमा विवाद् सुल्झाउने जिम्मा दिइन्छ भने उसलाई त्यो दिन उपवास बस्न लगाई राता लुगा लगाउन लगाउनु पर्दछ । त्यसपछि टाउकामा माटो र हातमा भाला लिएर सीमा तोक्ने कामको जिम्मा दिनु पर्दछ ।

## सीमा निर्धारण



यदा च न स्युर्ज्ञातारः सीमाया न च लक्षणम् ।
तदा राजा द्वयोः सीमामुद्धरेदिष्टतः स्वयम् ॥११॥

साँधसीमानाको कुनै प्रमाण नभए एवं जान्ने, सुन्ने र देख्ने पनि कोही नभए प्रशासनले दुवै पक्षका कुरा सुनी विवेक लगाएर सीमा तोकिदिनु पर्दछ ।

अनेनैव गृहोद्याननिपानायतनादिषु ।
विवादविधिराख्यातस्तथा ग्रामान्तरेषु च ॥१२॥

घर, बगैंचा, पानीपँधेरो आदि पानीका श्रोत, घँडेरी र गाउँगाउँका बीचमा हुने सीमा विवादलाई पनि यही विधिले सुल्झाउनु पर्दछ ।

## फोहोर आदिको व्यवस्थापन

अवस्करस्थलश्वभ्रभ्रमार्गस्यन्दनिकादिभिः ।
चतुष्पथसुरस्थानरथ्यामार्गान्न दूषयेत् ॥१३॥

घरबाट निस्कने फोहोर, बलेसीबाट चुहिने पानी आदिलाई चौबाटो, मन्दिर, गल्ली, सडक आदिमा अवरोध नहुने गरी व्यवस्थापन गर्नु पर्दछ ।

## पुल निर्माणका नियम

परक्षेत्रस्य मध्ये तु सेतुर्न प्रतिषिध्यते ।
महागुणोऽल्पबाधश्च वृद्धिरिष्टा क्षये सति ॥१४॥



अर्काको जग्गामा पुल बनाउँदा रोक्न हुँदैन । किन कि यसले एउटालाई हानी भएपनि धेरैलाई फाइदा दिन्छ ।

## पुलका किसिम

सेतुस्तु द्विदिधो ज्ञेयः खन्यो बध्यस्तथैव च ।
तोयप्रवर्तने खन्यो बध्यः स्याद्विनिवर्तने ॥१५॥

निर्बाधरूपमा पानी बग्न मिल्ने गरी बनाइने र बाँध सहित बनाइने गरी पुल दुई किसिमका हुन्छन् ।

## बाँधको नियन्त्रण

नान्तरेणोदकं सस्यं नाशोऽप्यत्युदकेन तु ।
यावाननुदके दोषस्तावानत्युदके स्मृतः ॥१६॥

पानी थोर भए वा बढी भए उब्जनी नासिन्छ त्यसैले आवश्यकता अनुसार पानी लैजान मिल्ने गरी बाँध सहितको पुल बनाइनु पर्दछ ।

## पुल आदिको मर्मत

पूर्वप्रवृत्तमुत्सन्नमपृष्ट्वा स्वामिनन्तु यः ।
सेतुं प्रवर्तयेत्कश्चिन्न स तत्फलभाग्भवेत् ॥१७॥



अर्काको जग्गामा हुने पुराना पुल वा बाँध सहितको पुल मर्मत गर्ने वा नयाँ बनाउने व्यक्तिले जग्गाधनीसँग पैसा लिन सक्दैन न त उसले त्यसबाट नीजि लाभ लिन नै सक्दछ ।

मृते वा स्वामिनि पुनस्तद्वंश्ये चापि मानवे ।
राजानमामन्त्र्य ततः प्रकुर्यात्सेतुकर्म तत् ॥१८॥

कसैको नीजि जग्गामा बनाइएका पुल  मर्मत गर्न अत्यावश्यक हुँदा र त्यो जग्गाको मालिक वा त्यसका हकदार कोही नभेटिँदा त्यसको मर्मत प्रशासनले गर्नुपर्दछ, नत्र यो कार्य जग्गाधनीको वा सरकारको लिखित अनुमति लिएर मात्र गर्नु पर्दछ ।

अतोऽन्यथा क्लेशभाक्स्यान्मृगव्याधनिदर्शनात् ।
इषवस्तस्य नश्यन्ति यो विद्धमनुविध्यति ॥१९॥

जसरी पहिले नै अर्को शिकारीबाट बाण हानी घाइते भएको मृगलाई फेरी अर्को मृगबाट हानिने बाण, गरिने परिश्रम आदि व्यर्थ हुन्छन् त्यसरी नै अर्काको जग्गामा पुल बनाउनेका सबै परिश्रम व्यर्थ हुन्छन् ।

## अर्काको जग्गामा गरिने खेती

अशक्तप्रेतनष्टेषु क्षेत्रिकेष्वनिवारितः ।
क्षेत्रं चेद्विकृषेत्कश्चिदश्नुवीत स तत्फलम् ॥२०॥



कुनै जग्गा धनी अशक्त भए, बिते वा दण्ड भोग्न थाले वा हराए अथवा जग्गाको मालिक वा उसका उत्तराधिकारीले राकेतोक नगरे अर्काको जग्गामा खेती गर्न सक्दछ, बाँझो जग्गा उपभोग गर्दा कुनै दोष लाग्दैन ।

## जग्गा फिर्ता लिँदाका नियम

विकृष्यमाणे क्षेत्रे चेत्क्षेत्रिकः पुनराव्रजेत् ।
खिलोपचारं तत्सर्वं दत्त्वा स्वं क्षेत्रमाप्नुयात् ॥२१॥

कसैको जग्गामा अरु कसैले बालीनाली लगाएको अवस्थामा आफ्नो जग्गा फिर्ता लिन चाहने जग्गाधनीले खेती गर्नेले गरेको सबै खर्च तिरेर मात्र सो जग्गा आफ्नो अधिकारमा लिन सक्दछ ।

## जग्गाको स्वामित्व परिवर्तन

तदष्टभागोपचयाद्यावत्सप्त समा गताः ।
सम्प्राप्ते त्वष्टमे वर्षे भुक्तं क्षेत्रं लभेत सः ॥२२॥

भाडामा लिएको जग्गामा भइरहेको खेतीपाती आदिलाई बेवास्ता गरी जेजति पाइन्छ त्यसमा सन्तुष्ट रहने जग्गाधनी छ भने आठौं वर्षपछि सो जग्गाको मालिक त्यही जग्गा भाडामा लिने वा हडप्ने व्यक्ति हुन्छ ।

## बाँझो जग्गाको किसिम



सम्वत्सरेणार्धखिलं खिलं स्याद्वत्सरैस्त्रिभिः ।
पञ्चवर्षावसन्नन्तु स्यात्क्षेत्रमटवीसमम् ॥२३॥

एकवर्षसम्म बाँझो राखिने जग्गालाई “अर्धखिल (आधा बाँझो)”, तीन वर्षसम्म बाँझो रहने जग्गालाई “खिल (बाँझो)” र लगातार पाँचवर्षसम्म बाँझो रहने जग्गालाई “अरण्य सदृश (बनसमान)” भनिन्छ ।

## घरजग्गा कब्जा

क्षेत्रं त्रिपुरुषं यत्र गृहं वा स्यात्क्रमागतम् ।
राजप्रसादादन्यत्र न तद्भोगः परन्नयेत् ॥२४॥

लगातार तीन पुस्तासम्म कुनै घर, खेत वा बारीमा कब्जा गर्दा पनि कानुनतः अन्यथा निर्णय नभए सो घरजग्गा कब्जा गर्नेकै स्वामित्वमा जान्छ ।

## गोठालो सम्बन्धी नियम

**उत्क्रम्य तु वृतिं यत्र सस्यघातो गवादिभिः ।**
**पालो दण्ड्यो भवेत्तत्र न चेच्छक्तो न वारयेत् ॥२५॥**

पशु हेर्न खटिएको व्यक्तिले गाई आदिबाट खेतबारीमा लगाएको बालीनाली जोगाउन पहल गर्दैन भने उ दण्डित हुन्छ ।

## अर्मलसम्बन्धी व्यवस्था



**समूलसस्यनाशे तु तत्स्वामी धान्यमाप्नुयात् ।**
**वधेन पालो मुच्येत दण्डं स्वामिनि पातयेत् ॥२६॥**

पशुपंक्षीबाट बालीनाली सखाप बनाइए पशुपंक्षीको धनीले जग्गाको धनीलाई अर्मल तिर्नुपर्दछ । साथै सरकारलाई दण्ड पनि तिर्नुपर्दछ ।

**गौः प्रसूता दशाहात्तु महोक्षाजाविकुञ्जराः ।**
**निवार्यास्तु प्रयत्नेन तेषां स्वामी न दण्डभाक् ॥२७॥**

बिहाएको दश दिन नपुगेकी लैनू गाई र अन्य छाडा राखिने घोडा हात्ती, साँढे आदि पशु बालीनाली लगाएको खेतबारीमा पसी नोक्सान गर्न थाले भने तिनलाई

बलपूर्वक धपाउनु पर्दछ, यस्ता पशुका धनीले अर्मल तिर्नु पर्दैन ।

**माषं गां दापयेद्दण्डं द्वौ माषौ महिषीं तथा ।**
**अजाविके सवत्से तु दण्डः स्यादर्धमाषकः ॥२८॥**

बाच्छाबाच्छी, पाडापाडी वा पाठापाठी सहित गाई, भैंसी र बाख्रा छिरेर भएको अन्नबाली नोक्सानीमा क्रमशः एक मासा (एक मासामा लगभग एक ग्राम हुन्छ), दुई मासा र आधा मासा अर्मल तिर्नु पर्दछ ।

नोटः यति बराबरको अर्मल के तिर्ने भनेर कतै खुलाइएको पाइन्न, कसैले सुन भनेका छन् । तर, मेरो विचारमा तत्कालीन प्रचलनमा रहेको मुद्रालाई भन्न खोजिएको हुनु पर्दछ ।

**अदण्ड्या हस्तिनोऽश्वाश्च प्रजापाला हि ते स्मृताः ।**
**अदण्ड्या गर्भिणी गौश्च सूतिका चाभिसारिणी ॥२९॥**

हात्ती, घोडा तथा गर्भिणी, लैनू र साँढेसँगै पसेका गाईले बालीनाली नोक्सान गर्दा अर्मल तिर्नु पर्दैन किन कि यिनलाई प्रजापालक पशु मानिएको छ ।

**प्रोक्तः स द्विगुणः सन्ने वसन्त्यान्तु चतुर्गुणः ।**
**प्रत्यक्षचारकाणान्तु चौरदण्डः स्मृतस्तथा ॥३०॥**

गाईवस्तुले बालीनाली खाएको सुने दोब्बर, रातभर त्यहीँ खाएर बसे त्यसको गोठालाई वा पशुपालकलाई चौबर दण्ड तिराउनू । देखेर पनि बेवास्ता गरे त्यस्ता पशुपालकलाई चोर सरहको दण्ड पनि दिनू ।

**या नष्टाः पालदोषेण गावः क्षेत्रसमाश्रिताः ।**
**न तत्र गोमिनो दण्डः पालस्तद्दण्डमर्हति ॥३१॥**

वस्तुभाउ राम्ररी नहेरेर हुने बालीनालीको नोक्सानीका लागि पशुधनी नभई गोठालो (राखिएको भए) दोषी र दण्डनीय हुन्छ ।

## पशुहानी र अर्मलका थप नियम

**राजग्राहगृहीतो वा वज्राशनिहतोऽपि वा ।**
**अथ सर्पेण दष्टो वा गिर्यग्रात्पतितोऽपि वा ॥३२॥**



सरकारले समातेर लगे वा चटयाङ परेर, सर्पले टोकेर र रुख वा रुखका हाँगाले किचिएर वा लडेर वा कुनै भवितव्य परी,...।

**न तत्र पालदोषः स्यान्नैव दोषोऽस्ति गोमिनाम् ।**
**गोभिस्तु भक्षितं धान्यं यो नरः प्रतिमार्गति ॥३३॥**

पशुको हानीनोक्सानी हुँदा पशुमालिक र गोठालो दोषी हुँदैन । अर्मलको दाबी गरिएको छ र..।

**सामन्तस्य शदो देयो धान्यं यत्तत्र वापितम् ।**
**गवत्रं गोमिने देयं धान्यं तत्कृषकस्य तु ॥३४॥**

गाउँका भद्रभलादमी पनि त्यो दाबीलाई समर्थन गर्दछन् भने गोठालाले वा पशुमालिकले अर्मल तिर्नुपर्दछ ।

**ग्रामोपान्ते च यत्क्षेत्रं विवीतान्ते महापथे ।**
**अनावृते चेत्तन्नाशे न पालस्य व्यतिक्रमः ॥३५॥**

गाउँका नजिकैका वा आसपासका, बगैंचासँग जोडिएका, राजमार्गका दुवैतिरका र चरिचरन वा सार्वजनिक चौरसँग जोडिएका जग्गामा छिरेर घरपालुवा पशुले गर्ने हानीनोक्सानीमा गोठालोलाई दोषी बनाउन मिल्दैन ।

## पर्खाल लगाउने नियम



**पथिक्षेत्रे वृतिः कार्या यामुष्ट्रो नावलोकयेत् ।**
**न लङ्घयेत् पशुर्नाश्वो न भिन्द्याद्याञ्च सूकरः ॥३६॥**

बाटामा जग्गा हुनेले आफ्नो जग्गालाई उँटले देख्न नसक्ने गरी, घोडा आदि जनावरले नाघ्न नसक्ने गरी र बँदेल आदिले भत्काउन नसक्ने गरी अग्लो पर्खालले बार्नु पर्दछ ।

## खेतीपातीका नियम

**खातखातस्य केदारमाहुः शल्यवतो मृगम् ।**
**इषषस्तस्य नश्यन्ति यो विद्धमनुविध्यति ॥३७॥**

उर्बर र भूमिमै खनजोत गरी खेतीपाती गर्नु, यसैबाट फाइदा हुन्छ । अनुर्बर भूमिमा गरिने खेतीबाट नाश मात्र हुन्छ । मृगलाई पहिलो बाण लागेपछि पछिल्लो बाण हान्नु बाण खेर फाल्नु भएजस्तै अर्काको जग्गाका खेती गर्नेले पनि व्यर्थमा परिश्रम खेर फाल्दछ ।

### जग्गा निफन्ने कार्य

**अशक्तप्रेतनष्टेषु क्षेत्रिकेष्वनिवारितः।**
**विकृष्यमाणे क्षेत्रे चेत् क्षेत्रिकः पुनराव्रजेत् ॥३८॥**
**बीजापचारं तत्सर्वं दत्त्वा स्वं क्षेत्रमाप्नुयात् ।**
**गृहं क्षेत्रञ्च विज्ञेयं वासहेतुः कुटुम्बिनाम् ॥३९॥**



जग्गाको धनी अशक्त भएको वा बितेका कारण अरुहरूले खेतीपाती गरिरहेका भए उसको लागत दिएर मात्र जग्गाधनी वा उसका हकदारले सो जग्गा पाउन सक्दछन् । किन कि घरखेत भनेको मानिसको गाँसबासका लागि नै हुनेगर्दछ ।

### गाँस र बासको प्रत्याभूति

**वृद्धे जनपदे राज्ञो धर्मः कोशश्च वर्धते ।**
**हीयते हीयमाने च वृद्धिहेतुमतः श्रयेत् ॥४०॥**

समुदाय र प्रजाको भलाईमा राजाको भलाई गाँसिएको हुन्छ । घर, जग्गा प्रजाको भलाईका लागि नै उपयोग हुने गर्दछन् । (राजाले प्रजाको गाँस, बासको प्रत्याभूति दिनु पर्दछ) ।

इति क्षेत्रविवाद एकादशं विवादपदम्

नारदीयमनुसंहिता, विवादखण्ड अन्तर्गत क्षेत्रविवादका बारेमा वर्णन गरिएको क्षेत्रविवाद उपखण्डको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

शुरुदेखिका श्लोकको संख्याः ४४४+४०=४८४



## ॥ अथ स्त्रीपुंसयोगो द्वादशं विवादपदम् ॥

## स्त्री-पुरुष विवाद

### परिभाषा

**विवाहादिविधिः स्त्रीणाम्यत्र पुंसाञ्च कीर्त्यते ।**
**स्त्रीपुंसयोगसञ्ज्ञन्तु विवादपदमुच्यते ॥१॥**

स्त्रीको पुरुषसँग विवाह आदि विधिले एक हुनुलाई स्त्री-पुरुष मिलन भनिन्छ । यसरी स्त्री र पुरुषका बीचमा मिलन हुँदा वा भइसकेपछि हुने विवादलाई "स्त्रीपुंसयोग विवाद" भनिन्छ ।

## वरण पछि पाणिग्रहण

स्त्रीपुंसयोस्तु सम्बन्धे वरणं प्राग् विधीयते ।
वरणाद् ग्रहणं पाणेः संस्कारोऽथ द्विलक्षणः ॥२॥

स्त्री तथा पुरुषका सम्बन्धमा पहिले वरण हुन्छ । वरण गरेपछि "पाणिग्रहण" हुन्छ । विवाह संस्कारका यिनै दुई लक्षण हुन् ।

## विवाहमा वरणभन्दा पनि पाणिग्रहण अनीवार्य

तयोरनियतं प्रोक्तं वरणं दोषदर्शनात् ।
पाणिग्रहणमन्त्रश्च नियतं दारलक्षणम् ॥३॥



यी दुई लक्षणमध्ये पनि दोष देखाउन सकिने हुनाले विवाहमा वरण अनीवार्य छैन तर मन्त्रोच्चारणपूर्वकको पाणिग्रहण अनीवार्य छ ।

## सवर्ण विवाह श्रेयस्कर

ब्राह्मणक्षत्रियविशां शूद्राणाञ्च परिग्रहे ।
सजातिः श्रेयसी भार्या सजातिश्च पतिः स्त्रियाः ॥४॥

ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्रका पाणिग्रहणमा सवर्णा भार्या श्रेय हुन्छ तथा सवर्ण पति स्त्रीलाई पनि श्रेय हुन्छ ।

## ब्राह्मणका र शूद्राका अन्य वर्णसँग विवाह

**ब्राह्मणस्यानुलोम्येन स्त्रियोऽन्यास्तिस्त्र एव तु ।**
**शूद्रायाः प्रातिलोम्येन तथान्ये पतयस्त्रयः ॥५॥**

वर्णानुसार सुल्टो क्रमले ब्राह्मणका अरु तीन वर्णका पत्नी हुन सक्दछन् । शूद्राका उल्टो क्रमले अरु तीन वर्णका पति हुन सक्दछन् ।

## क्षत्रिय, वैश्या आदिका अन्य वर्णसँगको विवाह

**द्वे भार्ये क्षत्रियस्यान्ये वैश्यस्यैका प्रकीर्त्तिता ।**
**वैश्याया द्वौ पती ज्ञेया विकोऽन्यः क्षत्रियापतिः ॥६॥**



क्षत्रियका अरु दुई वर्णका पत्नी हुन सक्दछन् । वैश्यका अरु एक वर्णका पत्नी हुन सक्दछन् । वैश्याका उल्टो क्रमले अरु दुई वर्णका पति हुन सक्छन् । क्षत्रियाका उल्टो क्रमले अरु एक वर्णका पति हुन सक्दछन् ।

## विवाहमा छाड्नुपर्ने पुस्ता

**आ सप्तमात् पञ्चमाद्वा वन्धुभ्यः पितृमातृतः ।**
**भविवाह्याः सगोत्राः स्युः समानप्रवरास्तथा ॥७॥**

बाबुपट्टि सात र आमापट्टि पाँच पुस्ता (सपिण्डताका कारण), सगोत्री र सप्रवर विवाह योग्य हुँदैनन् ।

## मर्द भएको प्रमाणित भएपछि मात्र पुरुषले विवाह गर्नू

परीक्ष्य पुरुषः पुंसत्वे निजैरेवाङ्गलक्षणैः ।
पुमाँश्चेदविकल्पेन स कन्यां लब्धुमर्हति ॥८॥

आफ्नो अङ्गलक्षणले पुरुषत्व जाँचेर मर्द भएको निश्चित भएपछि मात्र पुरुषले कन्या ग्रहण गर्न सक्दछ ।

## मर्दका लक्षण

सुवद्धजत्रुजान्वस्थिः सुबद्धांसशिरोरुहः ।

स्थूलधाटास्तनूरूत्वगविलम्रगतिस्वरः ॥९॥
रेतोस्योत्प्लवते नाप्सु ह्यादि मुत्रञ्च फेनिलम् ।
पुमान् स्याल्लक्षणैरेतैर्विपरीतैस्तु षण्ढकः ॥१०॥

जसका घुँडाका र काँध भित्रका हाड बलिया र ठूला छन्, निधार माथिका कपाल बलिया छन्, जिब्रोको फेद मोटो छ, छाला र शरीर रौंमय छ, गति र स्वर सबल छ, जसको वीर्य पानीमा घुल्दैन तथा स्वावाभिक पिसाब फिँजले युक्त हुन्छ त्यो मर्द हो नत्र नपुंसक हो ।

## नपुंसकका किसिम

चतुर्दशविधः शास्त्रे षण्ढो दृष्टो मनीषिभिः ।

चिकित्स्यश्चाचिकित्स्यश्च तेषामुक्तो विधिः क्रमात्॥११॥

विद्वानहरुले करिब चौध प्रकारका नपुंसक निश्चित गरेका छन्। तिनमा औषधी गरी निको पार्न सकिने र नसकिने नपुंसकका बारेमा क्रमैले बताइन्छ।

निसर्गषण्ढो वध्रश्च पक्षाषण्ढस्तथैव च।
अभिशापाद् गुरो रोगाद्देवक्रोधात्तथैव च॥१२॥

(१) स्वभावले नपुंसक (२) जन्मजात नपुंसक अर्थात प्रजनन अङ्गहरु काम लाग्ने नभएको नपुंसक, (३) महिनामा एक पक्ष सम्भोगको शक्ति नहुने नपुंसक (४) गुरुको श्रापले गर्दा भएको नपुंसक, (५) रोगले गर्दा भएको नपुंसक र (६) देवताको रिसले गर्दा भएको नपुंसक,...।



ईर्ष्याषण्ढश्च सेव्यश्च वातरेता मुखेभगः।
आक्षिजो मोधवीजश्च शालीनोऽन्यापतिस्तथा॥१३॥

(७) नारीका प्रति विद्वेषताका कारणले हुने नपुंसक, (८) नारीको सेवा गर्नाले हुने नपुंसक, (९) सम्भोगकालमा वीर्यको साटो वायुमात्र निक्लने नपुंसक, (१०) मुखमा सम्भोग गर्ने खालको नपुंसक, (११) वीर्यत्याग गर्ने बेलामा वीर्य स्खलन नभई भित्रै अडकिएर बस्ने खालको नपुंसक, (१२) शुक्रबाट गर्भ उत्पन्न नहुने खालको नपुंसक, (१३) सम्भोगकालमा जननेन्द्रिय नउठ्ने नपुंसक र (१४) आफ्नी पत्नीलाई छाडी परायास्त्रीमा रम्ने खालको नपुंसक गरी चौध थरी नपुंसक हुन्छन्।

## नपुंसकता हटाउने उपाय

तत्राद्यावप्रतीकारौ पक्षाख्यो मासमाचरेत् ।
अनुक्रमात्तु यस्यास्य कालः सम्वत्सरः स्मृतः ॥१४॥

शुरुका दुईको नपुंसकता हटाउने कुनै उपाय छैन । पक्ष-नपुंसकलाई एक महिनासम्म तथा क्रम अनुसारका अरुहरुलाई एक वर्षसम्म कुर्नू ।

ईर्ष्याषण्ढादयो येऽन्ये चत्वारः समुदाहृताः ।
सन्त्यक्तव्या पतितवत् क्षतयोन्या अपि स्त्रिया ॥१५॥

नारी विद्वेषजन्य आदि चार थरी नपुंसक उपयुक्त हुँदाहुँदै पनि तिनलाई पतित सरह मानी परित्याग गर्नु पर्दछ ।



### नपुंसक पतिकी पत्नीबाट पुनः अर्को पति ग्रहण

अक्षिप्तमोघबीजौ च पत्यावप्रतिकर्मणि ।
पतिरन्यः स्मृतौ नार्या वत्सरं सम्प्रतीक्ष्य तु ॥१६॥

सम्भोग गर्दा पनि जसको जननेन्द्रिय उठ्दैन तथा जसको शुक्रबाट गर्भोत्पत्ति हुँदैन, त्यस्ताकी स्त्रीले एक साल कुरी अर्को पति ग्रहण गर्नु पर्दछ ।

### नपुंसकताको सामान्य उपचार

शालीनस्यापि धृष्टस्त्रीसंयोगाद् भज्यते ध्वजः ।

तं हीनवेषमत्तस्त्रीवालान्धाभिरुपक्रमेत् ॥१७॥

स्त्रीसम्पर्कका समयमा जसको जननेन्द्रिय उठ्दैन उसले कम कपडा लाएका स्त्री वा बालिका आदि हेरेर क्रमशः रतिको उत्तेजना बढाउनू ।

## त्याज्य पति

अन्यस्यां यो मनुष्यः स्यादमनुष्यः स्वयोषिति ।
लभेत सान्यं भर्तारमेतत् कार्यं प्रजापतेः ॥१८॥

जो पुरुष अरु स्त्रीका साथ पुरुषोचित कार्य गर्दछ तर आफ्नी स्त्रीका साथ गर्दैन त्यस्तो पतिकी स्त्रीले त्यो पतिलाई त्याग गर्नका लागि प्रजापतिले निर्देशन दिएका छन् ।



## नपुंसकलाई विवाहको अधिकार छैन

अपत्यार्थं स्त्रियः सृष्टाः स्त्री क्षेत्रं वीजिनः नराः ।
क्षेत्रं बीजवते देयन्नाबीजी क्षेत्रमर्हति ॥१९॥

सन्तानका लागि नै स्त्रीको सृष्टि भएको हो । स्त्री खेत र पुरुष बीजधारी हो । बीजधारीलाई खेत दिनू, बीज नहुनेले खेत कमाउने अधिकार छैन, सक्दैन ।

## कन्यादानको अधिकार

पिता दद्यात् स्वयं कन्यां भ्राता वानुमते पितुः ।
पितामहो मातुलश्च सकुल्या बान्धवास्तथा ॥२०॥

बाबुले स्वयं आफैँले वा दाजुभाईले कन्यादान गर्नू अथवा बाबुको अनुमतिले हजूरबुबा, मामा, सपिण्डी र बान्धवले पनि कन्यादान गर्न सक्दछन् ।

माताभावे तु सर्वेषां प्रकृतौ यदि वर्तते ।
तस्यामप्रकृतिस्थायां दद्युः कन्यां सजातयः ॥२१॥

यी सबै नहुँदा माता यदि प्राकृतिक अवस्था (शारीरिक एवं मानसिकरूपमा सक्षम) मा छिन् भने तिनले कन्यादान गर्न सक्दछिन्, अप्राकृतिक भएमा त कुटुम्ब वा सपिण्डीले गर्न सक्दछन् (गर्नु पर्दछ) ।



## स्वयम्वर

यदा तु नैव कश्चित् स्यात् कन्या राजानमाव्रजेत् ।
अनुज्ञया वरं तस्य प्रतीत्य वरयेत् स्वयम् ॥२२॥

जसको कोही छैन ती कन्याले राजालाई प्रार्थना गर्नू । उनको अनुमतीले कन्या स्वेच्छाले वर चयन गर्न सक्दछे ।

सवर्णमनुरूपञ्च कुलरूपवयः श्रुतैः ।

सह धर्मं चरेत्तेन प्रजाश्चोत्पादयेत्ततः ॥२३॥

यस्ती कन्याले कुल, शील, उमेर तथा विद्याले सम्पन्न आफू अनुरुप सवर्ण वरलाई सहधर्मीको रुपमा ग्रहण गरी उ मार्फत सन्तान उत्पादन गर्न सक्दछे ।

## विदेश गएका पतिलाई कुर्ने अवधि

प्रतिगृह्य च यः कन्यां वरो देशान्तरं ब्रजेत् ।
त्रीनृतून् समतिक्रम्य कन्यान्यं वरयेद्वरम् ॥२४॥

जुन वर कन्या ग्रहण गरेपछि विदेश जान्छ, त्यस्ती स्त्रीले तीन ऋतुसम्म कुर्नु त्यसपछि उ अर्को वरलाई वरण गर्न सक्दछे ।



## बेलैमा कन्यादान नगर्दाको दोष

कन्या नर्तुमुपेक्षेत बान्धवेभ्यो निवेदयेत् ।
ते चेन्न दद्युस्तां भर्त्रे ते स्युर्भ्रूणहभिः समाः ॥२५॥

कन्याले आफू परसरेको उपेक्षा नगरी कन्यादानका लागि बान्धवलाई भन्नु पर्दछ । यदि ती कन्यादान गरी दिँदैनन् भने भ्रूणहत्यारा हुन्छन् ।

यावन्तश्चर्तवस्तस्याः समतीता विना पतिम् ।
तावत्यो भ्रूणहत्याः स्युस्तस्य यो न ददाति ताम् ॥२६॥

पतिबिना कन्याका जति ऋतु वित्दछन् त्यति नै वटा भ्रूणहत्या गरेको पाप उनको कन्यादान नगर्नेलाई लाग्दछ ।

अतीऽप्रवृत्ते रजसि कन्यां दद्यात् पिता सकृत् ।
महदेनः स्पृशदेनमन्यथैष विधिः सताम् ॥२७॥

यसैले रजस्वला हुनु अघि नै पिताले कन्यादान गर्नू । अन्यथा गर्दा कन्याका पितालाई महापाप हुन्छ ।

### एकपटक मात्र गरिने कुरा

सकृदंशो निपतति सकृत् कन्या प्रदीयते ।

सकृदाह ददानीति त्रीण्येतानि सकृत् सकृत् ॥२८॥

अंशबण्डा एक पटक हुन्छ, कन्या एक पटक नै दिइन्छे र दान दिन्छु भनी एक पटक मात्र भनिन्छ-यी तीन कुरा सज्जनहरुबाट एक-एक पटक मात्र हुन्छ ।

### विवाहका विधि अनुसार विवाहमा हुने लचकता

ब्राह्मादिषु विवाहेषु पञ्चस्वेष विधिः स्मृतः ।
गुणापेक्षं भवेद्दानमासुरादिषु च त्रिषु ॥२९॥

ब्राह्म, प्राजापत्य, आर्ष, दैव र गान्धर्व विधिको विवाहमा कन्यादान एकपटक मात्र गरिन्छ । आसुर आदि तीन प्रकारका विवाहमा गुण अनुरुप एउटालाई कन्या दिन्छु

भनी वचन दिएपछि पनि त्योभन्दा गुणी वर भेटिए फेरी अर्कोलाई कन्या दिन सकिन्छ ।

**कन्यायां दत्तशुल्कायां ज्यायाँश्चेद्वर आव्रजेत् ।**
**धर्मार्थकामसंयुक्तं वाच्यं नत्रानृतं भवेत् ॥३०॥**

कन्यादानका लागि शुल्क लिएपछि यदि धर्म, अर्थ, काम आदिले अधिक गुणी वर भेटिए उसलाई कन्यादान दिनू । यो बेला पूर्वशुल्कदान फिर्ता गर्नु पर्दछ ।

**कन्या र केटालाई लगाइने आरोप**

**नादुष्टां दूषयेत् कन्यां नादुष्टं दूषयेद्वरम् ।**

**दोषे तु सति नागः स्यादन्योन्यं त्यजतास्तयोः ॥३१॥**

अदुष्ट कन्या या वरलाई दुष्ट नभन्नू । दुष्ट हुँदा परस्परमा एकले अर्कोलाई को त्याग गर्दा (अस्वीकार गर्दा) कुनै अपराध हुँदैन ।

**कारण नभई कन्यादान नदिने व्यक्ति दण्डनीय**

**दत्वा न्यायेन यः कन्यां वराय न ददाति ताम् ।**
**अदुष्टश्चेद्वरो राज्ञा स दण्ड्यस्तत्र चौरवत् ॥३२॥**

विधिपूर्वक टिकाटालो गरी पिता कन्या दिँदैनन् र वर पनि दुष्ट छैन भने राजाबाट ती पिता चोरसरह दण्डित हुन योग्य हुन्छन् ।

## कन्याको दोष नलुकाउनू

यस्तु दोषवतीं कन्यामनाख्याय प्रयच्छति ।
तस्य कुर्यान्नृपो दण्डं पूर्वसाहसचोदितम् ॥३३॥

दोष भएकी कन्यालाई दोष छैन भनेर दिन्छ भने त्यस्तो कन्याका पितालाई राजाले पूर्वसाहसको दण्ड दिनू ।

## कन्यालाई लगाइने मिथ्या आरोप र दण्ड

अकन्येति तु यः कन्यां ब्रूयाद् द्वेषेण मानवः ।

स शतं प्राप्नुयाद्दण्डन्तस्या दोषमदर्शयेत् ॥३४॥

जो द्वेष राखी कन्यालाई अकन्या (क्षता वा अप्राकृतिक) भन्दछ तर कन्याको दोष प्रमाणित गर्न सक्दैन, उसले सय पण जरिवाना तिर्नु पर्दछ ।

## निर्दोष विवाहिता कन्यालाई परित्याग गर्न नपाइने

प्रतिगृह्य तु यः कन्यामदुष्टामुत्सृजेद्वरः ।
विनेयः सोऽप्यकामोऽपि कन्यां तामेव चोद्वहेत् ॥३५॥

दोष नभएकी कन्यालाई ग्रहण गरी जो परित्याग गर्दछ उसले इच्छा नहुँदानहुँदै पनि ती कन्यालाई विवाह गर्नु पर्ने नै हुन्छ ।

## कन्याका दोष

दीर्घकुत्सितरोगार्ता व्यङ्गा सँस्पृष्टमैथुनाः ।
धृष्टान्यगतभावाश्च कन्यादोषाः प्रकीर्तिताः ॥३६॥

दीर्घरोगी, कुष्ठ आदि जस्ता खराब रोगका रोगी, दरिद्रता आदिले पीडित, कम अङ्ग भएकी, पूर्वभोक्ता, निर्लज्जा र अर्को पुरुषप्रति आशक्ती-यी कन्याका दोष हुन् ।

## वरका दोष

उन्मत्तपतितक्लीबदुर्भगत्यक्तबान्धवाः ।

कन्यादोषौ च यौ पूर्वविष दोषगणो वरे ॥३७॥

उन्मत्त, पतित, नपुंसक, कुठाऊँमा सम्भोग गर्ने, आफन्तले छाडेको र माथि बताइएका कन्याका दोष-यी वरका दोष हुन् ।

## विवाहका विधि

अष्टौ विवाहा वर्णानां संस्काराख्याः प्रकीर्तिताः ।
ब्राह्मस्तु प्रथमस्तेषां प्राजापत्यस्तथैव च ॥३८॥
आर्षश्चैवाथ दैवश्च गान्धर्वोऽथासुरस्तथा ।
राक्षसोऽनन्तरस्तस्मात् पैशाचश्चाष्टमोऽधमः ॥३९॥

संस्कारका लागि वर्णका आठ प्रकारका विवाह-विधि हुन्छन् । तिनमा ब्राह्म पहिलो विधि हो । त्यसपछि प्राजापत्य हो । आर्ष, दैव, गान्धर्व, आसुर, राक्षस र पैशाच गरी यि आठ विवाहका विधि हुन् भनी बताइएको छ ।

सत्कृत्याहूय कन्यान्तु ब्राह्मो दद्यात् स्वलङ्कृताम् ।
सह धर्मञ्चरेत्युक्त्वा प्राजापत्यो विधीयते ॥४०॥

ब्राह्म विवाहमा कन्याका पिताले वरलाई निमन्त्रणा गरी सत्कारपूर्वक सजाइएकी कन्या दिन्छन् । प्राजापत्य विवाहमा 'दुबै मिलेर धर्माचरण गर्नु' भनी कन्याका पिताले कन्यादान गर्दछन् ।

वस्त्रगोमिथुने दत्त्वा विवाहस्त्वार्ष उच्यते ।

अन्तर्वेद्यान्तु दैवः स्यादृत्विजे कर्म कुर्वते ॥४१॥

वस्त्र, गाई र साँढेको दान गरी सम्पादन गरिने विवाहलाई आर्ष विवाह भनिन्छ । यज्ञस्थलमा ऋत्विजलाई गरिने कन्यादान दैव विवाह हो ।

इच्छन्तीमिच्छते प्राहुर्गान्धर्वो नाम पञ्चमः ।
विवाहास्त्वासुरो ज्ञेयः शुल्कसंव्यवहारतः ॥४२॥

एकआपसमा चाहने पुरुषलाई दिइने कन्यादान पाँचौं गान्धर्व विधि हो । शुल्क लिएर गरिने कन्यादान आसुर विधि भनेर चिनिन्छ ।

प्रसह्यहरणादुक्तो विवाहो राक्षसः स्मृतः ।

सुप्तप्रमत्तोपगमात् पैशाचश्चाष्टमोऽधमः ॥४३॥

बलपूर्वक कन्याको हरणलाई राक्षस विवाह भनिन्छ । सुतेकी र होस नभएकी कन्यालाई बलजफ्ती भोग गरी गरिने विवाह पैशाच नाम गरेको आठौं विवाह विधि हो ।

एषां तु धर्म्याश्चत्वारो ब्राह्माद्याः समुदाहृताः ।
साधारणः स्याद् गन्धर्वस्त्रयोऽधर्म्यास्ततः परे ॥४४॥

यिमध्ये ब्राह्म आदि गरिएका शुरुका चार विवाहका विधि धार्मिक विधि हुन् । गन्धर्व आदि तीन विवाहका विधि साधारण विधि हुन् ।



## पुनर्भू आदि कन्याहरू

परपूर्वाः स्त्रियस्त्वन्याः सप्त प्रोक्ता यथाक्रमम् ।
पुनर्भूस्त्रिविधा तासां स्वैरिणी तु चतुर्विधा ॥४५॥

क्रमानुसार सात अरु अन्यपूर्वा (पहिले नै भोगिएका) स्त्री हुन्छन् । तिनमा पुनर्भू तीन प्रकारका र स्वैरिणी चार प्रकारका हुन्छन् ।

कन्यैवाक्षतयोनिर्या पाणिग्रहणदूषिता ।
पूनर्भूः प्रथमा सोक्ता पुनः संस्कारकर्मणा ॥४६॥

पाणिग्रहणबाट दूषित अक्षत योनी कन्या पहिली पुनर्भू हो । यस्ती कन्याको फेरी संस्कार हुन्छ ।

**देशधर्मानवेक्ष्य स्त्री गुरुभिर्या प्रदीयते ।**
**उत्पन्नसाहसान्यस्मै सा द्वितीया प्रकीर्तिता ॥४७॥**

देशधर्म अनुसार गुरुहरुबाट दिइएको पुरुषलाई लत्याएर साहसपूर्वक जो अर्को पुरुषका साथ जान्छे उनी दोश्रो प्रकारकी पुनर्भू हुन् ।

**असत्सु देवरेषु स्त्री बान्धवैर्या प्रदीयते ।**
**सवर्णायासपिण्डाय सा तृतीया प्रकीर्तिता ॥४८॥**



देवरहरु नभएर बन्धुबान्धवले जुन स्त्रीलाई सवर्ण र सपिण्डीलाई दिन्छन् ती तेश्री खालकी पुनर्भू हुन् ।

**प्रसूता वा प्रसूता वा पत्यावेव तु जीवति ।**
**कामात् समाश्रयेदन्यं स्वैरिणी प्रथमा तु सा ॥४९॥**

पति जीवित हुँदै सुत्केरी भएकी वा नभएकी स्त्री स्वेच्छाले अन्य पुरुषका आश्रयमा रहन्छे भने उनी पहिलो प्रकारकी स्वैरिणी हुन् ।

**कौमारं पतिमुत्सृज्य या त्वन्यपुरुषाश्रिता ।**
**पुनः पत्युर्गृहं यायात् सा द्वितीया प्रकीर्तिता ॥५०॥**

जो कुमार पतिलाई छाडी अन्य पुरुषका साथ बस्दछे र पछि फर्केर फेरी पहिलो पतिकोमा आउँदछे उ दोश्रो किसिमकी स्वैरिणी हो ।

मृते भर्तरि या प्राप्तान्देवरादीनप्यपास्य तु ।
उपगच्छेत् परं कामात् सा तृतीया प्रकीर्तिता ॥५१॥

लोग्नेको मृत्यु पछि योग्य देवरको उपेक्षा गरी जो पर पुरुषमा स्वेच्छाले आश्रित हुन्छे उनी तेश्रो थरीकी स्वैरिणी हुन् ।

प्राप्ता देशाद्धनक्रीता क्षुत्पिपासातुरा च या ।
तवाहमित्युपगता सा चतुर्थी प्रकीर्तिता ॥५२॥



धनले किनिएर वा भोकप्यासले आतूर भई “म तिम्री हुँ” भन्दै अर्को पुरुषको मनोरञ्जनको साधन हुने स्त्री चौथो प्रकारकी स्वैरिणी हुन् ।

पुनर्भुवामेष विधिः स्वैरिणीनाञ्च कीर्तितः ।
पूर्वा पूर्वा जघन्यासां श्रेयसी तूत्तरोत्तरा ॥५३॥

माथि बताइएका पुनर्भू र स्वैरिणीमा पनि अघिल्लाअघिल्ला नीच र पछिल्लापछिल्ला श्रेय हुन्छन् भन्ने विधान छ ।

## सन्तानमाथिको अधिकार

अपत्यमृत्पादयितुस्तासां या शुल्कतो हृता ।

**अशुल्कोपनतायान्तु क्षेत्रिकस्यैव तद्भवेत् ॥५४॥**

यी सात थरीका स्त्रीमध्ये पनि जो शुल्क तिरेर लिइएकी छ त्यसबाट जन्मने सन्तान उत्पादकको हुन्छ । शुल्क नतिरी लिइएकी छ भने क्षेत्रिक (खेत) कै हुन्छ ।

**क्षेत्रिकस्य यदज्ञानात् क्षेत्रे बीजं प्रकीर्यते ।**
**न तत्र बीजिनो भागः क्षेत्रिकस्यैव तद्भवेत् ॥५५॥**

लोग्नेले थाहा नपाई उसकी स्त्रीबाट जन्मने जारपुत्र जारको नभई पतिकै हुन्छ ।

**ओघवाताहृतं बीजं क्षेत्रे यस्य प्ररोहति ।**
**फलभाग् यस्य तत्क्षेत्रं न बीजी फलभाग् भवेत् ॥५६॥**



अर्काको बीज हावाले उडाएर कसैको खेतमा खसी उम्रन्छ भने त्यसबाट उब्जिने फल खेतमालिककै हुन्छ बीजमालिकको हुँदैन ।

**महोक्षो जनयेद्वत्सान्यस्य गोषु व्रजे चरन् ।**
**तस्य ते यस्य ता गावो मोघं स्पन्दितमार्षभम् ॥५७॥**

कसैको साँढे अरु कसैको गोठमा छिरेर कुनै गाईमा सन्तान उत्पादन गराउँदछ भने त्यो जसको गाई हो त्यसैको हुन्छ जसको साँढे हो त्यसको हुँदैन ।

**क्षेत्रिकानुमतं बीजं यस्य क्षेत्रे प्रमुच्यते ।**
**तदपत्यं द्वयोरेव बीजिक्षेत्रिकयोर्मतम् ॥५८॥**

खेत मालिकको स्वीकृतिमा कुनै खेतमा अर्कैले बीउ छरेको छ भने त्यसबाट हुने उब्जनी खेतमालिक र बिजमालिक दुवैको हुन्छ ।

नर्ते क्षेत्रं भवेत् सस्यं न च बीजं विनास्ति तत् ।
अतोऽपत्यं द्वयोरिष्टं पितुर्मातुश्च धर्मतः ॥५९॥

खेत बिना बालीनाली हुँदैन र बीज नभई पनि बालीनाली हुँदैन । यसैले सन्तान पिता र माता दुवैको धर्मतः सन्तान हुन्छ ।

## सङ्ग्रहण



नाथवत्या परगृहे संयुक्तस्य स्त्रिया सह ।
दृष्टं सङ्ग्रहणं तज्ज्ञैर्नागतायाः स्वयं गृहे ॥६०॥

अरुको घरमा उसकी स्त्रीका साथ अर्कोको सम्पर्कलाई मानिसहरु संग्रहण भन्दछन् । तर, परपुरुषकै घरमा गई उसँग सम्पर्क गर्दछे भने त्यहाँ सङ्ग्रहण हुँदैन, पुरुषको दोष हुँदैन ।

## स्त्रीले अर्को पति रोज्दा दोष नहुने अवस्था

प्रदुष्टत्यक्तदारस्य क्लीबस्य क्षमकस्य च ।
सेच्छैरुपेयुषो दारैर्न दोषः साहसो भवेत् ॥६१॥

दुष्ट पतिले त्यागेकी वा नपुंसक वा क्षयरोगी पति हुने स्त्री स्वेच्छाले अर्कै पुरुषका साथ लागे पुरुषको कुनै दोष हुँदैन ।

## आशयकरणी

परस्त्रिया सहाकालेऽदेशे वा भवतो मिथः ।
स्थानसम्भाषणामोदास्त्रयः सङ्ग्रहणक्रमाः ॥६२॥

परस्त्रीसँग अकाल र अस्थानमा भेटेर सँगै उभिनु, कुराकानी गर्नु तथा ख्यालठट्टा गर्नु-यी तीन कुरालाई क्रमैले सङ्ग्रहण भनिएको छ ।

नदीनां सङ्गमे तीर्थेष्वारामेषु वनेषु च ।

स्त्रीपुमाँश्च समेयातां ग्राह्यं सङ्ग्रहणं भवेत् ॥६३॥

नदीको सङ्गममा, तीर्थमा, उद्यानमा र वनमा हुने स्त्री र पुरुषको मिलनलाई पनि सङ्ग्रहण भनिएको छ ।

दूतीप्रस्थापनैश्चैव लेखासंप्रेषणैरपि ।
अन्यैरपि व्यतीचारैः सर्वं सङ्ग्रहणं स्मृतम् ॥६४॥

दूत वा चिठी पठाउनु र अन्य अनेक थरीका दोष सबैलाई सङ्ग्रहण भनिन्छ ।

स्त्रियं स्पृशेददेशे यः स्पृष्टो वा मर्षयेत्तया ।
परस्परस्यानुमते तच्च सङ्ग्रहणं भवेत् ॥६५॥

पुरुषले स्त्रीलाई कुठाउँमा छुनु वा स्त्रीद्वारा कुठाउँमा छुइँदा पुरुषले सहनु वा परस्परको सहमतीमा यी कार्य गर्नु पनि सङ्ग्रहण हो ।

**भक्ष्यैर्वा यदि वा भोज्यैर्वस्त्रैर्माल्यैस्तथैव च ।**
**सम्प्रेष्यमाणैर्गन्धैश्च सर्वं सङ्ग्रहणं भवेत् ॥६६॥**

खानेकुरा (मीठा नमीठा), कपडा, माला (पोते आदि समेत) र अत्तर आदि सुगन्ध कुनै (पराया) स्त्रीलाई पठाउने कार्य आदि सबै सङ्ग्रहण हुन्छन् ।

**उपकारक्रिया केलिः स्पर्शो भूषणवाससाम् ।**
**सह खट्वासनञ्चैव सर्वं सङ्ग्रहणं स्मृतम् ॥६७॥**



जिस्क्याएर लगाउने लुगा दिनु, ख्यालठट्टा गर्नु, गहना वा कपडा छुनु र एउटै आसनमा बस्नु जस्ता सबै कुरा सङ्ग्रहण हुन् ।

**दर्पाद्वा यदि वा मोहाच्छ्लाघया वा स्वयं वदेत् ।**
**ममेयं भुक्तपूर्वेति सर्वं सङ्ग्रहणं स्मृतम् ॥६८॥**

घमण्डले वा मोहले वा गर्वले यदि कोही कुनै स्त्रीलाई नभोगे पनि “मैले यिनलाई पहिल्यै भोगेँ” भन्दछ भने त्यहाँ पनि सङ्ग्रहण हुन्छ ।

**पाणौ यश्च निगृह्णीयाद्वेण्यां वस्त्रान्तरेऽपि वा ।**
**तिष्ठ तिष्ठेति वा ब्रूयात् सर्वं सङ्ग्रहणं स्मृतम् ॥६९॥**

चुल्ठो वा आँचल हातले झिक्नु (चलाउनु) र पखपख भन्नु पनि सङ्ग्रहण हो ।

## आशयकरणीको दण्ड

स्वजात्यतिक्रमे पुंसामुक्तमुत्तमसाहसम् ।
विर्यये मध्यमस्तु प्रतिलोम्ये प्रमापणम् ॥७०॥

माथिका व्यवहार आफ्नै जातभित्र गरे पुरुषलाई उत्तम साहस दण्ड दिनू । तल्लो जातमा गरे मध्यम साहस र माथ्लो जातमा गरे मृत्यु दण्ड दिनू ।

कन्यायामसकामायां द्व्यङ्गुलस्यापकर्तनम् ।

उत्तमायां वधस्त्वेव सर्वस्वहरणं तथा ॥७१॥

नमान्ने कन्यासँग औंलो घुसारेर गरिने मैथुनको व्यवहारमा पुरुषको दुई औंला काट्नू । माथ्लो जातका साथ यस्तो व्यवहार गरे सर्वस्व सहित मृत्युदण्ड दिनू ।

सकामायान्तु कन्यायां सवर्णे नास्त्यतिक्रमः ।
कित्वलङ्कृत्य सत्कृत्य स एवैनां समुद्वहेत् ॥७२॥

मान्ने सवर्णकी कन्यासँग यस्तो व्यवहार गरे पुरुषको कुनै दोष हुँदैन तर उसले ती कन्यालाई गहनादिले सजाएर विवाह गर्नु पर्दछ ।

## गुरुपत्नी गमन सरहका कार्य र दण्ड

**माता मातृष्वसा श्वश्रूर्मातुलानी पितृष्वसा ।**
**पितृव्यसखिशिष्यस्त्री भगिनी तत्सखी स्नुषा ॥७३॥**

माता, माताकी दीदिबहिनी, सासू, माइजू, फुपू, ठूलाबासानाबाका स्त्रीसाथी, शिष्यपत्नी, बहिनी, बहिनीका स्त्री-साथी,..।

**दुहिताचार्यभार्या च सगोत्रा शरणागता ।**
**राज्ञी प्रव्रजिता धात्री साध्वी वर्णोत्तमा च या ॥७४॥**

छोरी, आचार्यपत्नी तथा सगोत्रीया, शरणागता, रानी, सन्यासिनी, धाईआमा, उत्तम वर्णकी पतिव्रता स्त्री,...।



**आसामन्यतमाङ्गत्वा गुरुतल्पग उच्यते ।**
**शिश्नस्योत्कर्तनं तस्य नान्यस्तत्र विधीयते ॥७५॥**

अन्य असवर्णा स्त्रीलाई गमन गर्नाले पुरुष गुरुतल्पग हुन्छ । जननेन्द्रिय काट्नु नै त्यसको दण्ड हो अरु दण्ड उसका लागि छैन ।

## पशु आदि गमन र दण्ड

**पशुयोन्यामतिक्रम्य विनेयः सदशं शतम् ।**
**मध्यमं साहसं गोषु तदेवान्तावसायिषु ॥७६॥**

पशु गमनमा एक सय दश पण दण्ड तिराउनू । गो-गमनमा र चाण्डाल्नी गमनमा मध्यम साहस दण्ड दिनू ।

**अगम्यागामिनः शास्ति दण्डो राज्ञा प्रचोदितः ।**
**प्रायश्चित्तविधावत्र प्रायश्चित्तं विशोधनम् ॥७७॥**

गमन गर्न नहुनेलाई गमन गर्नेलाई राजाले दण्ड तिराएर मात्र पुग्दैन, विधिपूर्वक पापको प्रायश्चित गराई उसलाई शुद्ध पनि पार्नु पर्दछ ।

## गमन गर्न हुने अन्य स्त्री र गमनको दोष



**स्वैरिण्यब्राह्मणी वेश्या दासी निष्कासिनी च या ।**
**गम्याः स्युरानुलोम्येन स्त्रियो न प्रतिलोम्यतः ॥७८॥**

स्वैरिणी, अब्राह्मणी, वैश्या, दासी र आफन्तबाट निष्कासिता स्त्री क्रमशः तल्लो जातकी गमन गर्न हुन्छ तर माथ्लो जातकी हुँदैन ।

**आस्वेव तु भुजिष्यासु दोषः स्यात् परदारवत् ।**
**गम्या अपि हि नोपेयास्ताश्चेदन्यपरिग्रहाः ॥७९॥**

(तर) ती भोग्या भएर पनि परपत्नी गमन सरह दोष लाग्दछ । आफ्ना पतिबाट ती ग्रहिता हुन्छन् यसैले गमन योग्या भएर पनि तिनलाई गमन गर्नु हुँदैन ।

## नियोग विधि

अनुत्पन्नप्रजायास्तु पतिः प्रेयाद् यदि स्त्रियाः ।
नियुक्ता गुरुभिर्गच्छेद्देवरं पुत्र काम्यया ॥८०॥

सन्तान नपाई जुन स्त्रीको पति बितेका छन् गुरुहरुबाट नियुक्त भई तिनले केवल पुत्रलाभका लागि देवरबाट गमन गराउन सक्दछन् ।

स च तां प्रतिपद्येत तथैव पुत्रजन्मतः ।
पुत्र जाते निवर्तेत विप्लवः स्यादतोऽन्यथा ॥८१॥



त्यो देवरले पनि भाउजूलाई छोरो नजन्मिएसम्म सम्भोग गर्न सक्दछ । पुत्र जन्मिएपछि त्यसबाट छुट्नु पर्दछ नत्र त्यो कर्म विनाशकारी हुन्छ ।

घृतेनाभ्यज्य गात्राणि तैलेनाविकृतेन वा ।
मुखान्मुखं परिहरन् गात्रैर्गात्राण्यसंस्पृशन् ॥८२॥

यस्तो विधिमा पनि घिउ वा तेल दली शरीरलाई विकृत नगरी सहवास गर्नू म्वाईं नखानू र शरीर नमाड्नू ।

नीरजस्कामनिच्छतीं वन्ध्यां पुत्रवतीं स्त्रियम् ।
न गच्छेद् गर्भिणीं निन्दामनियुक्तां च वन्धुभिः ॥८३॥

(कुलमा उत्तराधिकारी पुरुषको अभाव हुँदा सन्तानका लागि नियुक्ता स्त्रीलाई सम्भोग गर्नु तर) रजस्वला नभएकी, माननीया, पुत्रवती, गर्भिणी, निन्दिता तथा बन्धुजनले नियुक्त नगरेकी स्त्रीलाई गमन नगर्नू ।

अनियुक्ता तु या नारी देवराज्जनयेत् सुतम् ।
जारजातमरिक्थीयं तमाहुर्धर्मवादिनः ॥८४॥

नियुक्त नगरिएकी जुन स्त्री देवरबाट पुत्र पाउँदछे त्यो पुत्र जारपुत्र हो र उ पैतृक सम्पत्तिको अधिकारी हुन सक्दैन भनेर धर्म जान्नेहरूले भनेका छन् ।

तथानियुक्तो भार्यायां यवीयाञ्ज्यायसो व्रजेत् ।
यवीयसो वा यो ज्यायानुभौ तौ गुरुतल्पगौ ॥८५॥



अनियुक्त देवरले भाउजूबाट जन्माउने पुत्रको पनि यही अवस्था हुन्छ । यस्ता कान्छो भाई वा जेठो दाजू दुबैलाई गुरुतल्पग भनिन्छ ।

कुले तदवशेषे तु सन्तानार्थं न कामतः ।
नियुक्तो गुरुभिर्गच्छेद् भ्राता भार्यां यवीयसः ॥८६॥

कुल टुङ्गिने अवस्था आए सन्तान जन्माउनका लागि न कि कामवासनाका लागि गुरुबाट नियुक्त दाजुभाईले भाइबुहारी वा भाउजूसँग सहवास गरोस् ।

ज्येष्ठभार्यां कनिष्ठो वा गच्छेद् गुरुनियोगतः ।
कुलसन्तानरक्षा तु फलं समधिगच्छतः ॥८७॥

भाउजू वा बुहारीसँग गुरुबाट नियुक्त भई सन्तानार्थ गर्भ नबस्दासम्म समागम गर्नू ।

अविद्यमाने तु गुरौ राज्ञो वाच्यः कुलक्षयः ।
ततस्तद्वचनाद् गच्छेदनुशिष्य स्त्रियं च सः ॥८८॥

गुरु नहुँदा राजालाई कुल नासिन लागेको कुरा बताई उनका आज्ञाले स्त्रीलाई पनि सबै कुरा सिकाएर सहवास गर्नू ।

पूर्वोक्तेनैव विधिना स्नातां पुंसवने शुचिः ।
सकृदा गर्भाधानाद्वा कृते गर्भे स्नुषैव सा ॥८९॥



पूर्वोक्त विधिले गर्भ नरहेसम्म सम्भोग गर्नू त्यसपछि देवर वा जेठाजू ससूरा सरह र भाउजू बुहारी सरह भएर बस्नू ।

अतोऽन्यथा वर्तमानः पुमान् स्त्री वापि कामतः ।
विनेयौ सुभृशं राज्ञा किल्बिषी स्यादनिग्रहे ॥९०॥

यो नियम नमानी जो पुरुष वा स्त्री कामवश भई काममा लागिरहन्छन् तिनलाई राजाले कठोर दण्ड दिनु नत्र मानिसमा चरित्रको शङ्कट पर्दछ, पाप बढ्दछ ।

नोटः यसरी सन्तान जन्माउन नियुक्त गरिने विधिलाई नियोग विधि भनिन्थ्यो । कलियुग लागेपछि नियोग विधिबाट सन्तान जन्माउन शास्त्रबाटै निषेध गरिएको छ ।

## विवाद गर्न नहुने व्यक्ति

ईर्ष्यासूयसमुत्थे तु सम्बन्धे रागहेतुके ।
दम्पती विवदेयातां न ज्ञातिषु न राजनि ॥९१॥

ईर्ष्या, द्वैष वा अनुरागका कारण दम्पत्तिले आफ्ना आफन्तसँग तथा राजाका सामु विवाद् नगर्नू ।

## स्त्रीलाई सुरक्षित तरिकाको स्वतन्त्रता दिनू

अन्योन्यं त्यजतोर्नागः स्यादन्योन्यविरुद्धयोः ।

स्त्रीपुंसयोर्नितूढाया व्यभिचारादते स्त्रियाः ॥९२॥

अत्यन्त प्रयत्नपूर्वक सुरक्षित तरिकाले नारीलाई व्यभिचार नगरी परस्परमा विरोध नभई छोड्दा दुवैको दोष हुँदैन ।

## कुलतमा फसेकी स्त्रीलाई दण्ड

व्यभिचारे स्त्रिया मौण्ड्यमधः शयनमेव च ।
कदन्नं वा कुवासश्च कर्म चावस्करोञ्छनम् ॥९३॥

व्यभिचारका दोषी स्त्रीलाई मुण्डन, अधोशयन, कुत्सित अन्नदान, कुत्सित वस्त्र दान र मैलो सफा गर्न लगाउने जस्ता काम लगाई दण्ड दिनु पर्दछ ।

## घरबाट निकाल्न सकिने खालका स्त्री

स्त्रीधनभ्रष्टसर्वस्वां गर्भविस्राविणीं तथा ।
भर्तुश्च वधमिच्छन्तीं स्त्रियं निर्वासयेत् गृहात् ॥९४॥

स्त्रीधन र सर्वस्व नाश गर्ने, गर्भ नराख्ने (तुहाउने) र पतिलाई मार्न उद्यत हुने स्त्रीलाई घरबाट निकाल्नू ।

## अन्य घरबाट निकाल्न सकिने खालका स्त्री

अनर्थशीलां सततं तथैवाप्रियवादिनीम् ।
पूर्वाशिनी च या भर्तुः स्त्रियं निर्वासयेद् बुधः ॥९५॥



अनर्थ सृष्टि गर्ने, सधैं अप्रिय बोल्ने र लोग्नेले भन्दा पहिले खाने स्त्रीलाई घरबाट निकाल्नु पर्दछ ।

## गमनको दोष

वन्ध्यां स्त्रीजननीं निन्द्यां प्रतिकूलां च सर्वदा ।
कामं तां नाभिनन्देत कुर्वन्नेवं स दोषभाक् ॥९६॥

सन्तान नजन्माउने, छोरी छोरी जन्माउने, निन्द्या र प्रतिकूलपरायणा स्त्रीलाई इच्छा नभइकन गमन गर्दिन, गरे पुरुष दोषी हुन्छ ।

## निर्दोष पत्नीलाई दुःख दिने पति दण्डनीय हुन्छ

अनुरूपामवाग्दुष्टां दक्षां साध्वीं प्रजावतीम् ।
त्यजन् भार्यामवस्थाप्यो राज्ञा दण्डेन भूयसा ॥९७॥

शुभचिन्तक, बोलीमा कर्कशता नदेखाउने, कुशल, साध्वी र सन्तानवती स्त्रीलाई त्याग गर्ने पुरुषलाई अधिक भन्दा अधिक दण्ड दिएर राजाले स्त्रीलाई भार्याको मर्यादा दिई व्यवस्थित गर्नू ।

## दोष भएकी पत्नीका लागि बताइएको विधि



अज्ञातदोषादुष्टा या निर्गता नान्यमाश्रिता ।
वन्धुभिः साभियोक्तव्या निर्बन्धुः स्वयमाश्रयेत् ॥९८॥

दोष थाहा नभई विवाह गरेर पछि दोष थाहा पाइएको अवस्थामा उनी अन्य पुरुषको आश्रित नभए उनलाई पतिले तिनका आफन्तलाई बुझाउनू । कोही आफन्त नभए उनी आफैं अर्को पुरुषको आश्रय लिन सक्दछिन् ।

## स्त्रीले अर्को पति रोज्न पाउने व्यवस्था

पत्यौ प्रव्रजिते नष्टे क्लीवेऽथ पतिते मृते ।
पञ्चस्वापत्सु नारीणां पतिरन्यो विधीयते ॥९९॥

पति सन्यासी भए, नष्ट भए, नपुंसक भए वा पतित भए-यी पाँच विपतका बेलामा नारीले अर्को पति ग्रहण गर्नु विधिसङ्गत हो ।

## ब्राह्मणीले पतिलाई कुर्ने समय

अष्टौ बर्षाण्युदीक्षेत ब्राह्मणी प्रोषितं पतिम् ।
अप्रसूता तु चत्वारि परतोऽन्यं समाश्रयेत् ॥१००॥

ब्राह्मणी स्त्रीले आठ वर्षसम्म विदेश गएका पतिको प्रतीक्षा गर्नू । अप्रसूता भए चार सालसम्म प्रतीक्षा गरी अर्को पति ग्रहण गर्नू ।

## छेत्रिनी र वैश्याले पतिलाई कुर्ने समय



क्षत्रिया षट् समास्तिष्ठेदप्रसूता समात्रयम् ।
वैश्या प्रसूता चत्वारि द्वे समे अप्रजा वसेत् ॥१०१॥

क्षत्रिया स्त्री आठ वर्षसम्म प्रतीक्षा गर्न सक्दछे तर अप्रसूता भए तीन सालसम्म प्रतीक्षा गरी अर्को पति ग्रहण गर्न सक्दछे । वैश्याले चार साल प्रतीक्षा गर्नू, अप्रसूता भए दुई वर्ष प्रतीक्षा गरी अर्को विवाह गर्न सक्दछे ।

## शूद्राले पतिलाई कुर्ने समय

न शूद्रायाः स्मृतः कालो नच धर्मव्यतिक्रमः ।
विशेषतोऽप्रसूतायाः संवत्सरपरा स्थितिः ॥१०२॥

शूद्राको पति विदेश गएकोमा प्रतिक्षाको समय तोकिएको छैन । परदेशिएको पति जीवितै छ भनी सुने एक वर्षसम्म प्रतीक्षा गर्नु पर्दछ ।

## पति कुर्ने नियम

अप्रवृत्तौ स्मृतो धर्म एष प्रोषितयोषिताम् ।
जीवति श्रूयमाणे तु स्यादेष द्विगुणो विधिः ॥१०३॥

पति विदेश गएका पत्नीहरुका लागि यही नियम बताइएको छ । पति जीवित नै सुन्दासम्म यसको दोब्बर समय कुर्नु पर्दछ ।



## ब्रह्माको विधि

प्रजाप्रवृत्तौ भूतानां सृष्टिरेषा प्रजापतेः ।
अतोऽन्यथागमे स्त्रीणामेषं दोषो न विद्यते ॥१०४॥

प्रजा (सन्तान) को चाहना हुँदा प्रजापतिले सृष्टिको यही विधि बताएका छन् । यसपछि दोश्रो पति ग्रहण गर्दा स्त्रीको कुनै दोष रहँदैन ।

## वर्णसङ्कर

आनुलोम्येन वर्णानां यज्जन्म स विधिः स्मृतः ।
प्रतिलोम्येन यज्जन्म स ज्ञेयो वर्णसङ्करः ॥१०५॥

आफूसमान वा आफूभन्दा तल्लो वर्णकी स्त्रीबाट (अनुलोम क्रमबाट) जन्मेको सन्तान वैध हुन्छ । तर आफूभन्दा माथ्लो वर्णकी स्त्रीबाट जन्म लिने सन्तान वर्णसङ्कर हुन्छ ।

## सवर्ण पुत्र

**अनन्तरः स्मृतः पुत्रः पुत्र एकान्तरस्तथा ।**
**द्व्यन्तरश्चानुलोम्येन तथैव प्रतिलोमतः ॥१०६॥**

अनुलोम क्रम अनुसार ब्राह्मणका चार, क्षत्रियका तीन, वैश्यका दुई र शूद्रका एक सवर्ण पुत्र हुन्छन् । यसैगरी प्रतिलोम क्रममा पनि हुन्छन् ।



## उग्र, पारशव र निषाद सन्तान

**उग्रः पारशवश्चैव निषादश्चानुलोमतः ।**
**उत्तमेभ्यस्त्रयस्त्रिभ्यः शूद्रापुत्राः प्रकीर्तिताः ॥१०७॥**

कसैले ब्राह्मण आदिका अनुलोम क्रमले क्रमैले उग्र, पारशव र निषाद सन्तान हुन्छन् भनेका छन् । माथिल्ला जातका स्त्रीका पनि यिनै तीन सन्तान हुन्छन् । ब्राह्मणीबाट पारशव, क्षत्रियाबाट निषाद र वैश्याबाट उग्र सन्तान हुन्छन् ।

## चण्डाल, सूत र वैदेह सन्तान

ब्राह्मण्यामपि चण्डालसूतवैदेहका अपि ।
अपरेभ्यस्त्रयस्त्रिभ्यो विज्ञेयाः प्रतिलोमतः ॥१०८॥

प्रतिलोम क्रममा ब्राह्मणीले शूद्रबाट जन्माउने चण्डाल, क्षत्रियबाट जन्माउने सूत र वैश्यबाट जन्माउने वैदेह हुन्छ । प्रतिलोम क्रममा पनि यही हुन्छ ।

## अम्बष्ठ, मागध र क्षत्ता सन्तान

अम्बष्ठो मागधश्चैव क्षत्ता च क्षत्रियासुताः ।
आनुलोम्येन तत्रैको द्वौ ज्ञेयौ प्रतिलोमतः ॥१०९॥



अनुलोम क्रममा क्षत्रियले वैश्याबाट जन्माउने अम्बष्ठ, वैश्यले क्षत्रियाबाट जन्माउने मागध, शूद्रले क्षत्रियाबाट जन्माउने क्षत्ता हुन्छ ।

## दौष्षन्त, यवन र आयोगव सन्तान

वैश्यापुत्रास्तु दौष्षन्तयवनायोगवा अपि ।
प्रतिलोम्येन तत्रैको द्वौ ज्ञेयावनुलोमजौ ॥११०॥

शूद्रा, ब्राह्मणी र क्षत्रियाका प्रतिलोम एवं अनुलोम क्रमले जन्मने पुत्रका बारेमा बताइयो । वैश्याले ब्राह्मणबाट दौष्षन्त, क्षत्रियबाट यवन र शूद्रबाट आयोगव पुत्र जन्माउँदछे ।

## प्रतिलोम पुत्र

सूताद्याः प्रतिलोमास्तु ज्ञेयावप्रतिलोमजौ ।
ससङ्कराः श्वपाकाद्यास्तेषां त्रिस्सप्तको गणः ॥१११॥

सूत, वैदेहक र चाण्डाल प्रतिलोम क्रमका पुत्र हुन् । यसरी श्वपाक आदि २१ थरी सन्तान हुन्छन् ।

## सवर्ण, मूर्धाभिषिक्त, अम्बष्ठ र उग्र सन्तान

सवर्णो ब्राह्मणीपुत्रः क्षत्त्रियायामनन्तरः ।

अम्बष्ठोग्रौ तथा पुत्रवेवं क्षत्रियवैश्ययोः ॥११२॥

ब्राह्मणले ब्राह्मणीबाट जन्माउने सवर्ण सन्तान हुन्छ । ब्राह्मणले क्षत्रियाबाट अनन्तर मूर्धाभिषिक्त सन्तान जन्माउँदछ । क्षत्रियले वैश्याबाट अनन्तर अम्बष्ठ जन्माउँदछ । वैश्यले शूद्राबाट अनन्तर उग्र सन्तान जन्माउँदछ ।

## दौष्षन्त र निषाद सन्तान

एकान्तरस्तु दौष्षन्तो वैश्यायां ब्राह्मणात् सुतः ।
शूद्रायां क्षत्रियात् (?) तद्वन्निषाधो नाम जायते ॥११३॥

एक एक अन्तरबाट जन्मने सन्तानमा ब्राह्मणले वैश्याबाट दौष्षन्त, क्षत्रियले शूद्राबाट निषाद जन्माउँदछ ।

## पारशव सन्तान

शूद्रा पारशवं सूते ब्राह्मणाद् द्व्यन्तरं सुतम् ।
आनुलोम्येन वर्णानां पुत्रा एते प्रकीर्तिताः ॥११४॥

दुई दुई अन्तर ब्राह्मणका मात्र हुन्छ । ब्राह्मणले शूद्राबाट जन्माउने सन्तान पारशव हुन्छ । वर्णका आनुलोम क्रमले जन्मने सन्तानका बारेमा बताइयो ।

## सूत, मागध र आयोगव सन्तान



सूतश्च मागधश्चोभौ पुत्रावायोगवस्तथा ।
प्रातिलोम्येन वर्णानां तद्वदेतेऽप्यनन्तराः ॥११५॥

प्रतिलोम क्रममा अन्तरबिना क्षत्रियले ब्राह्मणीबाट सूत, वैश्यले क्षत्रियाबाट मागध र शूद्रले वैश्याबाट जन्माउने सन्तान आयोगव हुन्छ ।

## वैदेहक र क्षत्ता सन्तान

ब्राह्मण्येकान्तरं वैश्यात् सूते वैदेहकं सुतम् ।
क्षत्तारं क्षत्रिया शूद्रात् पुत्रमेकान्तरं तथा ॥११६॥

एक एक अन्तरमा ब्राह्मणीले वैश्यबाट वैदेहक र क्षत्रियाले शूद्रबाट क्षत्ता सन्तान जन्माउँदछे ।

## चाण्डाल सन्तान

**द्व्यन्तरः प्रातिलोम्येन पापिष्ठः सङ्करे सति ।**
**चण्डालो जायते शूद्राद् ब्राह्मणी यत्र मुह्यति ॥११७॥**

दुई दुई अन्तरमा ब्राह्मणीले मती बिगारे शूद्रबाट पापी र वर्णसङ्कर चाण्डाललाई जन्माउन पुग्दछे ।

## वर्णसङ्कर रोक्नु राजाको कर्तव्य



**राज्ञाा परीक्ष्यं न यथा जायते वर्णसङ्करः ।**
**तस्माद्राज्ञा विशेषेण त्रयी रक्ष्या तु सङ्करात् ॥११८॥**

राजाले वर्णसङ्कर नहुने किसिमले व्यवस्था मिलाउनू । विशेषगरी तीन वर्णलाई वर्णसङ्कर हुनबाट रक्षा गर्नू ।

॥ इति स्त्रीपुंयोगो द्वादशं विवादपदम् ॥



नारदीयमनुसंहिता, विवादखण्ड अन्तर्गत वैवाहिक विवादका बारेमा वर्णन गरिएको स्त्रीपुंयोग उपखण्डको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो



शुरुदेखिका श्लोकको संख्या: ४८४+११८=६०२



## ॥ अथ दायविभागस्त्रयोदशं विवादपदम् ॥

### अंशबण्डा-विवाद

### परिभाषा

विभागोऽर्थस्य पित्र्यस्य पुत्रैर्यत्र प्रकल्प्यते ।
दायभाग इति प्रोक्तं व्यवहारपदं बुधैः ॥१॥

बाउबाजेको सम्पत्तिलाई दाय भनिन्छ, यसलाई पुत्रहरूले वा अंशियारहरूले भाग लगाउनु वा अंशबण्डा गर्नुलाई दायविभाग भनिन्छ । दाय विभागमा हुने विवादलाई “दायविभाग विवाद” भनिन्छ भनी विवादका विज्ञले बताएका छन् ।



### मातापिताको सम्पत्ति बाँडफाँड

पितर्युपरते पुत्रा विभजेयुर्धनं क्रमात् ।
मातुर्दुहितरोऽभावे दुहितॄणां तदन्वयः ॥२॥

पिता बितेपछि छोराहरुले पैतृक सम्पत्ति बाँडेर क्रमैले लिनू । माता बितेपछि छोरीहरुले र ती नभए तिनका सन्तानले आमाको सम्पत्ति बाँडेर लिनू ।

### अंशबण्डा गर्ने समय

मातुर्निवृत्ते रजसि प्रत्तासु भगिनीषु च ।

निरिष्टे वाप्यमरणे पितर्युपरतेऽस्पृहे ॥३॥

आमा रजस्वला हुन छोडेपछि, दीदिबहिनीको विवाह भइसकेपछि र बाबुको मृत्यु भएपछि वा बाबुले व्यवहारतिर मतलव गर्न छोडेपछि अंशबण्डा गर्नू ।

पितैव वा स्वयं पुत्रान्विभजेद्वयसि स्थितः ।
ज्येष्ठं श्रेष्ठविभागेन यथा वा स्वमतिर्भवेत् ॥४॥

आफू नबित्दै बेलैमा बाबुले अंशबण्डा गर्न पनि सक्दछ । जेठोलाई धेरै दिन पनि सक्दछ वा आफ्नो रुची अनुसार जे चाहन्छ त्यो गर्न सक्दछ ।

## पारिवारिक जिम्मेवारी ग्रहण



विभृयाद्वेच्छतः सर्वाञ्ज्येष्ठो भ्राता यथा पिता ।
भ्राता शक्तः कनिष्ठो वा शक्त्यपेक्षं कुले क्रिया ॥५॥

जेठो भाइले, कान्छोले अथवा सबैको चाहना बमोजिम कुनै पनि सक्षम भाइले आफ्नो पितालेझैं गरी परिवार सबैको भरणपोषणको दायित्व लिन सक्दछ ।

## भागबण्डा गर्न नमिल्ने धन

शौर्यभार्याधने हित्वा यच्च विद्याधनं भवेत् ।
त्रीण्येतान्यविभाज्यानि प्रसादो यश्च पैतृकः ॥६॥

शौर्यधन (युद्धमा जितेर लेराइएको धन), भार्याधन (स्त्रीको दाइजो, पेवा आदि) र विद्याधन गरी तीन प्रकारका धन तथा पिताले खुशीभई “ला तँलाई” भनी कुनै भाइलाई दिएको धन भाग लगाउने धन हुँदैनन् ।

मात्रा च स्वधनं दत्तं यस्मै स्यात् प्रीतिपूर्वकम् ।
तस्याप्येष विधिर्दृष्टो मातापि हि यथा पिता ॥७॥

माताले आफ्नो स्त्रीधनलाई स्वेच्छाले दिन सक्ने विधान छ, भाग लाग्दैन, किनकि माता पनि पितासरह हुन्छिन् ।

अध्यग्नध्याहवनिकं भर्तुदायस्तथैव च ।
भ्रात्रा दत्तं पितृभ्याञ्च षड्विधं स्त्रीधनं स्मृतम् ॥८॥



(१) विवाहमा दिइएको (दाइजो, उपहार आदि), (२) नयाँ दुलहीलाई घरमा मुख हेर्दा दिइएको धन, (३) लोग्नेले दिएको धन, (४) दाजुभाइले दिएको धन, (५) आमाले दिएको धन र (६) बाबुले दिएका धन गरी छ थरीका धनलाई ‘स्त्रीधन’ भनिएको छ । स्त्रीधन अंशबण्डा हुँदैन ।

## स्त्रीधनमा अधिकार

स्त्रीधनं तदपत्यानां भर्तृगाम्यप्रजासु तु ।
ब्राह्मादिषु चतुर्ष्वाहुः पितृगामीतरेषु च ॥९॥

'स्त्रीधन' स्त्रीका सन्तानको धन हो, पहिलो अधिकार तिनकै हुन्छ । ब्राह्म, प्राजापत्य, आर्ष र दैव विधिले गरिएको विवाहबाट सन्तान नभए पति स्त्रीधनको मालिक हुन्छ । अरु चार किसिमका विधिले विवाह भएको भए स्त्रीधन, उक्त स्त्रीका आमाबाबुको हुन्छ ।

## विद्याधनको अधिकार

कुटुम्बं विभृयाद् भ्रातुर्यो विद्यामधिगच्छति ।
भागं विद्याधनात्तस्मात् स लभेताश्रुतोऽपि सन् ॥१०॥

पढ्न जाने दाजुभाइका कुटुम्बलाई पालनपोषण गर्ने दाजुभाइ आफूले नपढे पनि त्यो विद्याधनको अधिकारी हुन्छ ।



वैद्योऽवैद्याय नाकामो दद्यादंशं स्वतो धनात् ।
पितृद्रव्यं तदाश्रित्य न चेत्तेन तदाहृतम् ॥११॥

यदि पैतृक सम्पत्तिले विद्याधन कमाएको होइन भने, इच्छा नभए कुनै विद्वान भाइले अविद्वान भाइलाई आफूले कमाएको विद्याधन भाग लगाउन पर्दैन । पैत्रिक सम्पत्ति खर्च गरेरै पढिएको हो भने भाग लगाउनु पर्दछ ।

## आमाबाबुलाई अंश

द्वावंशौ प्रतिपद्येत विभजन्नात्मनः पिता ।
समांशभागिनी माता पुत्राणां स्यान्मृते पतौ ॥१२॥

पिता स्वयं अंशबण्डाका समयमा आफ्ना लागि दुई भाग लिन सक्दछ । पति बितेपछि माताले पुत्रसमान एक भाग पाउँदछिन् ।

## जेठो भाइको अंश

ज्येष्ठायांशोऽधिको देयो ज्येष्ठाय तु वरः स्मृतः ।
समांशभाजः शेषाः स्युरप्रत्ता भगिनी तथा ॥१३॥

सबैले मान्नुपर्ने हुनाले जेठोलाई जेठाक दिई अरु भाइलाई बराबर अंश भाग लगाउनु पर्दछ । अविवाहित दिदीबहिनीलाई पनि समानरूपमा अंशभाग लगाउनु पर्दछ ।



## वर्ण अनुसारको अंशबण्डा

क्षेत्रजेष्वपि पुत्रेषु तद्वज्जातेषु धर्मतः ।
वर्णावरेष्वंशहानिर्गूढजातेष्वनुक्रमात् ॥१४॥

ब्राह्मण, क्षत्रिय आदि विभिन्न वर्णका पत्नी भई तिनबाट विभिन्न वर्णका सन्तान जन्मिएका भए वर्ण अनुसार अंशबण्डामा पनि तलमाथि हुन्छ । एउटै वर्णका धेरै विवाहिता स्त्री भए विवाह क्रम अनुसार अंशबण्डा गर्नू । यसरी अंशबण्डामा वर्ण र ज्येष्ठतालाई आधार मानिएको छ ।

## अंशबण्डा र विवाद

पित्रैव तु विभक्ता ये हीनाधिकसमैर्धनैः ।

**तेषां स एव धर्मः स्यात् सर्वस्य हि पिता प्रभुः ॥१५॥**

बाबुले दिएको धन धेरथोर वा बराबर जे भएपनि त्यो पुत्रहरुको धर्मतः भाग हो । किनकि पिता सबै धनका मालिक हुन् । (यसमा विवाद नगर्नू) ।

## अंश र पुत्र

**कानीनश्च सहोढश्च गूढायां यश्च जायते ।**
**तेषां बोढा पिता श्रेयस्ते च भागहराः स्मृताः ॥१६॥**

कानीन, सहोढ र गूढज पुत्रकी आमाले जो सँग विवाह गर्दछे त्यो नै तिनको बाबु हुन्छ । उसले पनि पैतृक धनको अंश पाउँदछ ।



**अज्ञातपितृको यश्च कानीनो गूढमातृकः ।**
**मातामहाय दद्याच्च पिण्डं रिक्थं हरेत च ॥१७॥**

जुन कानीन पुत्रको बाबुको अत्तोपत्तो हुँदैन र आमा अविवाहित बसेकी छे भने त्यो पुत्रले मावली हजूरबाबुलाई पिण्ड दिन्छ र उनैको सम्पत्ति पाउँदछ ।

## अवैध सन्तान र अंश

**जाता ये त्वनियुक्तायामेकेन बहुभिस्तथा ।**
**आरिक्थभाजस्ते सर्वे बीजिनामेव ते सुताः ॥१८॥**

सन्तान पाउन असमर्थ पतिबाट अनियुक्त एक वा अनेक पुरुषले उसकी पत्नीबाट यदि पुत्र जन्माउँछन् भने ती पुत्रले पत्नीका स्वामीको धनको भाग पाउँदैनन् किनकि ती उत्पादकका पुत्र हुन्छन् ।

**भाडाको कोखबाट जन्मने सन्तान र पिण्डदानको अधिकार**

**दद्युस्ते बीजिनः पिण्डं माता चेच्छुल्कतो हृता ।**
**अशुल्कोपनतायां तु पिण्डदा वोढुरेव ते ॥१९॥**

माता शुल्क लिई यदि पुत्र उत्पादन गर्न परपुरुषसँग जोडिन्छे भने उनको सन्तानले उत्पादक पुरुषलाई पिण्ड दिने हुन्छ । शुल्क नलिई जोडिएर जन्मेको पुत्रले माताको पाणिग्रहण गर्ने पुरुषलाई पिण्ड दिने हुन्छ ।



**अन्य पुत्र र अंशाधिकार**

**पितृद्विट् पतितः पण्डो यश्च स्यादौपपातिकः ।**
**औरसा अपि नैतेंऽशं लभेरन् क्षेत्रजाः कुतः ॥२०॥**

बाबुको द्वेष गर्ने, पतित, नपुंसक र उपपापी औरस पुत्रले समेत अंशभाग पाउँदैन भने क्षेत्रज पुत्रको त के कुरा ? ।

**बाबु असक्षम भए भतिजोले अंश पाउँदछ**

**दीर्घतीव्रामयग्रस्ता जलोन्मत्तान्धपङ्गवः ।**
**भर्तव्याः स्युः कुटुम्ब्यास्ते तत्पुत्रास्त्वंशभागिनः ॥२१॥**

क्षयरोग आदि दीर्घ वा कष्टदायक रोगले ग्रस्त, सुस्तमनस्थितिका, उन्मत्त, दृष्टिविहीन र लुलोलङ्गडा व्यक्तिहरु कुलका सदस्यबाट पालिनु पर्छ । तिनका सन्तानले अंश भाग न् ।

## दुवै बाउबाट अंश पाउने पुत्र

द्विरामुष्यायणा दद्युर्द्वाभ्यां पिण्डोदके पृथक् ।
रिक्तादर्धांशमादद्युर्बीजिक्षेत्रिकयोस्तथा ॥२२॥

द्विरामुष्यायण (वीर्यदान गर्ने र वास्तविक पति दुवैले स्वीकारेको) पुत्रले दुवैलाई बेग्लाबेग्लै पिण्डदान गर्दछ । यस्ता पुत्रले दुवै पिताबाट अंश पाउँदछ ।



## भिन्न भएर पुनः सँगै बस्दाको अंशबण्डा

संसृष्टिनां तु यो भागस्तेषामेव स इष्यते ।
अतोऽन्यथांशभाजो हि निर्बीजिष्वितरानियात् ॥२३॥

छुट्टिएर फेरी सँगै बसेका दाजुभाइमध्ये कुनै दाजुभाइको सन्तान नभए उसको अंश उसकी पत्नीले पाउँदछे । उनी नहुँदा सबै दाजुभाइले भाग लगाएर लिन्छन् ।

## निसन्तान दाजुभाइको अंश

भ्रातृणामप्रजः प्रेयात्कश्चिच्चेत् प्रव्रजेत् तथा ।

विभजेयुर्धनं तस्य शेषास्ते स्त्रीधनाद्विना ॥२४॥

दाजुभाइमध्ये कोही छोरो नपाई बितेमा वा सन्यासी भएमा अरु भाइहरुले स्त्रीधन बाहेक अरु धन बाँडेर लिनू ।

निसन्तान एकलमहिलाको पालनपोषण

भरणं चास्य कुर्वीरंस्त्रीणामा जीवितक्षयात् ।
रक्षान्ति शय्यां भर्तुश्चेदाच्छिन्द्युरितरासु च ॥२५॥

तिनका श्रीमतीलाई पतिव्रता बनेर बसे आजीवन पालनपोषण गर्नू, नबसे तिनको धन जबरजस्ती लिन सक्दछन् ।



एकलमहिलाकी छोरीको पालनपोषण गर्ने दायित्व

स्याद्यस्य दुहिता तस्याः पित्रंशो भरणे मतः ।
आ संस्काराद्धरेतैनां परतो विभृयात् पतिः ॥२६॥

एकलमहिलाकी छोरीको भरणपोषण तथा विवाह आदि संस्कार पैत्रिक सम्पत्तिले हुन्छ । विवाहपछि उनको पतिले उनको दायित्व लिन्छ ।

पति–पक्षको दायित्व

मृते भर्तर्यपुत्रायाः पतिपक्षः प्रभुः स्त्रियाः ।

विनियोगात्मरक्षासु भरणे च स ईश्वरः ॥२७॥

अपुत्रिका स्त्रीको पति बितेपछि पति-पक्ष नै उनको सबै थोक हुन्छ । विनियोग ( उनको सम्पत्तिको लगानी गर्ने), उनलाई सुरक्षा दिने र उनको भरणपोषण गर्ने काम पति-पक्षले गर्नु पर्दछ ।

## स्त्रीको पालनपोषणमा वैकल्पिक दायित्व

परिक्षीणे पतिकुले निर्मनुष्ये निराश्रये ।
तत्सपिण्डेषु चासत्सु पितृपक्षः प्रभुः स्त्रियाः ॥२८॥

पतिको कुल टुङ्गिएर आश्रय नहुँदाको अवस्थामा वा सपिण्डीको अभावमा माइतीखलक स्त्रीका आश्रयदाता हुन सक्दछन् ।



पक्षद्वयवसाने तु राजा भर्ता स्मृतः स्त्रियः ।
स तस्या भरणं कुर्यान्निगृह्णीयात् पथश्च्युतम् ॥२९॥

दुवै खलक (घर र माइती) नहुँदा राजा एकलमहिलाको संरक्षक हुन्छ । उसले तिनको पालनपोषण गरी पथभ्रष्ट हुनबाट रोक्नु पर्दछ ।

## स्त्री र स्वतन्त्रता

स्वातन्त्र्याद् विप्रणश्यन्ति कुले जाता अपि स्त्रियः ।
अस्वातन्त्र्यमतस्तासां प्रजापतिरकल्पयत् ॥३०॥

गतिलो कुलखानदानमा जन्मिएर पनि स्वतन्त्रताले गर्दा स्त्रीहरु नष्ट हुन्छन् । यसैले, प्रजापतिले तिनको अस्वतन्त्रताको विधान गरेका छन् ।

**पिता रक्षति कौमारे भर्ता रक्षति यौवने ।**
**पुत्रास्तु स्थविरे भावे न स्त्री स्वातन्त्र्यमर्हति ॥३१॥**

कुमारी अवस्थामा बाबुले, यौवनमा पतिले र वृद्धा अवस्थामा पुत्रले स्त्रीको रक्षा गर्दछन् । स्त्रीले कहिल्यै स्वतन्त्रता पाउन सक्दिन ।

**बाबुले लिएको ऋण तिरी अंशबण्डा गर्नू**

**यच्छिष्टं पितृदायेभ्यो दत्त्वर्णं पैतृकञ्च यत् ।**

**भ्रातृभिस्तद्विभक्तव्यमनृणी न स्याद्यथा पिता ॥३२॥**

पिताले लिएको ऋण तिरी दाजुभाइले अंश भाग लगाउनू, जसले गर्दा पिता ऋणी नरहून् ।

**संस्कार खर्च र अंशबण्डा**

**येषाञ्च न कृताः पित्रा संस्कारविधयः क्रमात् ।**
**कर्तव्या भ्रातृभिस्तेषां पैतृकादेव तद्धनात् ॥३३॥**

अंशबण्डा हुनुपूर्व संस्कार गर्न बाँकी र पढ्न बाँकी दाजुभाइ वा दीदिबहिनीलाई आवश्यक खर्च छुट्याएर मात्र अंशबण्डा गर्नू ।

## संस्कार गर्नु कर्तव्य

अविद्यमाने पित्र्यर्थे स्वांशादुद्धृत्य वा पुनः ।
अवश्यकार्याः संस्कारा भ्रातृणां पूर्वसंस्कृतैः ॥३४॥

पैतृक सम्पत्ति नहुँदा संस्कार गरिसकेका दाजुभाइहरुले आफ्नो कमाईबाट धन जम्मा पारी संस्कार नगरिएका भाइबहिनीहरुको संस्कार अवश्य गर्नू ।

## दाजुभाइलाई आवश्यक सहयोग

कुटुम्बार्थेषु यश्चोक्तस्तत्कार्यं कुरुते च यः ।

भ्रातृभिर्बृंहणीयो ग्रासाच्छादनभोजनैः ॥३५॥

आफन्तका लागि गर्नै पर्ने कार्य जुन भाइले गर्दछ पछि उसको कमाई नहुँदा अरु भाइ मिली उसका लागि तथा उसका परिवारका लागि भोजन, कपडा बाहन आदिको यथोचित व्यवस्था गर्नुपर्दछ ।

## अंश-विवादको छिनोफानो

विभागधर्मसन्देहे दायादानां विनिर्णये ।
ज्ञातिभिर्भागलेख्यैश्च पृथग्कार्या प्रकल्पना ॥३६॥

जायजेथाको भागबण्डामा सन्देह हुँदा वा विवाद हुँदा लिखित प्रमाण र आफन्तलाई साछी बनाई कुरा मिलाउनु पर्दछ ।

## पारिवारिक कर्तव्य

भ्रातृणामविभक्तानामेको धर्मः प्रवर्तते ।
विभागे सति धर्मोऽपि भवेदेषां पृथक् पृथक् ॥३७॥

नछुट्टिएसम्म सबै दाजुभाइको परिवारको रक्षा गर्दै मर्यादा कायम राख्नु एक मात्र धर्म हुन्छ । छुट्टिएपछि तिनको पारिवारीक धर्म बेग्लाबेग्लै हुन्छ ।

## अंशबण्डा पछिको व्यवहार



दानग्रहणपश्वन्नगृहक्षेत्रपरिग्रहाः ।
विभक्तानां पृथग् ज्ञेयाः पाकधर्मागमव्ययाः ॥३८॥

लेनदेन, पशु, अन्न, घर, खेतबारी, धन आर्जन, पकाउनेतुल्याउने काम, लिखित प्रमाण र खर्च छुट्टिएकाहरुको बेग्लाबेग्लै हुन्छ ।

## साछी, जमानी आदि बस्ने अधिकार

साक्षित्वं प्रातिभाव्यञ्च दानं ग्रहणमेव च ।
विभक्ता भ्रातरः कुर्युर्नाविभक्ताः परस्परम् ॥३९॥

छुट्टिएका दाजुभाईहरुका बीचमा एकअर्काको साछी बस्ने, जमानी बस्ने र लेनदेन गर्ने कार्य हुन सक्दछ, नछुट्टिँदा हुँदैन ।

येषां द्विधाः क्रिया लोके प्रवर्तन्ते स्वरिक्थिनाम् ।
विभक्ता नवगच्छेयुर्लेख्यमप्यन्तरेण तान् ॥४०॥

यी कर्म (साछी बस्ने, धन कमाउने आदि) जुन जुन भाईको बेग्लाबेग्लै हुन्छ ती निश्चित रुपले छुट्टिएको हो भनी जान्नू । यस बाहेक कागजात ( बण्डापत्र) बाट पनि छुट्टिएको थाहा हुन्छ ।

## अंशबण्डा पछिको अधिकार

यद्येकजाता बहवः पृथग्धर्माः पृथक् क्रियाः ।

पृथक्कर्मगुणोपेता न तेऽकृत्येषु सम्मताः ॥४१॥
स्वानंशान्यदि दद्युस्ते विक्रीणीयुरथापि वा ।
कुर्युर्यथेष्टं तत्सर्वमीशते स्वधनस्य ते ॥४२॥

एउटै आमाबाबुका सन्तान भएर पनि (छुट्टिए पछि) धेरै जना बेग्लै धर्म, बेग्लै कर्म र गुणले युक्त भएको कर्ममा समान नभएर आआफ्नो भाग दिन्छन्, बेच्दछन् भने तिनले आफ्नो धनको विनियोग आफूखुशी गर्न सक्दछन् किनकि ती आफैं आफ्नो धनका मालिक हुन् ।

## पुत्रका किसिम

औरसः क्षेत्रजश्चैव पुत्रिकापुत्र एव च ।

**कानीनश्च सहोढश्च गूढोत्पन्नस्तथैव च ॥४३॥**
**पौनर्भवोऽपविद्धश्च लब्धः क्रीतस्तथा कृतः ।**
**स्वयं चोपगतः पुत्रा द्वादैत उदाहृताः ॥४४॥**

औरस, क्षेत्रज, पुत्रिका पुत्र, कानीन, सहोढ, गूढोत्पन्न, पौनर्भव, अपविद्ध, लब्ध, क्रीत, कृतक र उपगत : यी बाह्र थरी पुत्र हुन् ।

## पुत्र अनुसार अंशको अधिकार

**तेषु षट् बन्धुदायादाः षडदायादवान्धवाः ।**
**पूर्वः पूर्वः स्मृतः श्रेष्ठो जघन्यो यो य उत्तरः ॥४५॥**



औरस, क्षेत्रज, पुत्रिका पुत्र, कानीन, सहोढ, गूढोत्पन्न, पौनर्भव, अपविद्ध, लब्ध, क्रीत, कृतक र उपगतमध्ये अगिल्ला छ अंशियार हुन् भने पछिल्ला छ होइनन् । यिनमा अगिल्लाअगिल्ला श्रेय र पछिल्लापछिल्ला जघन्य हुन् ।

**क्रमादेते प्रपद्येरन्मृते पितरि तद्धनम् ।**
**ज्यायसो ज्यायसोऽभावे जघन्यस्तदवाप्नुयात् ॥४६॥**

बाबुको मृत्यु पछि क्रमैले (उपर्युक्त) पुत्रहरु पितृधनका स्वामी हुन्छन् । जेठो नहुँदा कान्छोले रिक्थ धन पाउँदछ ।

## छोरीको अधिकार

पुत्राभावे तु दुहितातुल्यसन्तानदर्शनात् ।
पुत्रश्च दुहिता चोक्तौ पितुः सन्तानकारकौ ॥४७॥

छोरा नहुँदा छोरी पनि छोरा सरह नै हुन्छन् । किनकि छोरा र छोरी दुवै बाबुकै सन्तान हुन् ।

## निसन्तानको सम्पत्ति

अभावे तु दुहितृणां सकुल्या बान्धवास्तथा ।
ततः सजात्याः सर्वेषामभावे राजगामी तत् ॥४८॥



छोरी पनि नहुँदा स्वकुल र बान्धवले क्रमैले धन लिन्छन् । ती पनि नभए सजातिले लिन्छन् । कोही नभए राजकोषमा जान्छ ।

अन्यत्तु ब्राह्मणात्तत्तु राजा धर्मपरायणः ।
तत्स्त्रीणां जीवनं दद्यादेष दायविधिः स्मृतः ॥४९॥

ब्राह्मणलाई छोडी अरु वर्णका यस्ता कोही नभएका धनस्वामीका स्त्रीलाई खानलाउन दिएर धर्मात्मा राजाले रक्षा गरुन् । यही दायविधि धर्मशास्त्रमा बताइएको छ ।

॥ इति दायविभागस्त्रयोदशं विवादपदम् ॥



नारदीयमनुसंहिता, विवादखण्ड अन्तर्गत अंश विवादका बारेमा वर्णन गरिएको दायविभागको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो



शुरुदेखिका श्लोकको संख्याः ६०२+४९=६५१



## ॥ अथ साहसं चतुर्दशं विवादपदम् ॥
## बलको तुजुकसम्बन्धी विवाद

### परिभाषा

**सहसा क्रियते कर्म यत्किञ्चिद्बलदर्पितैः ।**
**तत्साहसमिति प्रोक्तं सहो बलमिहोच्यते ॥१॥**



बल र घमण्डपूर्वक जुन काम अचानक गरिन्छ त्यसलाई “साहस” भनिन्छ किनकि “सह” को अर्थ बल हो । साहस सम्बन्धी विवाद नै “साहस-विवाद” हो ।

### साहसका प्रकार

**तत् पुनस्त्रिविधं ज्ञेयं प्रथमं मध्यमन्तथा ।**
**उत्तमं चेति शास्त्रेषु तस्योक्तं लक्षणं पृथक् ॥२॥**

त्यो साहस पनि प्रथम, मध्यम र उत्तम गरी तीन प्रकारको हुन्छ । यिनका लक्षणहरु पनि फरकफरक बताइएका छन् ।

## प्रथम साहस

फलमूलोदकादीनां क्षेत्रोपकरणस्य च ।
भङ्गाक्षेपावमर्दाद्यैः प्रथमं साहसं स्मृतम् ॥३॥

फलफूल–कन्दमूल–पानी का क्षेत्र र कृषि उपकरण बिगार्नु, त्यहाँ काम गर्नेलाई दुःख दिई अनाज उब्जन नसक्ने बनाउनु तथा भएको अनाज चोर्नु वा लुट्नु प्रथम साहस हो ।

## मध्यम साहस

बासःपश्वन्नपानानां गृहोपकरणस्य च ।
एतेनैव प्रकारेण मध्यमं साहसं स्मृतम् ॥४॥



वस्त्र, पशु, अन्न र पेयको तथा गृह र घरका उपयोगी उपकरण यसरी नै नाश गर्नु मध्यम साहस हो ।

## उत्तम साहस

व्यापादो विषशस्त्राद्यैः परदारप्रधर्षणम् ।
प्राणोपरोधि यच्चान्यदुक्तमुत्तमसाहसम् ॥५॥

विष वा हतियारले मार्नु, परस्त्रीलाई बलात्कार गर्नु आदि जस्ता उग्र कर्म उत्तम साहस हुन् ।

## प्रथम र मध्यम साहसको दण्ड

**तस्य दण्डः क्रियापेक्षः प्रथमस्य शतावरः ।**
**मध्यमस्य तु शास्त्रज्ञैर्दृष्ट पञ्चशतावरः ॥६॥**

प्रथम साहसको दण्ड उसले गरेको कार्य अनुसार कम से कम सय पण र मध्यम साहसको कम से कम पाँच सय पण दण्ड हुन्छ भनी शास्त्रज्ञले बताएका छन् ।

## उत्तम साहसको दण्ड

**बधः सर्वस्वहरणं पुरान्निर्वासनाङ्कने ।**
**तदङ्गच्छेद इत्युक्तो दण्ड उत्तमसाहसे ॥७॥**



(उत्तम साहसमा कमसे कम हजार पण दण्ड हुन्छ) । मृत्युदण्ड, सर्वस्वहरण, नगरबाट निष्काशन, शरीरमा चिह्न लगाउनु र गधा चढाएर घुमाउनु उत्तम साहसका (अन्य) दण्ड हुन् ।

## दण्डमा समानता

**अविशेषेण सर्वेषामेष दण्डविधिः स्मृतः ।**
**बधादृते ब्राह्मणस्य न वधं ब्राह्मणोऽर्हति ॥८॥**

सबैका लागि यो दण्ड समान हुन्छ । मृत्युदण्ड बाहेकका अन्य दण्ड ब्राह्मणलाई पनि लागू हुन्छ किन कि ब्राह्मण वधयोग्य हुँदैन ।

## ब्राह्मणलाई दण्ड

शिरसो मुण्डनं दण्डस्तस्य निर्वासनं पुरात् ।
ललाटे चाभिशस्ताङ्को निर्याणं गर्दभेन च ॥९॥

उस (ब्राह्मण) का लागि मुण्डन, नगरबाट निष्कासन, निधारमा डामेर चिह्न लगाउने र गधा चढाएर घुमाउने जस्ता दण्ड हुन्छन् ।

## साहस दण्डपछिको योग्यता

स्यातां संव्यवहार्यौ तौ धृतदण्डौ तु पूर्वयोः ।
धृतदण्डोऽप्यसंभोज्यो ज्ञेय उत्तमसाहसे ॥१०॥



प्रथम र मध्यम साहसमा प्रायश्चित र दण्ड भोगी पुरुष लोक व्यवहारका लागि योग्य हुन्छ तर उत्तम साहसमा दण्ड पाएर पनि उ अरुसँग बोल्न योग्य हुँदैन । (उ कहिल्यै समाजमा मुख देखाउन लायक हुँदैन) ।

## आधि र चोरी

तस्यैव भेदः स्तेयं तु विशेषस्तत्र दृश्यते ।
आधिः साहसमाक्रम्य स्तेयमाधिश्छलेन तु ॥११॥

चोरी उत्तम साहस भित्रकै एउटा अङ्ग हो । यसमा केही कुरा विशेष देखिन्छ । बलपूर्वक लिनु आधि हो भने छलपूर्वक लिनु चोरी हो ।

## क्षुद्र, मध्यम र उत्तम चोरी

तदपि त्रिविधं प्रोक्तं द्रव्यापेक्षं महर्षिभिः ।
क्षुद्रमध्योत्तमानां तु द्रव्याणामपकर्षणात् ॥१२॥

आधि (वा चोरी) पनि द्रव्यको परिमाण र मूल्य अनुसार तीन थरीको हुन्छ भनी विद्वानहरूले बताएका छन् । सामान्य वस्तु बलपूर्वक लिनुलाई क्षुद्र, ठिकै खालका वस्तु बलपूर्वक लिनुलाई मध्यम र महगा र उत्तम वस्तु बलपूर्वक लिनुलाई उत्तम आधि भनिन्छ ।

## क्षुद्र वस्तु



मृद्भाण्डासनखट्वास्थिदारूचर्मतृणादि यत् ।
फलं चान्यकृतान्नं च क्षुद्रद्रव्यमुदाहृतम् ॥१३॥

माटोका भाँडाकुँडा, खाट, हात्ती आदिका हाड र यसले बनेका सामान, काठ (चन्दन आदि), छाला, घाँस, फलफूल र पकाएका अनाज जस्ता वस्तुलाई सामान्य (क्षुद्र) वस्तु भनिन्छ ।

## मध्यम वस्तु

वासः कौशेयवर्जं यद् गोवर्जं पशवस्तथा ।
हिरण्यवर्जं लोहं च मध्यं व्रीहियवा अपि ॥१४॥

रेसम बाहेकका कपडा, गाई बाहेकका पशु तथा सुन बाहेकका धातु र व्रीहिधान एवं जौ : यी मध्यम द्रव्य हुन् ।

## उत्तम द्रव्य

हिरण्यरत्नकौशेयस्त्रीपुङ्गोगजवाजिनाम् ।
देवब्राह्मणराज्ञां च द्रव्यं विज्ञेयमुत्तमम् ॥१५॥

सुन, रत्न, रेशमको कपडा, स्त्री, पुरुष, गाई, हाती, घोडा तथा देवता, ब्राह्मण र राजाको द्रव्य उत्तम द्रव्य हुन् ।



## स्तेय

उपायैर्विविधैरेषां छलयित्वापकर्षणम् ।
सुप्तप्रमत्तमत्तेभ्यः स्तेयमाहुर्मनीषिणः ॥१६॥

सुतेको, प्रमत्त (लापरवाह) र मत्त (नशालु) बाट सबै उपायले द्रव्य अपहरण गर्नुलाई विद्वानहरुले ‘स्तेय’ भनेका छन् ।

## चोरमाथि शङ्का गर्ने आधार

सहोढग्रहणात् स्तेयं होढेऽसत्यतिभोगतः ।
शङ्कात्वसज्जनैकार्थ्यादनायव्ययतस्तथा ॥१७॥

चोरिएको कुरा पाएर, अति उपभोग (लुटेको धन फुपूको श्राद्ध) गरेको देखेर, असज्जनसँग संसर्ग बढाएको देखेर, नचाहिँदो फजूल खर्च गरिरहेको देखेर र दुर्व्यसनमा लिप्त भएको देखेर त्यसका आधारमा मानिसलाई चोरको शङ्का गर्नु पर्दछ ।

## चोर सरहका दोषी

भक्तावकाशदातारः स्तेनानां ये प्रसर्पताम् ।
शक्तौ च य उपेक्षन्ते तेऽपि तद्दोषभागिनः ॥१८॥

घर भित्र पसेपछि चोरहरुलाई भाग लगाउन र विश्राम गर्न दिने, चोर्दै गरेको देखेर पनि रोक्न नखोज्ने वा धनीलाई डराएर नबताउने, समर्थ हुँदाहुँदै चोरसँग नभिड्ने र चोरलाई प्रत्यक्ष वा अप्रत्यक्ष सहायता गर्ने : यी सबै चोर सरहका दोषी हुन्छन् ।



उत्क्रोशतां जनानां च ह्रियमाणे धनेऽपि च ।
श्रुत्वा ये नाभिधावन्ति तेऽपि तद्दोषभागिनः ॥१९॥

चोरिन लाग्दा गुहार माग्नेको गुहार सुनेर पनि जो त्यहाँ उद्धार (सहायता) का लागि दौडेर उपस्थित हुने प्रयाश गर्दैनन् ती पनि चोर सरह दोषी हुन्छन् ।

## चोरलाई दिइने दण्ड

साहसेषु य एवोक्तस्त्रिषु दण्डो मनीषिभिः ।

स एव दण्डः स्तेयेऽपि द्रव्येषु त्रिष्वनुक्रमात् ॥२०॥

विद्वानहरुले जसरी साहसमा क्षुद्र, मध्यम र उत्तमको दण्ड विधान गरेका छन् त्यसरी नै चोरको स्तर हेरी चोरका लागि र चोर सरह दोषीका लागि पनि क्रमशः यिनै तीन किसिमका दण्ड बताएका छन् ।

## चोरीको जाँच वा चोर पत्ता लगाउने उपाय

गवादिषु प्रनष्टेषु द्रव्येष्वपहृतेषु वा ।
पदेनान्वेषणं कुर्युरामूलात्तद्विदो जनाः ॥२१॥

गाई हराउँदा वा द्रव्य चोरिँदा प्राणीको पैतालाको चिह्न थाहा पाउने कुशल व्यक्तिबाट अन्वेषण गराउनू र पदचिह्न पछ्याउँदै चोरसम्म पुग्ने प्रयाश गर्नू ।



ग्रामे व्रजे विवीते वा यत्र सन्निपतेत् पदम् ।
वोढव्यं तद्भवेत्तेन न चेत् सोऽन्यत्र तन्नयेत् ॥२२॥

गाऊँ, गौशाला वा शून्य स्थानमा जहाँ आएका पाइला देखिन्छ गएको पाइला देखिन्न, त्यो ठाऊँ छोडेर चोर अन्त गएको छैन र त्यहाँका मानिस कोही चोरका मतियार हुन भनी मान्नू । पाइला बाहिर गएको पनि देखिए (त्यो गाऊँ छोडी अर्कै ठाऊँमा गए) त्यो गाऊँका मानिस दोषमुक्त हुन्छन् ।

पदे प्रमूढे भग्ने वा विषमत्वाज्जनान्तिके ।
यस्त्वासन्नतरो ग्रामो ब्रजो वा तत्र पातयेत् ॥२३॥

पाइला स्पष्ट छैन वा जमिन अग्लोहोचो भई पाइला मेटिएका छन् भने गोप्यरुपले नजिकैका गाऊँ वा गोचरनमा जाँचपडताल गर्नू ।

समेऽध्वनि द्वयोर्यत्र स्तेयप्रायोऽशुचिर्जनः ।
पूर्वापदानैर्दृष्टो वा संसृष्टो वा दुरात्मभिः ॥२४॥

समतल बाटोमा चोरका पाइलासँगै अरुका समेत पाइला देखिन्छ भने त्यस आसपासका मानिसको दुष्ट चोरका साथ सम्बन्ध छ र ती पनि चोरीमा संलग्न छन् भनी थाहा पाउनू ।

ग्रामेष्वन्वेषणं कुर्युश्चचण्डालबधकादयः ।
रात्रिसञ्चारिणो ये च बहिष्कुर्युर्बहिश्चराः ॥२५॥



चोर हो भनी निश्चित भएपछि चण्डाल, पशुआदि जीव हत्या गर्ने भ्रष्ट वा रातमा विचरण गर्ने बाह्यचारीलाई गुप्तरुपले नियुक्त गरी अनुसन्धान गर्नू ।

## चोर पत्ता नलाग्दाको क्षतिपूर्ति

स्तेनेषुलभ्यमानेषु राजा दद्यात् स्वकाद् धनात् ।
उपेक्षमाणो ह्येनस्वी धर्मादर्थाच्च हीयते ॥२६॥

चोर पत्ता नलागे राजाले आफूले कमाएको धन चोरिनेलाई क्षतिपूर्ति दिनू । चोरको उपेक्षाले गर्दा राजा पापी भई धर्म एवं अर्थबाट च्यूत हुन्छ ।

इति साहसं चतुर्दशं विवादपदम्

✷

नारदीयमनुसंहिता, विवादखण्ड अन्तर्गत साहसका बारेमा वर्णन गरिएको साहस उप-खण्डको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिका श्लोकको संख्याः ६५१+२६=६७७

✷

## ॥ अथ वाग्दण्डपारुष्यं पञ्चदशं (षोडशं च) विवादपदम् ॥

## गालिगलौच सम्बन्धी विवाद

### परिभाषा

**देशजातिकुलादीनामाक्रोशन्यङ्गसंहितम् ।**
**यद्वचः प्रतिकूलार्थं वाक्पारुष्यं तदुच्यते ॥१॥**



देश, जात, कुल आदिलाई निन्दा गर्ने खालका आक्रोशयुक्त र तुच्छ वचनलाई “वाक्य पारुष्य (गालीगलौच)” भनिन्छ ।

### गालिगलौचका प्रकार

**निष्ठुराश्लीलतीव्रत्वात्तदपि त्रिविधं स्मृतम् ।**
**गौरवानुक्रमादस्य दण्डोऽपि त्रिविधः स्मृतः ॥२॥**

निष्ठुर, अश्लील र असह्य गरी यो तीन प्रकारको छ । क्रमैले यी ठूला हुनाले गर्दा दण्ड पनि तीन थरीको र त्यही क्रमले कडा हुन्छ ।

## निष्ठुर, अश्लील र असह्य गाली

**साक्षेपं निष्ठुरं ज्ञेयमश्लीलं न्यङ्गसंयुतम् ।**
**पातनीयैरुपक्रोशैस्तीव्रमाहुर्मनीषिणः ॥३॥**

आक्षेप लगाएर बोल्नुलाई "निष्ठुर", अप शब्द बोल्नुलाई "अश्लील" र पतनीय कर्मको आरोप लगाई रिसाएर बोल्नु "असह्य" हो भनी विद्वानहरुले भनेका छन् ।

## दण्डपारुष्य

**परगात्रेष्वभिद्रोहो हस्तपादायुधादिभिः ।**
**भस्मादीभिश्चोपघातो दण्डपारुष्यमुच्यते ॥४॥**



हात, गोडा र हतियार आदिले अरुको शरीरमा हान्नु तथा खरानी आदि द्रव्य तिनका शरीरमा फ्याँक्नुलाई "दण्ड पारुष्य" भनी बताइएको छ ।

## दण्डपारुष्यका प्रकार

**तत्रापि दृष्टं त्रैविध्यं मृदुमध्योत्तमक्रमात् ।**
**अवगूरण निस्सङ्गपातनक्षतदर्शनैः ॥५॥**

मृदु, मध्यम र उत्तम गरी यसका तीन भेद छन् । जस्तै-हातपात गर्नु वा लात हान्नु, बलपूर्वक स्थानच्यूत गर्नु (लौरो, डोरी, पत्थर आदिको प्रयोगले) र चोट पुऱ्याई (हातहतियारको प्रयोगले) रगत बगाइ दिनू ।

## वाक्पारुष्यको दण्ड

हीनमध्योत्तमानां तु द्रव्याणां समतिक्रमात् ।
त्रीण्येव साहसान्याहु प्रोक्तं कण्टकशोधनम् ॥६॥

सामान्य, मध्यम र उत्तम द्रव्य हरणका लागि साहस विवाद पदमा जुन तीन प्रकारका दण्डका विधान गरिएका थिए वाक्पारुष्यमा पनि तिनै दण्डलाई पीडा हटाउन प्रयोग गर्नुपर्दछ भनिएको छ ।

## दण्डका नियम

विधिः पञ्चविधस्तूक्त एतयोरुभयोरपि ।

विशुद्धिर्दण्डभाक्त्वं य तत्र सम्बध्यते यथा ॥७॥

साहस र दण्डपारुष्य दुवैको समानखालका पाँच विधि छन् । अपराध र दण्डको गहिरो सम्बन्ध छ । दण्डले अपराधलाई नियन्त्रण गरी मानिसलाई सुधार्न सक्नु पर्दछ, त्यसैले यो क्रूर हुनु हुँदैन । निर्दोषले दण्ड पाउनु पनि हुँदैन । यसैले अपराधका प्रकृति हेरी दण्डमा विविधता हुन्छ ।

## गालीगलौच र क्षमा

पारुष्ये सति रंरम्भादुत्पन्ने क्षुब्धयोर्द्वयोः ।
स मान्यते यः क्षमते दण्डभाक् योऽतिवर्तते ॥८॥

गालीगलौच गरिए पनि गर्ने व्यक्ति शुरुदेखि नै पछुताइ रहेको छ र गाली खानेले उसलाई क्षमादान पनि दिन्छ भने उ दण्डदिन योग्य हुँदैन । जो अझै रिसाइरहेको छ उ दण्डनीय हुन्छ ।

## वाक्पारुष्य र दण्डपारुष्यको समान दण्ड

पारुष्यदोषाधुतयोर्युगपत् सम्प्रवृत्तयोः ।
विशेषश्चेन्न दृश्येत विनयः स्यात् समस्तयोः ॥९॥

जहाँ वाक्पारुष्य र दण्डपारुष्य दुवै हुन्छ त्यहाँ कुनै विशेष भिन्नता छैन दुवैको बराबर दण्ड हुन्छ ।



## गाली गर्न शुरु गर्ने व्यक्ति अधिक दण्डनीय

पूर्वमाक्षारयेद् यस्तु नियतं स्यात् स दोषभाक् ।
पश्चात् यः सोऽप्यसत्कारी पूर्वे तु विनयो गुरुः ॥१०॥

जसले पहिले गालीगर्न शुरु गर्दछ उही दोषी हुन्छ । जसले पछि गाली गर्दछ उ पनि अपमान कर्ता भने हुन्छ । दुवैमध्ये गाली गर्न शुरु गर्ने व्यक्ति नै लोकमा अधिक दण्डनीय हुन्छ ।

## पुनः विवाद निकाल्ने दोषी

द्वयोरापन्नयोस्तुल्यमनुबध्नाति यः पुनः ।

स तयोर्दण्डमाप्नोति पूर्वो वा यदि वेतरः ॥११॥

पहिले आफैं चूप लागेका वा मध्यस्तकर्ता मार्फत चूप लागेका दुई झगडालुमध्ये फेरी जसले झगडा शुरु गर्दछ उही दोषी र दण्डनीय हुन्छ चूप लागेर बस्ने दोषी हुँदैन ।

## साधुमानिसलाई दण्ड दिने अधिकार हुनुपर्ने

यमेव ह्यतिवर्त्तेरन्नेते सन्तं जनं नृषु ।
स एव विनयं कुर्यान्न तद्विनयभाङ् नृपः ॥१२॥

नीच व्यक्तिले यदि समाजमा कुनै साधु सज्जनलाई अपमानित गरे ती सज्जनले उक्त नीचलाई दण्ड दिन पाउनु पर्दछ, त्यसको सोधखोज राजाले गर्न हुँदैन ।



## नीच र दण्ड

मला ह्येते मनुष्येषु धनमेषां मलात्मकम् ।
अतस्तान् घातयेद्राजा नार्थदण्डेन दण्डयेत् ॥१३॥

यी सबै नीच मानिस जसमा दोष छ तिनको धन पनि दोषयुक्त नै हुन्छ । तिनलाई राजाले वेत्रघातादि दण्ड दिनू, जरिवाना नतिराउनू ।

## ब्राह्मणलाई गरिने अपमान र दण्ड

शतं ब्राह्मणमाक्रुश्य क्षत्रियो दण्डमर्हति ।
वैश्योऽध्यर्धं शतं द्वे वा शुद्रस्तु वधमर्हति ॥१४॥

क्षत्रियले ब्राह्मणलाई अपमान गरे सय पण दण्ड पाउँदछ । वैश्यले एक सय पचास वा दुई सय पण दण्ड पाउँदछ भने शूद्रले वध दण्ड पाउँदछ ।

## क्षत्रियलाई गरिने अपमान र दण्ड

विप्रः पञ्चाशतं दण्ड्यः क्षत्रियस्याभिशंसने ।
वैश्यं चैवार्धपञ्चाशच्छूद्रं द्वादशको दमः ॥१५॥



ब्राह्मणले क्षत्रियलाई अपमान गरे पचास पण, वैश्यलाई अपमान गरे पच्चीस पण र शूद्रलाई अपमान गरे बाह्र पण जरिवाना हुन्छ ।

## समान वर्णको अपमानमा दण्ड

समवर्णद्विजादीनां द्वादशैव व्यतिक्रमे ।
वादेष्ववचनीयेषु तदेव द्विगुणं भवेत् ॥१६॥

द्विजातीमा समान वर्णमा अपमान हुँदा बाह्र पण र बोल्न नहुने कुरा बोलेकोमा दोबर (चौबीस पण) जरिवाना हुन्छ ।

## विकलाङ्गलाई अपमान गर्दाको दण्ड

काणं वा यदि वा खञ्जमन्यं वापि तथाविधम् ।
तथ्येनापि ब्रुवन्दाप्यो दण्डं कार्षापणान् परम् ॥१७॥

कानो वा खोरण्डोलाई वा विकलाङ्गलाई उसका विकल अङ्गलाई लक्षित गरी बोले, राजाले कमभन्दा कम एक कार्षापण दण्ड दिन सक्दछ ।

## दण्ड तिरी प्रायश्चित गरेकालाई अपमान नगर्नू

न किल्विषेणापवदेच्छास्त्रतः कृतपावनम् ।
न राज्ञा धृतदण्डं च दण्डयेत् तद्व्यतिक्रमे ॥१८॥



शास्त्र अनुसार प्रायश्चित र राजाबाट दण्डित भएपछि पहिले गरेको दोष भनेर निन्दा नगर्नु गरे दण्ड भोग्नु पर्दछ । कुनै पनि अपराधी तोकिएको दण्ड तिरी तोकिएको प्रायश्चित गरेपछि अपराधी हुँदैन ।

## अदण्डनीय व्यक्ति

लोकेऽस्मिन् द्वाववक्तव्यावदण्ड्यौ च प्रकीर्तितौ ।
ब्राह्मणश्चैव राजा च तौ हीदं विभृतो जगत् ॥१९॥

लोकसमाजमा अनिन्द्य र अदण्डनीय कोही छन् भने ती हुन् ब्राह्मण र राजा, किनकि यी दुवै जगतलाई सम्हाल्ने व्यक्तिहरू हुन् ।

## मिथ्या आरोपमा दोषी

पतितं पतितेत्युक्त्वा चोरं चोरेति वा पुनः ।
वचनात् तुल्यदोषः स्यान्मिथ्या द्विर्दोषभाग् भवेत् ॥२०॥

(अप्रमाणित) पतितलाई पतित र चोरलाई चोर भनेर अपमान गर्ने पनि ती सरह नै दोषी हुन्छ । गलत आरोप लगाए दोब्बर दोषी हुन्छ ।

## द्विजातीको अपमान र दण्ड

नामजातिग्रहं त्वेषामभिद्रोहेण कुर्वतः ।

निखेयोऽयोमयः शङ्कुः शूद्रस्याष्टदशाङ्गुलः ॥२१॥

जुन शूद्र अवज्ञापूर्वक द्विजातीका नाम तथा जाती भन्दै अपमान गर्दछ उसको मुखमा दश अङ्गुलको तताएको फलाम छिराउनू ।

## द्विजातिलाई धर्मको उपदेश दिनेलाई दिने दण्ड

धर्मोपदेशं दर्पेण द्विजानामस्य कुर्वतः ।
तप्तमासचयेत्तैलं वक्त्रे श्रोत्रे च पार्थिवः ॥२२॥

जुन शूद्र आफ्नो घमण्ड देखाउँदै द्विजातीलाई धर्मको उपदेश दिन लाग्दछ राजाले त्यसको मुख र कानमा तताइएको तेल हालि दिनू ।

## ब्राह्मणमाथि हुने अपराध र दण्ड

येनाङ्गेनावरो वर्णो ब्राह्मणस्यापराध्नुयात् ।
तदङ्गमेवच्छेत्तव्यमेवं शुद्धिमवाप्नुयात् ॥२३॥

जो शूद्र वर्ण ब्राह्मणको जुन अङ्गमा अपराध गर्दछ उसको त्यही अङ्ग काटिन्छ । यसो गर्नाले उ शुद्ध हुन्छ ।

## विभिन्न दण्डका विधान

सहासनमभिप्रेप्सुरुत्कृष्टस्यावकृष्टजः ।
कटिदेशेऽङ्कय निर्वास्यः स्फिग्देशं वास्या कर्तयेत् ॥२४॥

निम्नवर्णको व्यक्ति माथ्लोवर्णको व्यक्तिसँग बस्न इच्छा गर्दछ भने उसका कमरमा तातो फलामले चिह्न बनाई कमरका दुवै भागमा कोरेर निकालि दिनू ।



अवनिष्ठीवतो दर्पाद् द्वावोष्ठौ छेदयेन्नृपः ।
अवमूत्रयतः शिश्नमेवशर्धयतो गुदम् ॥२५॥

निम्नवर्णका व्यक्ति माथ्लोवर्णको व्यक्तिलाई घमण्डले यदि थुक्दछन् भने तिनको दुवै ओठ चिर्नू, मुत फ्याँके लिङ्ग र पादे गुदद्वार चिर्नू ।

केशेषु गृह्णतो हस्तौ छेदयेदविचारयन् ।
पादयोर्नासिकायां वा ग्रीवायां वृषणेषु च ॥२६॥

कपाल, गोडा, नाक, जिब्रो र अण्डकोष समातेर दुःख दिए राजाले नसोची तिनको हात काट्नू ।

उपक्रुश्य तु राजानं वर्त्मनि स्वे व्यवस्थितम् ।

**जिह्वाछेदाद्भवेच्छुद्धिः सर्वस्वहरणेन वा ॥२७॥**

आफ्नो कर्तव्यमा लागेका राजालाई कटु वचन बोल्नेलाई जिब्रो काटेर र सर्वस्व हरण गरेर दण्ड दिइन्छ ।

**राजनि प्रहरेद् यस्तु कृतागस्यपि दुर्मतिः ।**
**शूले तमग्नौ विपचेद् ब्रह्महत्याशताधिकम् ॥२८॥**

दुष्ट बुद्धिका व्यक्ति जो पाप गरेर पनि राजालाई प्रहार गर्दछन् तिनलाई शूलीमा चढाउनू वा आगोमा फ्याँक्नू किनकी यो काम सय वटा ब्रह्महत्या गर्नुभन्दा पनि ठूलो (बढी पाप) हो ।

**पुत्रापराधे न पिता न श्ववाञ् शुनि दण्डभाक् ।**
**न मर्कटे च तत्स्वामी तैरेव प्रहितो न चेत् ॥२९॥**



बाउले प्रेरणा दिएको नभए छोराले गरेको अपराधमा बाउ दण्डित हुँदैन । मालिकको संलग्नता नदेखिएमा उसले पालेका घोडा, कुकुर, बाँदर आदि जनावरले गर्ने उत्पातमा उ दोषी हुँदैन ।

इति वाग्दण्डपारुष्यं पञ्चदशं (षोडशं च) विवादपदम्

नारदीयमनुसंहिता, विवादखण्ड अन्तर्गत गालिगलौच आदिका बारेमा वर्णन गरिएको वाग्दण्डपारुष्य उप-खण्डको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

शुरुदेखिका श्लोकको संख्याः ६७७+२९=७०६

## ॥ अथ द्यूतसमाह्वयं सप्तदशं विवादपदम् ॥
## जुवातासको विवाद

### परिभाषा

**अक्षवध्रशलाकाद्यैर्देवनं जिह्मकारितम् ।**
**पणक्रीडा वयोभिश्च पदं द्यूतसमाह्वयम् ॥१॥**

पाशा-छालाको पट्टि-हात्तिका दाँतका सामान (आदि) द्वारा, चरा लडाएर र बाजी थापेर आयोजना गरिने कपटताले खेलिने खेल द्युतसमाह्वय हो ।

### जुवाका नियम



**सभिकः कारयेद् द्यूतं देयं दद्याच्च तत दृतम् ।**
**दशकं च शतं वृद्धिस्तस्य स्याद् द्यूतकारिणः ॥२॥**

राजाबाट नियुक्त जुवाको खालेले जुवा खेलाउँदछ तथा राजालाई तिनुपर्ने कर तिर्दछ । खेलमा हार्नेबाट रकम लिई उ जित्नेलाई दिन्छ र यसो गरे बापत उ जित्नेसँग जितेको रकमको दश प्रतिशत लिन्छ ।

### पाशाको खेल

**द्विरभ्यस्ताः पत्यन्त्यक्षा गेहे यस्याक्षदेविनः ।**
**जयं तस्यापरस्याहुः कितवस्य पराजयम् ॥३॥**

जुवाडेको पाशा कल्पित पणका विषयमा यदि दुई पटक इच्छा गरिए अनुरुप पर्दछ भने उसको जित हुन्छ र अर्कोको हार हुन्छ ।

## पाशाको खेलमा शङ्का हुँदा दर्शकबाट हटाउनू

कितवेष्वेव तिष्ठेयुः कितवाः संशयं प्रति ।
त एव तस्य द्रष्टारः स्युस्त एव च साक्षिणः ॥४॥

यो पाशाखेलमा यदि शङ्का लागे दर्शकबाट शङ्का हटाउनू किनकी ती त्यसमा साछी प्रमाण हुन्छन् ।

## जुवामा हारजितका नियम



अशुद्धं कितवो नान्यमाश्रयेद द्यूतमण्डलम् ।
प्रतिहन्यान्न सभिको दापयन्तं स्वमिष्टतः ॥५॥

एकस्थानमा हारेको खेलाडीले अर्को स्थानमा जुवा नखेल्नू । हरुवाले आफूले हारेको पैसा म दिन्न भन्न सक्दैन, किनकी पहिले नै धरौटी राखिएको हुन्छ । जुवामा जित्नेले तिर्नुपर्ने रकम तिर्दिन भन्न पनि सक्दैन किन कि उसलाई जितेको पैसा दिँदा नै खालेले काट्नुपर्ने रकम काटेर दिन्छ ।

## जुवामा कपट र दण्ड

कूटाक्षदेविनः पापान्निर्भजेद् द्यूतमण्डलात् ।

कण्ठेऽक्षमालामासज्ज्य स ह्येषां विनयः स्मृतः ॥६॥

खेलमा कपट गर्नेलाई घाँटीमा पाशाको माला लगाइदिनू र खालबाट निकालि दिनू, यहि नै उसको दण्ड हो ।

इति द्यूतसमाह्वयाख्यं सप्तदशं विवादपदम्

✷

नारदीयमनुसंहिता, विवादखण्ड अन्तर्गत जुवाका बारेमा वर्णन गरिएको द्यूतसमाह्वय उप-खण्डको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिका श्लोकको संख्याः ७०६+६=७१२

✷

## ॥ अथ प्रकीर्णकमष्टादशं विवादपदम् ॥



## विविध विषय

### विषयवस्तु

प्रकीर्णके पुनर्ज्ञेया व्यवहारा नृपाश्रयाः ।
राज्ञामाज्ञाप्रतीघातस्तत्कर्मकरणन्तथा ॥१॥
पुरप्रदानसम्भेदः प्रकृतीनान्तथैव च ।
पाषण्डनैगमश्रेणी गणधर्मविपर्ययाः ॥२॥
पितृपुत्रविवादश्च प्रायश्चित्तव्यतिक्रमः ।
प्रतिग्रहविलोपश्च कोप आश्रमिणामपि ॥३॥
वर्णसङ्करदोषश्च तद्वृत्तिनियमस्तथा ।
न दृष्टं यच्च पूर्वेषु तत्सर्वं स्यात्प्रकीर्णके ॥४॥

यस प्रकरणमा राजाबाट मुद्दामामिलासँग सम्बन्धित विषयमा गरिने कामकारवाहीको विवेचना, राजाको आदेशको पालना र अवज्ञाका विषय समावेश भएका छन् । उप-नगर बनाउने अनुमति र आर्थिक सहयोग, प्रजालाई विभिन्न तरिकाले गरिएको वर्गीकरण, वेद विरोधी पाखण्ड-नैगम आदि सम्प्रदाय तथा अन्य सङ्घ-सङ्गठन सम्बन्धी दृष्टिकोण, बाउछोराको विवाद, प्रायश्चित उल्लङ्घन र दण्ड, आश्रममा रहेकालाई दिइने सहयोग रोक्ने र कारवाही गर्ने, वर्णसङ्करताको दोष, वर्णसङ्करको पेसा र स्रोत आदिजस्ता पहिलेका प्रकरणमा नबताइएका सबै कुरा यो प्रकीर्णक प्रकरणमा बताइएका छन् ।

### आश्रम धर्मको पालना गराउनू

राजा त्ववहितः सर्वानाश्रामान् परिपालयेत् ।
उपायैः शास्त्रविहितैश्चतुर्भिः प्रकृतैस्तथा ॥५॥

यो यो वर्णोऽपहीयेत यो वोद्रेकमनुव्रजेत् ।
तं तं दृष्ट्वा स्वतो मार्गात् प्रच्युतं स्थापयेत् पथि ॥६॥

राजाले सबै कुरा जानीबुझी शास्त्रले बताएका चार उपाय (साम, दान, दण्ड र भेद) मार्फत प्रजाहरुलाई चार आश्रममा राखेर पालना गर्नू । जुन जुन वर्ण आफ्नो वर्णबाट तल झर्दछन् वा आफ्नो वर्ण धर्म बाहेकका आचरण गर्दछन्, राजाले तिनलाई विधिपूर्वक आआफ्नो वर्णमा पुनःस्थापित गराउनू ।

### दण्ड दिनुपर्नेलाई दण्ड दिनू

अशास्त्रोक्तेषु चान्येषु पापयुक्तेषु कर्मसु ।
प्रसमीक्ष्यात्मना राजा दण्डं दण्ड्येषु पातयेत् ॥७॥

राजाले शास्त्रविरोधी र अन्य पापकर्ममा लाग्ने प्रजालाई छुट्याई दण्ड दिन योग्य व्यक्तिलाई दण्ड दिनू ।

## अधार्मिक क्रियाकलापलाई निरुत्साहित गर्नू

श्रुतिस्मृतिविरुद्धञ्च जनानामहितञ्च यत् ।
न तत् प्रवर्तयेद्राजा प्रवृत्तञ्च निवर्तयेत् ॥८॥

वेद तथा धर्मशास्त्रको विरोधमा एवं प्राणीको अहिततिर लागेका प्रजालाई राजाले नउक्साउनू, निरुत्साहित पार्नू ।

## न्यायको पालना



न्यायापेतं यदन्येन राज्ञाज्ञानकृतञ्च यत् ।
तदप्यन्यायविहितं पुनर्न्याये निवेशयेत् ॥९॥

अरुहरु जसले जानी नजानी न्यायको बाटो छाडेका छन्, तिनलाई पनि राजाले यथासम्भव उपाय गरी न्यायको बाटोमा लेराउनू ।

## दण्डनीय व्यक्ति

राज्ञा प्रवर्तितान् धर्मान् यो नरो नानुपालयेत् ।
नह्यः स पापो वध्यश्च लोपयन् राजाशासनम् ॥१०॥

राजाले लागु गरेका धर्म (कानुन) जसले पालना गर्दैनन् ती पापी राजाज्ञा उल्लङ्घन गरेका कारण दण्डयोग्य र वधयोग्य हुन्छन् ।

## सर्वस्वहरणको नियम

आयुधान्यायुधीयानां वाह्यादीन् वाह्यजीविनाम् ।
वेश्यास्त्रीणामलङ्कारान् वाद्यातोद्यादि तद्विदाम् ॥११॥
यच्च यस्योपकरणं येन जीवन्ति कारुकाः ।
सर्वस्वहरणेऽप्येतान्न राजा हर्तुमर्हति ॥१२॥

सर्वस्वहरण गर्ने बेलामा राजाले हतियारबाट गुजारा चलाउनेका हतियार, हात्ती-घोडा-रथ-गाई आदिबाट गुजारा चलाउनेका ती ती जनावर, नगरवधूका गहना, बाजा बजाएर गुजारा चलाउनेका बाजागाजा तथा शिल्प गरेर गुजारा चलाउने शिल्पकारका उपकरण (जस्तै : दाउरेको बञ्चरो, कुम्हालेको चक्र आदि) जफत नगर्नू ।



## राजा र ब्राह्मण अनिन्दनीय

अनादिश्चाप्यनन्तश्च द्विपदां पृथिवीपतिः ।
दीप्तिमत्त्वाच्छूचित्वाच्च यदि न स्यान्न पथश्च्युतः ॥१३॥

राजा र ब्राह्मण यदि पथच्च्यूत छैनन् भने ती निर्देशन र निन्दायोग्य हुँदैनन् किनकी राजा राजशक्तिले तेजस्वी र ब्राह्मण शौचले शुद्ध हुने गर्दछन् ।

## राजाका कारण प्रजाको नाश

यदि राजा न सर्वेषां वर्णानां दण्डधारणम् ।
कुर्यात् पथो व्यपेतानां विनश्येयुरिमाः प्रजाः ॥१४॥

यदि राजा सबै वर्णमाथि दण्ड चलाउँदैनन् भने त सबै प्रजा पथभ्रष्ट भई आफैं नासिन्छन् ।

## दण्ड पालना नहुँदा नै विकृति बढ्दछ

ब्राह्मणं ब्राह्मणो हन्यात् क्षत्रियः क्षात्रमुत्सृजेत् ।
स्वकर्म जह्याद्वैश्यश्च शूद्रः सर्वान् विशेषयेत् ॥१५॥



दण्डपालनको अभावमा ब्राह्मणले ब्राह्मणत्व र क्षत्रियले क्षत्रियधर्म छोड्दछ । वैश्यले आफ्नो कर्म त्याग गर्दछ र शूद्रले सबैलाई अतिक्रमण गर्दछ ।

राजानश्चेन्नाभविष्यन् पृथिव्यां दण्डधारणे ।
शूले मत्स्यानिवापक्ष्यन् दुर्बलान् बलवत्तराः ॥१६॥

राजा प्रजाको रक्षाका लागि दण्डधारण गर्दैन भने बलियोले निर्बललाई भालामा माछा उनेझैं उन्न थाल्दछ ।

## राजधर्म

सतामनुग्रहो नित्यमसतां निग्रहस्तथा ।

**एष धर्मः स्मृतो राज्ञामर्थश्चापीडयन् प्रजाः ॥१७॥**

सज्जनलाई कृपा गर्नु, दुष्टलाई दमन गर्नु र प्रजालाई आर्थिकरूपमा अनावश्यक पीडा नदिनु राजाको धर्म हो ।

**न लिप्यते यथा बह्निर्दहञ्छश्वदिमाः प्रजाः ।**
**तथा न लिप्यते राजा दण्डं दण्ड्येषु पातयन् ॥१८॥**

जसरी आफ्नो चपेटामा आउने भवन, श्रीसम्पत्ति जलाउँदा पनि कसैले आगोलाई निन्दा गर्दैनन्, बहिष्कार गर्दैनन्, त्यसरी नै राजा पनि दण्डनीय व्यक्तिलाई दण्ड दिएर निन्दनीय र पापी हुँदैन ।

**आज्ञा तेजः पार्थिवानां सा च वाचि प्रतिष्ठिता ।**

**ते यद् ब्रूयुरसत्सद्वा स धर्मो व्यवहारिणाम् ॥१९॥**

राजाको तेज भन्नु नै उसले दिने आज्ञा हो र यो उसको बोलीमा रहेको हुन्छ । राजाबाट सत्य वा असत्य जे बोलिन्छ त्यो कार्यान्वयन हुनु भनेकै धर्म हो र यही आधारमा उसलाई बुद्धिमान् एवं प्रतापी मान्ने गरिन्छ ।

**राजा नाम चरत्येष भूमौ साक्षात् सहस्रदृक् ।**
**न तस्याज्ञां व्यतिक्रम्य सन्तिष्ठेरन् प्रजाः क्वचित् ॥२०॥**

राजाले हजारौं आँखा भएका देवताका राजा इन्द्रले हेरे जसरी सबैतिर हेरिरहेका हुन्छन् । त्यसैले उनको आज्ञा नमानेर प्रजा शान्तिपूर्वक बस्न कतै पनि सक्दैनन् ।

**रक्षाधिकारादीशत्वाद्भूतानुग्रहदर्शनात् ।**
**यदेव कुरुते राजा तत्प्रमाणमिति स्थितिः ॥२१॥**

आश्रयहीन, दुर्बल आदि प्रजाका जीवन, सम्मान र प्रगतिको सुरक्षाको प्रत्याभूतिका लागि दुष्टलाई दण्ड आदि दिने आदिजस्ता राजाका सबै कामलाई न्यायसम्मत मानी प्रमाण सरह लिने गरिन्छ ।

**विगुणोऽपि यथा स्त्रीणां पूज्य एव पतिः सदा ।**
**प्रजानां विगुणोऽप्येवं पूज्य एव नराधिपः ॥२२॥**

जसरी गुणहीन भएपनि पति स्त्रीका लागि पूजनीय हुन्छ त्यसरी नै गुणहीन भएपनि राजा प्रजाका लागि पूजनीय हुन्छ ।



**तपः क्रीताः प्रजा राज्ञा प्रभुरासीत्ततो नृपः ।**
**तस्मात्तद्वचसि स्थेयं वार्त्ता चासां तदाश्रया ॥२३॥**

राजाले (पूर्वजन्मको) तपस्याबाट प्रजामाथि शासन गर्ने अधिकार पाएका हुन्छन् । यसैले प्रजाका मालिक राजा हुन् । उनको आदेश मानेर प्रजा बस्नु । प्रजाले गर्ने हरेक पेसा राजाकै मातहतबाट सुनिश्चित गरिन्छन् ।

**पञ्च रूपाणि राजानो धारयन्त्यमितौजसः ।**
**अग्नेरिन्द्रस्य सोमस्य यमस्य धनदस्य च ॥२४॥**

अग्नि, इन्द्र, चन्द्रमा, यमराज र कुबेरको अंश बोकेका हुनाले राजामा ती देवताको तेज समावेश भएको हुन्छ । त्यसैलै उनी अति नै तेजस्वी देखिने र हुने गर्दछन् ।

कारणान्निर्निमित्तं वा यदा क्रोधवशं गतः ।
प्रजा दहति भूपालस्तदाग्निरभिधीयते ॥२५॥

कुनै कारण रिसाउँदै प्रजालाई पीडा दिने राजाको रूपलाई अग्निरूप भनिन्छ ।

यदा तेजः समालम्ब्य विजिगीषुरुदायुधः ।
अभियाति परान्राजा तदेन्द्रः समुदाहृतः ॥२६॥

जब राजा तेजको आश्रय लिएर विजय गर्नका लागि हतियार लिएर शत्रुलाई दमन गर्दछन् तब उनको त्यो रूपलाई इन्द्र भनिन्छ ।

विगतक्रोधसन्तापो हृष्टरुपो यदा नृपः ।

प्रजानां दर्शनं याति सोम इत्युच्यते तदा ॥२७॥

जब राजा क्रोध र पीरलाई छाडी खुशी भएर प्रजालाई दर्शन दिन बस्ने गर्दछन् तब उनको त्यो रूपलाई चन्द्रमा भनिन्छ ।

धर्मासनगतः श्रीमान्दण्डं धत्ते यदा नृपः ।
समः सर्वेषु भूतेषु तदा वैवस्वतो यमः ॥२८॥

जब राजा सबै प्राणीमा समान भाव राख्दै धर्मासनमा बसी दोषीलाई दण्ड दिनका लागि तयार रहन्छन् तब उनको त्यो रूपलाई यमराज भनिन्छ ।

यदतिथिगुरुप्राज्ञान् भृत्यादीनवनीपतिः ।

**अनुगृह्णाति दानेन तदा स धनदः स्मृतः ॥२९॥**

राजा जब अतिथि, गुरु, विद्वान तथा सेवक आदिलाई दान र दया बाँडिरहेका हुन्छन् तब उनको त्यो रूपलाई कुबेर भनिन्छ ।

**तस्मात्तं नावजानीयान्नाक्रोशेन्न विशेषयेत् ।**
**आज्ञायां चास्य तिष्ठेत मृत्युः स्यात्तद्व्यतिक्रमे ॥३०॥**

यसैले राजाको आदेशलाई अवज्ञा नगर्नु, उनलाई रिस नगर्नु आदेश मानेर बस्नु, नमाने मृत्यु अनीवार्य हुन्छ ।

**तस्य वृत्तिः प्रजारक्षा वृद्धप्राज्ञोपसेवनम् ।**
**दर्शनं व्यवहाराणामात्मनश्चाभिरक्षणम् ॥३१॥**



प्रजालाई रक्षा गर्नु, वृद्ध र विद्वानको सेवा गर्नु, मुद्दामामिला हेरी फैसला गर्नु र आत्मचिन्तन एवं आत्मरक्षा गर्नु राजाका धर्मअनुसारका पेसा हुन् ।

**ब्राह्मणानुपसेवेत नित्यं राजा समाहितः ।**
**संयुक्तं ब्राह्मणैः क्षत्रं मूलं लोकाभिरक्षणे ॥३२॥**

सधैं एकाग्रचित्त भएर राजाले ब्राह्मणप्रति हुने, गरिने सम्मानको रक्षा गर्नु । आफ्नो अभिवृद्धिका लागि ब्राह्मणका साथ मिलेर क्षत्रियधर्मको मूलको आश्रय लिई प्रजाको रक्षा गर्नु ।

**ब्राह्मणस्यापरीहारोऽजघन्यासनमग्रतः ।**

प्रथमं दर्शनं प्रातः सर्वेषां चााभिवादनम् ॥३३॥

निर्णय गर्ने सिंहासनमा बस्ने समयमा राजाले अगिल्तिर ब्राह्मणको आसन पनि अवश्य राख्ने गर्नु । नित्य प्रातः ब्राह्मणहरुलाई दर्शन र अभिवादन गर्नु ।

अग्रं नवेभ्यः सस्येभ्यो मार्गदानञ्च गच्छतः ।
भैक्षहेतोः परागारे प्रवेशश्चानिवारितः ॥३४॥

राजाले नयाँ अनाज पहिले ब्राह्मणलाई खुवाउनू, बाटो हिँड्दा उनलाई अघि लगाउनू वा उनको बाटो छाडी दिनू, भिक्षा माग्न हिँडेका ब्राह्मणलाई कुनै घरमा पस्नबाट नरोक्नू ।

ब्राह्मण धर्म



समित्पुष्पोदकादानेष्वस्तेयं सपरिग्रहात् ।
अनाक्षेपः परेभ्यश्च सम्भाषश्च परस्त्रिया ॥३५॥

समिधा, फूल र जलजस्ता कुरा आफैं (नसोधी) लिनाले ब्राह्मण चोर हुँदैन । मुख नहेरी ब्राह्मण परस्त्रीका साथ कुराकानी गर्न सक्दछ, आक्षेप लाग्दैन ।

नदीष्ववेतनस्तारः पूर्वमुत्तरणन्तथा ।
करेष्वशुल्कदानञ्च नचेद् वणिज्यामस्य तत् ॥३६॥

नदी तर्ने बेलामा उनले शुल्क तिर्नु पर्दैन पहिले उनैलाई तारिन्छ । व्यापारमा पनि उनले कर तिर्नु पर्दैन ।

वर्तमानोऽध्वनि श्रान्तो गृह्णन्नेकाशनः स्वयम् ।
ब्राह्मणो नापराध्नोति द्वाविक्षू पञ्च मूलिकान् ॥३७॥

हिँड्दाहिँड्दा थाकेको वा भोकप्यासले पीडित भएको ब्राह्मणले बाटोका आसपासका खेतबारीमा आफैं पसी दुईवटा उखु भाँचेर वा पाँच वटा मूला उखेलेर खाए उ अपराधी हुँदैन ।

नाभिशस्तान्न पतितान्न द्विषो नच नास्तिकात् ।
न सोपधान्नानिमित्तन्न दातारं प्रपीडय च ॥३८॥

तर निन्दित वा दूषित, पतित, शत्रु, नास्तिक र ब्याज खाएर बाँच्नेले मनमा पीडा लिई दिएको दान धर्मकर्म गर्न बाहेक (आफ्नो उपभोगका लागि) ब्राह्मणले नलिनु ।



कर

अर्थानां भूरिभावाच्च देयत्वाच्च महात्मनाम् ।
श्रेयान् परिग्रहो राज्ञामन्येभ्यो ब्राह्मणादृते ॥३९॥

माग्ने र महात्माहरुलाई दिनका लागि ब्राह्मण बाहेक सबै व्यक्तिसँग धन (कर) लिनु राजाको कर्तव्य हो ।

राजा र ब्राह्मणले कर्तव्यच्च्यूत नहुनू

ब्राह्मणश्चैव राजा च द्वावप्येतौ धृतव्रतौ ।

नैतयोरन्तरं किञ्चित् प्रजाधर्माभिरक्षणात् ॥४०॥

ब्राह्मण र राजा आफ्नो बाटो (धर्म) बाट कहिल्यै च्यूत नहुनु । धर्म अनुसार प्रजाको रक्षा गर्ने सम्बन्धमा यि दुईमा कुनै भिन्नता छैन ।

कर असुली

धर्मज्ञस्य कृतज्ञस्य रक्षार्थं शासतोऽशुचीन् ।
मेध्यमेव धनं प्राहुस्तीक्ष्णस्यापि महीपतेः ॥४१॥

धर्मज्ञ र परोकारीको रक्षा गर्न र अपराधी माथि शासन गर्न तत्पर रहने राजाले प्रजाबाट कठोरतापूर्वक कर असुले पनि त्यो धन चोखो हुन्छ भनी बताइएको छ ।



राजासँग लिइने दान

(यो राज्ञः प्रतिगृह्णाति लुब्धस्योच्छास्त्रवर्तिनः ।
स पर्यायेण यातीमान्नरकानेकविंशतिम् ॥

जो लोभको वशमा परेर शास्त्रको बाटो छोडी राजाबाट दान लिन्छन् (राजकोषको दुरुपयोग गर्दछन्) ती क्रमैले एक्काईस वटा नरकमा घुम्दछन् ।)

राजकोष

शुचीनामशुचीनाञ्च सन्निपातो यथाम्भसाम् ।
स तत्र समतां याति तद्वद्राज्ञां धनागमः ॥४२॥

जसरी शुद्ध वा अशुद्ध जल समुद्रमा पुगेर मिल्दछन् त्यसै गरी राजकोषमा सबै थरी धन आई मिलेर बस्दछ (शुद्ध भएर रहन्छ) ।

यथा चाग्नौ स्थितं दीप्ते शुद्धिमाप्नोति काञ्चनम् ।
एवमेवागमाः सर्वे शुद्धिमायान्ति राजसु ॥४३॥

जसरी अगोमा परेपछि आगोको तेजले गर्दा सुन शुद्ध हुन्छ त्यसरी नै सबै खाले धन राजाका समीपमा पुगेपछि शुद्ध हुन्छ ।

## दान दिन अनुमति

यदा स कश्चित् स्वं द्रव्यं ब्राह्मणेभ्यः प्रयच्छति ।
तद्राज्ञाप्यनुमन्तव्यमेष धर्मः सनातनः ॥४४॥



जोसुकैले पनि जब आफ्नो धन ब्राह्मणहरुलाई दान दिन चाहन्छ उसले राजाबाट अनुमति लिनु पर्दछ–यो सनातन धर्म हो ।

## मालपोत

अन्यत्र कारादुचिताद्भूमेः षड्भागसञ्ज्ञितात् ।
बलिः स तस्य विहितः प्रजापालनवेतनः ॥४५॥

भूमिबाट प्राप्त धनको छ भागको एक भाग मालपोतको रुपमा प्रजापालनका लागि राजाले पाउनु (लिनु) पर्दछ ।

## दानका नियम

शक्यं तत् पुनरादातुं यदब्राह्मणसात्कृतम् ।
ब्राह्मणाय तु यद्दत्तन्न तस्याहरणं पुनः ॥४६॥

ब्राह्मणलाई दिन अठोट गरी नदिइएको धन तिनलाई दिन लगाउन सकिन्छ तर तिनलाई दिइएको धन पुनः फिर्ता लिन सकिँदैन ।

## ब्राह्मणका कर्म र पेसा

दानमध्ययनं यज्ञः कर्मास्योक्तं त्रिलक्षणम् ।
याजनाध्यापने वृत्तिस्तृतीयस्तु प्रतिग्रहः ॥४७॥



ब्राह्मणका दान, अध्ययन र यज्ञ : यि तीन नित्य कर्म हुन् । यज्ञ गराउनु, पढाउनु र दान लिनु : यि तीनलाई उसका जीवन चलाउने पेसाका रुपमा मानिन्छ ।

## दान लिँदाका नियम

स्वकर्मणि द्विजस्तिष्ठन् वृत्तिमाहारयेत् कृताम् ।
नासद्भ्यः परिगृह्णीयाद्वर्णेभ्यो नियमे सति ॥४८॥

ब्राह्मणले आफ्नो धर्म अनुसारको आचरण गरी बस्नु वा पेसाका लागि राजाबाट दान लिनु तर वर्णधर्ममा नियम पूर्वक बसेर असद् वर्णसँग दान नलिनू ।

## राजाज्ञा

अशुचिर्वचनाद्यस्य शुचिर्भवति पूरुषः ।
शुचिश्चैवाशुचिः सद्यः कथं राजा न दैवतम् ॥४९॥

जसका बचनले अशुद्ध व्यक्ति शुद्ध हुन्छ र शुद्ध व्यक्ति अशुद्ध हुन्छ त्यो राजा (वा ब्राह्मण) किन देवता नहुनु ? ।

विदुर्यस्यैव देवत्वं राज्ञो ह्यमिततेजसः ।
तस्य ते प्रतिगृह्णन्तो न लिप्यन्ते कदाचन ॥५०॥

जो अपरिमित तेज भएका राजाको देवत्वलाई जान्दछ उसले राजाबाट दान लिए पनि पाप लाग्दैन ।



## अष्टमङ्गल

लोकेऽस्मिन् मङ्गलान्यष्टौ ब्राह्मणो गौर्हुताशनः ।
हिरण्यं सर्पिरादित्य आपो राजा तथाष्टमः ॥५१॥

यो संसारमा आठ मङ्गलसूचक वस्तु छन्-ब्राह्मण, गाई, अग्नि, सुन, घिऊ, सूर्य, जल र राजा ।

एतानि सततं पश्येन्नमस्येदर्चयेच्च तान् ।
प्रदक्षिणं च कुर्वीत तथाह्यायुर्न हीयते ॥५२॥

आयु बढाउन नित्य यिनको दर्शन, अर्चना र प्रदक्षिणा गर्नु पर्दछ ।

## तस्कर

**द्विविधास्तस्करा ज्ञेयाः परद्रव्यापहारिणः ।**
**प्रकाशाश्चाप्रकाशाश्च तान् विद्यादात्मवान्नृपः ॥५३॥**

अर्काको वस्तु अपहरण गर्ने तस्करका दुई भेद छन् । ज्ञानी राजाले तिनलाई देखिने तस्कर र नदेखिने तस्कर भनी थाहा पाउनु ।

## देखिने तस्कर

**प्रकाशवञ्चकास्तत्र कूटमानतुलाश्रिताः ।**

**उत्कोदकाः सोपधिकाः कितवाः पण्ययोषितः ॥५४॥**
**प्रतिरूपकराश्चैव मङ्गलादेशवृत्तयः ।**
**इत्येवमादयो ज्ञेयाः प्रकाशा लोकवञ्चकाः ॥५५॥**

कपटपूर्ण तरिकाले नापतौलमा कमबढी गर्ने, अन्यायपूर्वक पैसा लिने (घूस), बलपूर्वक अरुलाई काममा लगाउने, जुवाडे, वेश्या, कृत्रिम उपाय अपनाएर प्राकृतिक जस्तै वस्तु बनाउने (नक्कली कुरा बनाएर बेच्ने) तथा साधुसज्जनको भेषमा सोझा प्रजालाई ठग्दै आफ्नो गुजारा चलाउने आदि : यि देखिने खालका तस्कर हुन् ।

## नदेखिने तस्कर

अप्रकाशास्तु विज्ञेया वहिरम्यन्तराश्रिताः ।
सुप्तान् मत्तान् प्रमत्ताँश्च मुष्णन्त्याक्रम्य चैव ते ॥५६॥
देशग्रामगृहघ्नाश्च पथिघ्ना ग्रन्थिमोचकाः ।
इत्येवमादयो ज्ञेयाः अप्रकाशास्तु तस्कराः ॥५७॥

बाहिर मान्छे राखी आफू भित्र छिरेर वा आफू बाहिर बसी भित्र मान्छे छिराएर चोर्ने, द्रव्यको मालिक नहुँदा वा उ सुतेको, नसामा मात्तिएको, सुस्त भएको मौका पारी वा उसका आँखा छलेर चोर्ने, लुकेर देश-गाउँ र घर नाश फोर्ने वा आगो लगाउने, रहजनी, यज्ञ नाश गर्ने र कतै लगाई सीलबन्दी, गाँठो आदि फुकाउने आदि सबैलाई गोप्य तस्कर भनिन्छ ।



## जासुसको परिचालन

तान् विदित्वा सुनिपुणैश्चोरैस्तत्कर्मकारिभिः ।
अनुसृत्य ग्रहीतव्या गूढैः प्रणिहितैर्नरैः ॥५८॥

यी सबै कुरा जानी चलाखीपूर्ण तरिकाले चोर र उसका सहयोगीहरूलाई गोप्य तरिकाले जासुस लगाई पछ्याउँदै समाउनु पर्दछ ।

## चोरी बढी हुने ठाउँ र सुरक्षा व्यवस्था

सभाप्रपापूपशालावेशमद्यान्नविक्रयाः ।
चतुष्पथाश्चैत्यवृक्षाः समाजप्रेक्षणानि च ॥५९॥

शून्यागाराण्यरण्यानि देवतायतनानि च ।
चारैर्विचेयान्येतानि चोरग्रहणतत्परैः ॥६०॥

सभास्थल, पानी पिउने स्थान, पूवा आदि मिठाई पकाइने स्थान, वेश्यालय, भट्टी वा मदिरा पसल, किराना पसल, चौबाटो, भञ्ज्याङ्ग वा चौतारो, तमाशा वा जादू आदि देखाइँदै गरेको भीड, सुनसान घरहरू, जङ्गल र देवताका मठमन्दिरमा चोरहरूको बिगिबिगी हुने हुनाले गुप्तचरहरू खटाउनू ।

## चोर समात्ने कार्य

तथैवान्ये प्रणिहिताः श्रद्धेयाश्चित्रवादिनः ।
चोरा ह्युत्साहयेयुस्तांस्तस्करा पूर्वतस्कराः ॥६१॥



समातिएका शङ्कास्पद चोरहरूलाई जम्मा पारी त्यो समूहमा जासुस एवं पहिलेका चोरलाई समेत घुसाएर चोर्न उकास्नू र चोर लाई समाउनू ।

अन्नपानमहादानैः समाजोत्सवदर्शनैः ।
तथा चौर्यापदेशैश्च कुर्युस्तेषां प्रसर्पणम् ॥६२॥

अथवा चोरलाई फसाउने किसिमले कुनै भोज, दान, उत्सव आदि आयोजना गरी शङ्कास्पद चोरलाई समेतलाई बोलाई समात्नू ।

ये तत्र नोपसर्पन्ति सृताः प्रणिहिता अपि ।
तेऽभिसृत्य ग्रहीतव्याः सपुत्रपशुबान्धवाः ॥६३॥

बोलाइएको जो शङ्कास्पद चोर हो उ समातिने डरले त्यहाँ नजिक नै पर्दैन, उसलाई परिवार, आफन्त र पशु आदि सहित समाउनू ।

अचोरा अपि दृश्यन्ते चोरैः सह समागताः ।
यादृच्छिकान् नैव तु तान् राजा दण्डेन शाशयेत् ॥६४॥

सज्जन पनि चोरसँगै बसिरहेका हुन सक्दछन् । बिचार गरेर मात्र राजाले कदम चाल्नू पर्दछ ।

## चोरलाई सजायँ

यांस्तत्र चोरान् गृह्णीयात् तानाताड्य निबध्य च ।
आघुष्य च सर्वत्र वध्याश्चित्रवधेन ते ॥६५॥



(राजाले) समातिएको चोरलाई पिटेर, बाँधेर र गधामा राखेर सबैतिर सबैले देख्नेगरी घुमाउनू ।

लोप्त्रादिरहिताश्चोरा राज्ञावध्या ह्यनागमम् ।
सहोढान् सोपकरणाँश्चोरान् क्षिप्रं विवासयेत् ॥६६॥

चोरिएको सामान सहित नभएको चोरलाई नमार्नू । सामान सहित समातिएका चोरलाई तुरुन्त देश निकाला गर्नू ।

## तोडफोड, अराजकता आदिको दण्ड

**स्वदेशघातिनो ये स्युस्तथा मार्गोपरोधिनः ।**
**तेषां सर्वस्वमादाय भूयो निन्दां प्रवर्तयेत् ॥६७॥**

देशमा तोडफोड गर्ने, अराजकता फैलाउने र बाटोमा बाधा पुऱ्याउनेलाई सर्वस्व हरण गरी सार्वजनिकरूपमा अपमानित गर्नू ।

## चोरेको सामान साथमा नराख्ने चोर

**अहोढान्विमृशेच्चौरान् गृहीतान् यदि शङ्कया ।**
**भयोपधानिश्चिन्ताभिर्ब्रूयुस्तथा यथा कृतम् ॥६८॥**



चोरिएको सामान साथमा नराख्ने चलाख चोरलाई अन्दाजमा समातेर डर देखाई पिटेर कायल पार्नु पर्दछ ।

## चोरसँग गरिने सोधपुछ

**देशं कालन्तथा जातिन्नाम रूपं प्रतिश्रयम् ।**
**कृत्यं कर्म सहायाँश्च प्रष्टव्याः स्युर्निगृह्यते ॥६९॥**

देश (चोरी हुँदा तँ कहाँ थिइस् ?), काल (चोरी भएको ठाउँबाट तेरो घर कति पर छ ?), जाति (तेरो जात के हो ?), नाम (तेरो नाम के हो ? अरु नाम पनि छन् कि ?),आश्रय (कस्का आश्रयमा बस्छस् ?), कर्म सहाय (सहयोगी पनि छन् ? कहाँ

छन् ?) आदि प्रश्न सोद्धै निगरानीमा राखी चोरका मुखबाट सत्य कुराको जानकारी लिनु पर्दछ र समाउनु पर्दछ ।

## चोरका लक्षण

वर्णस्वराकारभेदात् ससन्दिग्धनिवेदनात् ।
अदेशकालदृष्टत्वाद्वासस्याप्यविशोधनात् ॥७०॥
असद्व्ययात् पूर्वचौर्यादसत्संसर्गकारणत् ।
लेशैरप्यवगन्तव्या न होढेनैव केवलम् ॥७१॥

वर्ण (अनुहारको रङ बदलिएको), स्वर बदलिएको, आकार (घोसेमुण्टो लगाएको आदि)ले, मानिसका अगिल्तिर बोल्न नसकेको वा लरबाराएर बोलेको वा बोली अडकिएको) , अदेश र अकालमा (सुनसान स्थान, खण्डहर, जंगल आदिमा कुसमयमा) देखिएको, लुगा वा घर (घटनास्थल) असामान्य किसिमले सफा गरेको, जथाभावी वा कुलतमा खर्च गरेको, पुराना नामी चोरको सङ्गत गर्ने गरेको आदि लक्षणका आधारमा पनि चोरको शङ्का गर्न सकिन्छ उसँग चोरिएका सामान नै हुनुपर्दछ भन्ने छैन ।



## डाँका र शपथ

दस्युवृत्ते यदि नरे शङ्का स्यात्तस्करो न वा ।
यदि स्पृशेत लेशेन कार्यः स्याच्छपथं नरः ॥७२॥

डाँका वा तस्करका बारेमा हो वा होइन शङ्का हुन्छ, उसँग रहेका वस्तु चोरिएका वस्तुसँग मिल्दैन, कम प्रमाण मिल्दछ भने त उसलाई किरिया खुवाएर त्यसको

निर्णय गर्नुपर्दछ ।

## चोरका मतियार र दण्ड

चोराणां भक्तादा ये स्युस्तथाप्युदकदायकाः ।
आवासदा देशिकदास्तर्थवान्तरदायकाः ॥७३॥
क्रेतारश्चैव भाण्डानां प्रतिग्राहिण एव च ।
समदण्डाः स्मृताः सर्वे ये च प्रच्छादयन्ति तान् ॥७४॥

चोरलाई अन्न वा पानी वा बास दिने, उसका गाऊँले वा उसका विषयमा उत्तर दिने, चोरिएका भाँडा वा सामान किन्ने वा दान लिने तथा चोरीका विषयमा कुरा लुकाउने-यी सबै चोरसरह दण्डनीय हुन्छन् ।



राष्ट्रेषु राष्ट्राधिकृताः सामन्ताश्चैव चोदिताः ।
अभ्याघातेषु विज्ञेया यथा चौरास्तथैव तेः ॥७५॥

कुनै राज्यमा राज्यबाट नियुक्त अधिकारी तथा त्यस स्थलका गण्यमान्य व्यक्ति भएर पनि चोर समाउन उदासीन हुन्छन् भने ती चोरसमान मानिन्छन् ।

## चोर समाउने कार्य

गोचरे यस्य मुषितं तेन चोरः प्रयत्नतः ।
गृह्य दाप्योऽन्यथा मोषं पदं यदि न निर्गतम् ॥७६॥

गौचरनमा कसैको चोरी भए नाकाबन्दी गरी चोर खोज्नू । समाउन खोज्दा चोर

भाग्न खोज्दैन र सामान पनि फिर्ता दिन्छ भने माफी मगाई पिटपाट पारेर उसलाई छोडी दिनु पर्दछ ।

निर्गते तु यदा यस्मिन्नष्टेऽन्यत्र निपातिते ।
सामन्तान्मार्गपालाँश्च दिक्पालाँश्चैव दापयेत् ॥७७॥

यदि चोर गौचरन भन्दा बाहिर गइसकेको भए नजिकैका जमिन्दार, मार्गरक्षक तथा चारै दिशाका रक्षकलाई भनी चोर समाउन लगाउनू । तिनले चोर समात्न नसके तिनैबाट चोरिएको सामानको रकम असुल्नू ।

गृहे तु मुषिते राजा दापयेद् दण्डवासिकान् ।
आरक्षिकान् बाहिकाँश्च यदि चौरो न लभ्यते ॥७८॥



घरमा चोरी भएर चोर समाउन नसकेको अवस्थामा चोर समाउन नियुक्त, चौकीदार, सीमा रक्षक आदि अधिकारीबाट चोरिएको द्रव्य असुली चोरिएकालाई दिनु पर्दछ ।

## चोरी र शपथ

यदि वा दाप्यमानानां तस्मिन् मोषे ससंशये ।
मुषितः शपथं कार्यो मोषं वैशोध्यकारणात् ॥७९॥

किटानीसाथ जाहेरी भएको चोरीको मुद्दामा जाहेरीमै शङ्का लागे चोरी हुनेलाई सही सावित गर्न पहिला किरिया खुवाउनु पर्दछ । त्यसपछि मात्र अभियुक्तलाई किरिया खुवाउनू ।

## आरोपित चोरले आफू निर्दोष भए प्रमाणित गर्नुपर्ने

**अचोरे दापिते मोषे चोरान्वेषणकारणात् ।**
**उपलब्धे लभरँस्ते द्विगुणं तत्र दापितताात्॥८०॥**

चोरको आरोपमा समातिएको व्यक्तिले आफू निर्दोष भएको कुरा प्रमाणित गर्नुपर्दछ । उ निर्दोष प्रमाणित भई वास्तविक चोर समातिए, उसलाई चोरिएको रकमको दोबर रकम दिनु पर्दछ ।

## चोरिएका सामान

**चोरैर्हृतं प्रयत्नेन सरूपं प्रतिपादयेत् ।**

**तदभावे तु मूल्यं स्याद्दण्डं दाप्यश्च तत्समम्॥८१॥**

पक्रेपछि चोरिएको कुरा जस्ताको तस्तै स्थापित गर्नू । चोर समाएर सामान नभेटिए मोल र महत्व हेरी दण्डको रुपमा चोरबाट सामानको मूल्य असुल्नू ।

## चोरिएको सामान अनुसारको दण्ड

**काष्ठकाण्डतृणादीनां मृन्मयानान्तथैव च ।**
**शाकाहरितमूलानां हरणे फलपुष्पयोः॥८२॥**
**गोरसेक्षुविकाराणान्तथा लवणतैलयोः ।**
**पक्वान्नानाङ्कृतान्नानां मद्यानामामिषस्य च॥८३॥**
**सर्वेषामल्पमूल्यानां मूल्यात् पञ्चगुणो दमः ।**

तुलाधारिममेयानाङ्गणिमानाञ्च सर्वशः ॥८४॥
एभ्यस्तूत्कृष्टमूल्यानां मूल्याद्दशगुणो दमः ।
धान्यं दशभ्यः कुम्भेभ्यो हरतोऽभ्यधिकं वधः ॥८५॥

काठ, लाठो, घाँसपात, माटाका भाँडा, सागपात, घाँस, कन्दमूल, फलफूल, फूल, गोरस, ऊखु, सखर, नुन, तेल, पकाइएको अन्न, भुटिएका सातु आदि अन्न, मदिरा, मासु, आदिजस्ता सबैखाले कम मूल्यका वस्तु चोरिएकोमा चोरलाई चोरिएको वस्तुको मूल्यको पाँच गुना जरिवाना हुन्छ । तराजुमा जोखिने कपास आदि, नाप्न नसकिने (अनाज आदि) र गन्न सकिने (हर्रो, बर्रो आदि), जस्ता सबै खालका वस्तु चोरी हुँदा ती मध्येको उत्कृष्ट पदार्थको मूल्यको दश गुना जरिवाना तिराउनू । दश कुम्भ वा त्यसभन्दा बढी अनाज चोरे मृत्युदण्ड दिनू ।

घृते त्वेकादशगुणं दण्डं दाप्योऽब्रवीन्मनुः ।

हिरण्यरजतादीनामुत्तमानाञ्च वाससाम् ॥८६॥
रत्नानाञ्चैव मुख्यानां शतादभ्यधिके वधः ।
पुरुषं हरतो वासो दण्डस्तूत्तमसाहसः ॥८७॥

घिउ चोरलाई एघार गुना दण्ड तिराउनु पर्दछ भनी मनुले बताएका छन् । सुन, चाँदी आदि, रेशम आदि उत्तम वस्त्र तथा मुख्यमुख्य रत्न सयभन्दा बढी चोरे मृत्युदण्ड दिनू । पुरुष र वासस्थान चोर्नेलाई उत्तम साहसको दण्ड दिनू ।

## स्त्री अपहरणको दण्ड तथा पूर्व साहस दण्ड

सर्वस्वं स्त्रीन्तु कन्यान्तु हरतो वध एव च ।
चतुर्विंशात्परः पूर्वः परः षण्णवतिर्भवेत् ॥८८॥

स्त्रीलाई हरण गरे सर्वस्वहरण गर्नू । कन्या हरण गर्नेलाई मृत्युदण्ड दिनु । पूर्व साहस दण्ड चौबीस वर्षदेखि छयान्नब्बे वर्षका बीचकालाई हो भनी जान्नू ।

**मध्यम साहस र उत्तम साहस दण्ड**

**शतानि पञ्च तु वरो मध्यमो द्विशतावरः ।**
**सहस्रं तूत्तमो ज्ञेयः परः पञ्चशतावरः ॥८९॥**
**त्रिविध साहसेप्येवं दण्ड उक्तः स्वयम्भुवा ।**

दुई सयदेखि पाँचसयसम्म मध्यम साहस हुन्छ । पाँच सयदेखि हजारसम्म उत्तम साहस हुन्छ । यसरी साहस दण्ड तीन किसिमको हुन्छ भनी स्वायम्भुवले बताएका छन् ।



**गाँठो फुकाएको दण्ड**

**प्रथमे ग्रन्थिभेदानामङ्गुल्यङ्गुष्ठयोर्वधः ॥९०॥**
**द्वितीये चैव यच्छेषं दण्डः पूर्वश्च साहसः ।**

पहिलोचोटी गाँठो फुकाए औंला सहित बुढी औंला काट्नू । दोश्रो पटक फुकाए पूर्व साहस दण्ड हुन्छ ।

**गाई चोरेको दण्ड**

**गोषु ब्राह्मणसंस्थासु स्थूरायाश्छेदनं भवेत् ॥९१॥**

ब्राह्मण स्वामी भएका गाई चोरे कुर्कुच्चा चिर्नू ।

## दासी हरणको दण्ड

**दासीन्तु हरतो नित्यमर्धपादविकर्तनम् ।**

पटक पटक दासी हरण गर्नेको आधा पैँताला चिर्नू ।

## चोर्न प्रयोग हुने अङ्ग अनुसारको दण्ड

**येन येन यथाङ्गेन स्तेनो नृषु विचेष्टते ॥**
**छेत्तव्यं तत्तदेवास्य तन्मनोरनुशासनम् ॥९२॥**



जुनजुन अङ्गले चोर्ने काम हुन्छ चोरका त्यही त्यही अङ्ग काट्नु भनी मनुले नियम बताएका छन् ।

## ठूलो चोरलाई ठूलै दण्ड

**गरीयसि गरीयांसमगरीयसि वा पुनः ।**
**स्तेने निपातयेद्दण्डं न यथा प्रथमे तथा ॥९३॥**

ठूलो चोरमाथि दण्ड ठूलै हुन्छ । तथा अन्य चोर तदनुरुप सरदार नहुँदा पनि उसमाथि दण्डको विधान गर्नु पर्दछ । यो दण्ड विधान पहिलो पटक चोर्नेलाई लागु हुँदैन ।

## दण्ड दिने शरीरका दश स्थान

**दश स्थानानि दण्डप्य मनुः स्वायम्भूवोऽब्रवीत् ।**
**त्रिषु वर्णेषु तानि स्युरक्षातो ब्राह्मणो व्रजेत् ॥९४॥**

तीन वर्णमाथि मनुले दण्ड दिने दश ठाऊँ बताएका छन् तर ब्राह्मण सधैं अक्षत (अदण्डनीय) रहन्छ ।

**उपस्थमुदरं जिह्वाः हस्तै पादौ च पञ्चमम् ।**
**चक्षुर्नासा च कर्णौ च स्तनौ देहस्तथैव च ॥९५॥**

जननेन्द्रिय, पेट, जिब्रो, दुई हात, दुई गोडा समेत पाँच तथा आँखा, नाक, दुई कान, दुई स्तन तथा शरीर गरी दश दण्ड दिने स्थान हुन् ।



## दण्ड दिँदा ध्यान दिनुपर्ने कुरा

**अपराधं परिज्ञाय देशकालौ च तत्त्वतः ।**
**सारानुबन्धावालोच्य दण्डयं दण्डयेषु पातयेत् ॥९६॥**

देश, काल र अपराधलाई समिक्षापूर्वक विचार गरी जीवनधारणका उपायलाई लक्षित गरी यि दण्डका विधान गर्नु पर्दछ ।

## अपराधको दण्ड दिँदा सम्बन्धको प्रभाव पर्न हुँदैन

**न मित्रकारणाद्राज्ञो विपुलाद्वा धनागमात् ।**

उत्स्रष्टव्याः साहसिकास्तस्करा लोकवञ्चकाः ॥९७॥

मित्रताको कारणले वा धेरै धनको चाहना राखी राजाले चोर, डाँका र संसारलाई ठग्दै हिँड्नेलाई छोड्नु हुँदैन ।

यावानबध्यस्य वधे तावान् बध्यस्य मोक्षणे ।
भवत्यधर्मो नृपतेर्धर्मस्तु विनियच्छतः ॥९८॥

मार्न नहुनेलाई मारेर वा मार्नु पर्नेलाई छोडेर जति अधर्म राजालाई हुन्छ त्यती नै धर्म विचारपूर्वक मार्नु पर्नेलाई मार्दा र मार्न नहुनेलाई मोक्ष गर्दा हुन्छ ।

**ब्राह्मण र दण्ड**



न जातु ब्राह्मणं हन्यात् सर्वपापेष्वपि स्थितम् ।
निर्वासं कारयेत् कामं समग्रधनमक्षतम् ॥९९॥

सबै खाले पाप गरे पनि ब्राह्मणको हत्या गर्नु हुँदैन । उसको सबै धन सहित उसलाई देश निकाला गर्न सकिन्छ ।

सर्वं वापि हरेद्राजा चतुर्थं वावशेषयेत् ।
विप्रेभ्योऽनुस्मरन्धर्मं प्राजापत्यमिति स्थितिः ॥१००॥

राजाले प्रजापतिले ब्राह्मणका लागि बनाएका धर्मलाई सम्झी पापी ब्राह्मणको बलपूर्वक सर्वस्वहरण गर्न वा उसलाई चार भागको एक भाग दिएर बाँकी सबै लिन पनि सक्दछ ।

ब्राह्मणस्यापराधेषु चतुर्ष्वङ्को विधीयते ।
गुरुतल्पे सुरापाने स्तेयं ब्राह्मणहिंसने ॥१०१॥

गुरुपत्नीहरण, सुरापान, चोरी तथा ब्रह्महत्यामा पनि अरु सजायँ नदिई ब्राह्मणका शरीरमा चार प्रकारका चिह्न लगाउनू (डाम्नू) ।

गुरुतल्पे भगः कार्यः सुरापाने सुराध्वजः ।
स्तेये तु श्वपदङ्कत्वा शिखिपित्तेन पूरयेत् ॥१०२॥

गुरुपत्नीहरणमा योनीको, सुरापानमा लिङ्गको र चोरीमा कुकुरको पैंतालाको चिह्न बनाई त्यसले बन्ने खाल्टोमा वा घाउमा मयूरको पित्त भर्नू ।



विशिराः पुरुषः कार्यो ललाटे ब्रह्मघातिनः ।
असम्भाष्यश्च कर्त्तव्यस्तन्मनोरनुशासनम् ॥१०३॥

ब्रह्महत्या गर्नेको निधारमा मुर्कट्टाको चिह्न बनाउनू र उसँग कुराकानी नगर्नू-यस्तो मनुको नियम छ ।

## अपराध कबुल

राजा स्तेनेन गन्तव्यो मुक्तकेशेन धीमता ।
आचक्षाणेन तत्स्तेयमेवंकर्मास्मि शाधि माम् ॥१०४॥

चोरे पछि डाहले छटपटाउँदै कपाल खोलेर आफ्नो चोरीको वृत्तान्तलाई दौडँदै राजाकहाँ गएर 'मैले यस्तो कर्म गरेको छु, मलाई दण्ड दिनुहोस्' भन्नू ।

**अनेना भवति स्तेनः स्वकर्मप्रतिवेदनात् ।**
**राजा तत्स्पृशेदेन उत्सृजन्तं सकिल्विषम् ॥१०५॥**

आफूले गरेको चोरी सकारे पछि उ निष्पाप हुन्छ अनि राजा उसलाई छुन्छन् र निष्पाप भएको त्यसलाई राजा छोड्दछन् ।

## दण्डको महत्व

**राजाभिर्धृतदण्डास्तु कृत्वा पापानि मानवाः ।**
**निर्मलाः स्वर्गमायान्ति सन्तः सुकृतिनो यथा ॥१०६॥**



पापाचारी मानवहरु राजाज्ञाबाट दण्डित भएर शुद्ध हुन्छन् र शुद्ध सज्जन सरह भई स्वर्गको वास गर्दछन् ।

**शासनाद्वापि मोक्षाद् वा स्तेनो मुच्यति किल्विषात् ।**
**अशासत् तमसौ राजा स्तेनस्याप्नोति किल्विषम् ॥१०७॥**

राजाको शासनले वा मोचनले चोर अपराधबाट मुक्त हुन्छ । चोरलाई दण्डित नगर्दा चोरको पाप राजा तिर सर्दछ ।

## अन्तिम दण्डदाता यमराज

गुरुरात्मवतां शास्ता शास्ता राजा दुरात्मनाम् ।
अतः प्रच्छन्नपापानां शास्ता वैवस्वतो यमः ॥१०८॥

आत्मवान् विवेकी मानिसका शासक गुरुजन हुन्, दुरात्मा अपराधिका शासक राजा हुन् । किन्तु साधु खालका र लुकाएर पाप गर्नेलाई विवस्वान्का पुत्र यमले नै माथि वा माथिबाट दण्ड दिएर शासन गर्दछन् ।

## वर्ण अनुसार दण्डको मात्रा

अष्टापाद्यन्तु शूद्रस्य स्तेये भवति किल्विषम् ।
द्व्यष्टापाद्यन्तु वैश्यस्य द्वात्रिंशत् क्षत्रियस्य तु ॥१०९॥

ब्राह्मणस्य चतुष्षष्टिं मनुः स्वायम्भुवोऽब्रवीत् ॥११०॥

चोरीमा शुद्रलाई आठ गुना, वैश्यलाई सोह्र गुना तथा क्षत्रियलाई बत्तीस गुना दण्ड परिमाण हुन्छ । ब्राह्मणलाई चौसठ्ठी गुना दण्ड हुन्छ भनी मनुले बताएका छन् ।

## दण्डका प्रकार

शारीरश्चार्थदण्डश्च दण्डस्तु द्विविधः स्मृतः ।
शारीरो द्विविधः प्रोक्तो ह्यर्थदण्डस्त्वनेकधा ॥१११॥

शारीरिक तथा आर्थिक गरी दण्ड दुई प्रकारका हुन्छन् । त्यसमा पनि शारीरिक दण्ड दुई र आर्थिक दण्ड अनेक प्रकारका हुन्छन् ।

काकण्यादिस्त्वर्थदण्डः सर्वस्वान्तस्तथैव च ।
शारीरस्त्ववरोधादिर्जीवितान्तस्तथा स्मृतः ॥११२॥

काकिणी, सर्वस्व हरण आदि आर्थिक दण्ड प्रसिद्ध छन् । अवरोध र मृत्युदण्ड शारीरिक दण्ड हुन् ।

काकिण्यादिस्तु यो दण्डः स तु माषपरः स्मृतः ।
माषापरार्धो यः प्रोक्तः कार्षापणपरस्तु सः ॥११३॥

काकिणीबाट शुरु हुने दण्डको चरम मात्रा माष हो । माषबाट जुन दण्ड शुरु हुन्छ त्यो कार्षापणसम्मको हुन्छ ।



कार्षापणापरार्धस्तु चतुष्कार्षापणोत्तरः ।
द्व्यवरोऽष्टापरश्चान्यस्त्र्यवरो द्वादशोत्तरः ॥११४॥

कार्षापणभन्दा माथिको दण्ड चार कार्षापण हो । जुन स्थानमा दुई कार्षापण दण्ड सामान्य जस्तो हुन्छ त्यहाँ आठ कार्षापण अधिकतम दण्ड हुन्छ । जुन स्थानमा तीन कार्षापण दण्ड सामान्य हुन्छ त्यस स्थानमा बाह्र कार्षापण अधिकतम दण्ड हुन्छ ।

कार्षापणाद्याः ये प्रोक्ताः सर्वे ते स्युश्चतुर्गुणाः ।
एवमन्येऽपि बोद्धव्याः प्राक् च ते पूर्वसाहसात् ॥११५॥

कार्षापण आदि जे दण्ड बताइयो त्यो सबै अकितम चार गुना हुन्छ । अरु कुरा पहिलेका पूर्वसाहसका कुराबाट थाहा पाउनू ।

कार्षापणो दक्षिणस्यां दिशि रौप्यः प्रवर्तते ।
पणैर्निवद्धः पूर्वस्यां षोडशैव पणाः स तु ॥११६॥

दक्षिण देशमा कार्षापण रजतका रुपमा मानिन्छ । पूर्व देशमा सोह्र पणको एक कार्षापण हुन्छ ।

पञ्चनद्याः प्रदेशे तु संज्ञा या व्यावहारिकी ।
कार्षापणप्रमाणन्तु निबद्धमिह वै तया ॥११७॥

पञ्चनद (पञ्जाब) प्रदेशमा लोक व्यवहारमा प्रसिद्ध संज्ञालाई लिएर कार्षापणको नाप यहाँ लिपिवद्ध गरिएन ।



कार्षापणोऽब्धिका ज्ञेयश्चतस्रस्तास्तु धानकः ।
ते द्वादश सुवर्णं स्यात् दीनारश्चित्रकः स्मृतः ॥११८॥

कार्षापण अन्तिम नापो हो । चार कार्षापणको एक धानक हुन्छ । बाह्र धानकको एक सुवर्ण हुन्छ । त्यसैलाई दीनार भनिन्छ ।

वार्ता त्रयीमप्यथ दण्डनीतिं राजानुवर्त्रेत सदाप्रमत्तः ।
हन्यादुपायैर्निपुणैर्गृहित्वा पुरे च राष्ट्रे च विघुय चोरान् ॥११९॥

राजाले उत्ताउलो नभई कृषि, पशुपालन र ब्यापारलाई ऋक्, साम र यजुर्वेद अनुसार दण्डनीति अपनाई अपराधीहरुलाई अनेक उपायले समाती नेल कस्नू र फस्टाउने बनाउनू । विभिन्न उपाय र विज्ञको सहयोगमा गाउँशहर र देशलाई चोरको डरबाट मुक्त बनाउनू ।

इति प्रकीर्णमष्टादशं विवादपदम्

✷

नारदीयमनुसंहिता, विवादखण्ड अन्तर्गत विविध विषयका बारेमा वर्णन गरिएको प्रकीर्ण उप-खण्डको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिका श्लोकको संख्या: ७१२+११९=८३१

✷



## ॥ अथ दिव्यप्रकरणम् ॥

### दिव्य शपथ वा परीक्षा अपनाउन योग्य आरोप

**संशयस्थास्तु ये केचिन्महापातकिनश्च ये ।**
**अभिशस्ताः परैश्चापि ते शोध्याः संशयैरिह ॥१॥**

जो द्विविधामा परेका छन्, जो महापापीको आरोप खेपिरहेका छन् वा जो अरु खालका आरोप लागेका छन् तिनले पनि द्विविधा हटाएर शुद्ध पार्न यी उपाय अपनाउनु पर्दछ ।

## दिव्यपरीक्षाका उपाय

धटोऽग्निरुदकञ्चैव विषङ्कोशश्च पञ्चमः ।
पञ्चैतान्याह दिव्यानि दूषितानि विशोधने ॥२॥

आरोपितलाई चोख्याउने निर्णय गर्न धट (तराजु), अग्नि, उदक(जल), विष र कोश गरी पाँच दिव्य विधि हुन्छन् ।

संदिग्धेऽर्थेऽभिशस्तानां परीक्षार्थं महात्मना ।
नारदेन पुरा प्रोक्ताः सत्यानृतविभाजिकाः ॥३॥

शङ्कास्पद आरोपीको परीक्षाका लागि महात्मा नारदले पहिले नै सत्यअसत्य छुटयाउने विधि बताएका छन् ।



## तुला-परीक्षा

कारयेत चतुर्हस्तां समां लक्षणलक्षिताम् ।
तुलां काष्ठमयीं राजा शिक्यप्रान्तावलम्बिनीम् ॥४॥

चार हातको, दुवै पल्ला बराबर भएको, सबै लक्षणले युक्त र बलियोसँग तलमाथि बाँधिएको यस्तो काठको तराजु राजाले बनाउन लगाउनू ।

दक्षिणोत्तरसंस्थानावुभावेकत्र सङ्गतौ ।
स्तम्भौ कृत्वा समे देशे तयोः संस्थापयेत् तुलाम् ॥५॥

पल्ला एक आपसमा जोडिएको त्यो तराजुलाई सम्म ठाउँमा उत्तरदक्षिण फर्काएर गाडिएको एउटा खाँबो (थाम) मा जडान गर्नू ।

**आयसेन तु पाशेन मध्ये सङ्गृह्य धर्मवित् ।**
**योजयेत सुसंयत्तां तुलां प्रागपरायताम् ॥६॥**

फलामको सिक्रीले तराजुको बीचमा बाँधी पूर्वपश्चिम पर्नेगरी उक्त काठको बीचमा जोड्नू ।

**वादिनोऽनुमतेनैनां कारयेन्नान्यथा नृपः ।**
**तोलयित्वान्तरं पूर्वं चिह्नङ्कृत्वा धटस्य तु ॥७॥**

प्रतिवादीको सहमतीमा मात्र राजाले तुला-शपथ लिने काम गर्नू । जोखेपछि चिनु लगाएर (नाप लिएर) उसलाई तराजुबाट ओराल्नू ।



**धर्मपर्यायवचनैर्धट इत्यभिधीयसे ।**
**त्वं वेत्सि सर्वभूतानां पापानि सुकृतानि च ॥८॥**

"धर्मका पर्यावाची शब्दले तिमी तराजुलाई यहाँ प्रयोग गर्न लागिएको छ । सबै प्राणीको पाप र पुण्यलाई तिमी जान्दछौ...,।

**त्वमेव देव ! जानीषे न विदुर्यानि मानवाः ।**
**व्यवहाराभिशस्तोऽमानुषः शुद्धिमिच्छति ॥१०॥**

हे देव ! मानिसले थाहा नपाउने कुरा तिमी नै जान्दछौ । म मानवलाई मुद्दामा दोषीको आरोप लगाइएको छ, आफू निर्दोष भएको प्रमाणित गर्न चाहन्छु ।

**तदेनं संशयारूढं धर्मतस्त्रातुमर्हति ।**

त्यसैले यो द्विविधा (शङ्का) बाट म धर्म अनुसार मुक्त हुन चाहन्छु" । (तराजुको यसरी प्रतिवादीले प्रार्थना गरेपछि उसलाई पुनः जोखिन्छ । उसको तौल पहिलेकोभन्दा बढे उ चोखिन्छ घटे उ दोषी हुन्छ) ।

**अग्नि शपथ**

**अत परं प्रवक्ष्यामि लोहस्य विधिमुत्तमम् ।**
**द्वात्रिंशदङ्गुलाख्यन्तु मण्डलान्मण्डलान्तरम् ॥११॥**



अब यसपछि म फलाम (अग्नि) को शपथ लिने विधि बताउँदछु । यसमा एउटा घेराबाट अर्को घेराको फरक बत्तीस अमल हुन्छ ।

**मण्डलस्य प्रमाणन्तु कुर्यात् तद्धटसम्मितम् ।**
**अष्टाभिर्मण्डलैरेवमङ्गुलानां शतद्वयम् ॥१२॥**
**चतुर्विंशत्समाख्यातं भूमेस्तु परिकल्पनम् ।**
**मण्डलैस्तु ततः क्लृप्तैः सोपवासः शुचिर्नरः ॥१३॥**
**सवासा जलमाप्लुत्य त्वार्द्रकेशः समाहितः ।**
**सप्ताश्वत्थस्य पत्राणि तथा सौत्राणि तन्तवः ॥१४॥**

घेरा तराजुको पल्ला जत्रै बनाउनू । दुई सय चौबीस अमल भित्रको जमिनमा यस्ता आठ वटा घेरा बनाउनू । यस्ता घेरा बनाएपछि उपवास बसी शुद्ध भएको प्रतिवादीलाई कपडै सहित पानीमा डुब्न लगाई चिसै कपाल लिई संयमित हुन लगाउँदै सातवटा पीपलका पात उसका दुवै हत्केलामा राखी धागोले बाँध्नू ।

**हुताशतप्तं लोहस्य पञ्चाशत्पलिकं समम् ।**
**हस्ताभ्यां पिण्डमादाय व्रजेत् सप्त शनैः शनैः ॥१५॥**

त्यसपछि आगोमा तताएर रातो बनाइएका पचास पल तौलका फलामका डल्ला उसका हातमा राखी दिनू र उसलाई विस्तारै विस्तारै अघि बनाइएका सातवटा घेरामा हिँड्न लगाउनू ।

**न मण्डलमतिक्रामेन्नाप्यर्वाक् स्थापयेत् पदम् ।**

**न च पातयेत् तामप्राप्तो यावद् भूः परिकल्पिता ॥१६॥**

घेरा भित्र नै पर्ने गरी गोडा राख्न लगाउनू, अन्तिम घेरामा नपुगेसम्म डल्ला खसाल्न नदिनू ।

**भयात् पातयते यस्तु दग्धो वा न विभाव्यते ।**
**पुनस्तं हारयेल्लोहं स्थितिरेवं दृढीकृता ॥१७॥**

डराएर वा पोलेर डल्ला खसाले पुनः उसलाई यो कार्य लगाउनू । यही नै यसका तोकिएका विधि हुन् ।

**तीर्त्वानेन विधानेन मण्डलानि कृतानि तु ।**

**न दग्धः सर्वथा यस्तु स विशुद्धो भवेन्नरः ॥१८॥**

यो विधिले उसले सबै घेरा पार गर्दा पनि उसका हात अलिकति पनि नपोले त्यो मानिस शुद्ध हुन्छ ।

**अनेन विधिना कार्यो हुताशसमयः सदा ।**
**त्वमेव सर्वभूतानामन्तश्चरसि नित्यशः ॥१९॥**
**प्रच्छन्नानि मनुष्याणां पापानि सुकृतानि च ।**
**त्वमेव देव ! जानीषे न विदुर्यानि मानवाः ॥२०॥**
**व्यवहाराभिशस्तोऽयं मानुषः शुद्धिमिच्छति ।**
**तदेनं संशयारूढं धर्मतस्त्रातुमर्हसि ॥२१॥**

यो अग्नि शपथमा विधिपूर्वक पहिले यसरी अग्निको प्रार्थना गर्नु पर्दछ । " हे अग्नि ! तिमी नै सबै प्राणीका शरीरभित्र नित्य बास गर्दछौ मानिसले गरिरहेका र मानिसले थाहा नपाउने सबै शुभ अशुभ कर्म तिमी थाहा पाउँदछौ । झगडामा आरोपित यो मानव आरोपबाट मुक्त हुन चाहन्छ । यस्तो आशङ्काबाट धर्म अनुसार उ तिमी मार्फत पार हुन चाहन्छ" ।



**जल शपथ**

**अतः परं प्रवक्ष्यामि पानीयविधिमुत्तमम् ।**
**नातिक्रूरेण धनुषा प्रेरयित्वा शरत्रयम् ॥२२॥**

अब यसपछि पानी शपथका बारेमा बताउँदछु । न धेरै बलियो न धेरै लुलो यस्तो धनुषले तीन वटा बाण हान्नू ।

**पानीये मज्जयेद्यस्तु शङ्कायां प्रतिवर्तते ।**
**मध्यमस्तु शरो यः स्यात् पुरुषेण बलीयसा ॥२३॥**

यस अवधिमा प्रतिवादीलाई पानी भित्र चुर्लुम्म डुब्न लगाउनू र अगि हानिएको बीचको बाण लिएर आउन एउटा बलियो र छिटो दगुर्ने मानिसलाई पठाउनू ।

**प्रत्यानीते तु तेनाथ तस्य शुद्धिर्भविष्यति ॥२४॥**

बाण लेराइञ्जेलसम्म उ पानी भित्रै डुबिरहन सके उ शुद्ध (निर्दोष) हुन्छ ।

**स्त्रियस्तु न बलात्कार्या न पुमाँसोऽति दुर्बलाः ।**
**भीरुत्वाद्योषितो मृत्युर्निरुत्साहतया कृशः ॥२५॥**



यो शपथ स्त्री र अति दुब्लो पुरुषलाई नखुवाउनू । डरले गर्दा स्त्रीको र उत्साह नहुनाले दुब्लो मानिसको मृत्यु हुन सक्दछ ।

**वारिमध्ये मनुषस्य अङ्गम्यदि न दृश्यते ।**
**अतोऽन्यथा न शुद्धः स्यादेकाङ्गमपि दर्शयन् ॥२६॥**

पानी भित्र यसरी डुबेको मानिसको तोकिएको समयसम्म एउटा अङ्ग पनि पानी बाहिर देखिनु हुन्न, देखिए उ शुद्ध हुँदैन ।

**स्थानादन्यत्र वा गच्छन् यस्मिन् पूर्वं निवेशितः ।**
**तोयमध्ये मनुषस्य गृहीत्वोरुं सुसंयतः ॥२७॥**

पानीमा उभिएको अर्को मानिसको तिघ्रा समाती पहिले जहाँ डुबेको हो अन्यत्र नगई उ त्यहीँ हुनुपर्दछ ।

(लग्नस्तु निश्चलस्तिष्ठेद्यावत् प्राप्तस्तु सायकः ।
प्राप्तन्तु सायकं दृष्ट्वा जलादुत्थाय प्राङ्मुखम् ॥
आनीतन्तु शरं दृष्ट्वा जलादुत्थाय प्राङ्मुखः ।
प्रणिपत्य नृपञ्चच्छेत् सर्वांश्चैव सभासदः ॥२८॥

बाण लिन गएको मानिस नआइपुग्दासम्म पानी भित्रै डुबेर बस्नू । उ आइपुगेपछि पानीबाट बाहिर निस्की पूर्व फर्केर बाण लेराएको देखेपछि पानीबाट उठी पूर्वफर्की राजा र न्यायाधीशलाई नमस्कार गर्न जानू ।



त्वमम्भः ! सर्वभूतानामन्तश्चरसि नित्यशः ।
प्रच्छन्नानि मनुष्याणां पापानि सुकृतानि च ॥२९॥
त्वमेव देव ! जानीषे न विदुर्यानि मानवाः ।
व्यवहाराभिशस्तोऽयं मानुषः शुद्धिमिच्छति ॥३०॥
तदेनं संशयारूढं धर्मतस्त्रातुमर्हति ॥३१॥

जलमा डुब्नुअघि “हे जल ! तिमी नै सबै प्राणीका शरीरभित्र नित्य बास गर्दछौ । मानिसले गरिरहेका र मानिसले थाहा नपाउने सबै शुभ अशुभ कर्म तिमी थाहा पाउँदछौ । झगडामा आरोपित यो मानव आरोपबाट मुक्त हुन चाहन्छ । यस्तो आशङ्काबाट धर्म अनुसार उ तिमी मार्फत पार हुन चाहन्छ” भनी जललाई प्रार्थना गर्नू ।

## विष शपथ

अतः परं प्रवक्ष्यामि विषस्य विधिमुत्तमम् ।
अपराह्णे न मध्याह्ने न सन्ध्यायान्तु धर्मवित् ॥३२॥
शरद्ग्रीष्वसन्तेषु वर्षासु च विवर्जयेत् ।
भग्नञ्च वारितञ्चैव धूपितं मिश्रितन्तथा ॥
कालकूटं मलञ्चैव विषं यत्नेन वर्जयेत् ॥३३॥

यसपछि विष-शपथका बारेमा बताउँदछु । बेलुकी पख, मध्याह्नमा, दुबै सन्ध्यामा तथा शरद-ग्रीष्म-वसन्त र वर्षा ऋतुमा यो शपथ नखुवाउनू । रूप बिग्रेको, पानी मिसाइएको, अरु कुनै द्रव्यको धुवाँ सुँघाइएको, अरु विष आदि कुरा मिसाइएको र कालकूट विष यो शपथमा प्रयोग नगर्नू ।



शार्ङ्गं हैमवतं शस्तं रूपवर्णरसान्वितम् ।
महादोषवते दद्यात् राजा तत्त्वबुभुत्सया ॥३४॥

रूप, रङ्ग र रसले युक्त हिमालयको शिखरमा पाइने “शार्ङ्ग” विष यो शपथमा प्रतिवादीलाई सत्य थाहा पाउन राजाले दिऊन् ।

न वृद्धातुरबालेषु नच स्वल्पापराधिषु ॥३५॥

बूढा, रोगी र बालकमाथि र सामान्य अपराधमा यसको प्रयोग नगर्नू ।

विषस्य पलषड्भागागो भागो विंशतिमस्तु यः ।
तदष्टभागशुद्धं तु शोध्ये दद्याद् घृताप्लुतम् ॥३६॥

छ पल विषको बीसौं भाग वा त्यसको आठौं भाग घिउमा मिसाएर प्रतिवादीलाई खान दिनू ।

यथोक्तेन विधानेन विद्वान् स्पृष्ट्वानुमोदितः ।
सोपवासस्तु खादेत देवब्राह्मणासन्निधौ ॥३७॥

बताइएको विधिले उपवास बसी नुहाएर शुद्ध भएको प्रतिवादीलाई देवता र ब्राह्मणका सामु तोकिएको व्यक्तिले विष देओस् ।

विषं वेगक्रमापेतं सुखेन यदि जीवति ।
विशुद्धमिति तं ज्ञात्वा राजा सत्कृत्य मोक्षयेत् ॥३८॥



विषले कुनै असर गरेन भने उ शुद्ध रहेछ भनी उसलाई सत्कार गर्दै राजाले उसलाई छाडी दिनू ।

**कोश शपथ**

अतः परं प्रवक्ष्यामि कोशस्य विधिमुत्तमम् ।
मध्याह्ने सोपवासस्य स्नातस्यार्द्राम्बरस्य च ॥३९॥

यसपछि कोश-शपथका बारेमा बताउँदछु । उपवास बसी नुहाएर चिसै लुगामा भएको प्रतिवादीलाई मध्याह्नमा कोश शपथ खुवाउनू ।

न शूद्रस्याव्यसनिनः कोशपानं विधीयते ।

यद्भक्तः सोऽभियुक्तः स्यात्तद्देवत्यन्तु प्राङ्मुखः ॥४०॥

शूद्र र कुलतमा फसेकालाई कोश शपथ नखुवाउनू । कुनै भक्त प्रतिवादी हुँदा उसलाई देवताका सामु पूर्व फर्काई,.. ।

प्रत्युच्चार्य ततोध्र्वास्य पातयेत् प्रसृतित्रयम् ।
द्विसप्ताहान्तरात् तस्य त्रिसप्ताहेन वा शुभः ॥४१॥

किरिया खुवाउन लगाई टाउकाबाट तीन पसर (जल) खसाउनू । दुईदेखि तीन हप्ताभित्र (उसलाई वा उसका परिवारलाई केही नभए) उ शुद्ध हुन्छ ।

प्रत्यात्मिकन्तु दृश्येत सैव तस्य विभावना ।
ऊर्ध्वं त्रिसप्तदिवसाद् वैकृतं सुमहद्यदि ॥

नाभियोज्यः स विदुषा कृतकालव्यतिक्रमात् ॥४२॥

तीन हप्ताभित्र उसको कुनै अशुभ भए उ दोषी हुन्छ । यसभन्दा पछि हुने अशुभलाई उसको दोषका कारण भएको मानिंदैन ।

महापराधे निर्दोषे कृतघ्ने क्लीबकुत्सिते ।
नास्तिकव्रात्यबालेषु कोशपानं विवर्जितम् ॥४३॥

ठुलो अपराध, निर्दोष, बैगुनी, नपुंसक, दुष्ट, नास्तिक, व्रात्य र बालकमाथि यो शपथ विधि प्रयोग नगर्नू ।

चराचरस्य जगतो जलेश ! प्राणधारणम् ।
मानुषोऽयं त्वया देव ! धर्मतः शुद्धिमिच्छति ॥४४॥
अद्भ्यश्चाग्निरभूद्यस्मादतस्तोये विशेषतः ।

**तस्मात् सत्येन भगवञ्जलेश ! त्रातुमर्हसि ॥४५॥**

कोश शपथ लिनु अघि "चल अचल सारा संसारका प्राणदाता हे जल देवता ! तिमीबाट यो मानिस धर्मतः शुद्धता चाहन्छ । जलमै अग्निको वास हुन्छ, त्यसैले सत्य कुरा थाहा पाउन मद्दत गर" भनी जललाई प्रार्थना गर्नू ।

**यथोक्तेन विधानेन पञ्च दिव्यानि धर्मवित् ।**
**ददद् राजाभिशस्तेभ्यः प्रेत्य चेह च नन्दति ॥४६॥**

यसरी दोषीलाई विधिपूर्वक पाँच प्रकारका दिव्य शपथ खुवाउने राजा मरेपछि पनि पूजिन्छ ।

(नोटः यहाँ उल्लेख भएका यी शपथ सम्बन्धी विवरण केही अस्पष्ट र अधुरा देखिन्छन् । नारद स्मृतिका पछिल्ला संस्करणमा केही स्पष्टता गरिएको पाइन्छ ।)



॥ इति दिव्यप्रकरणम् ॥

✷

नारदीयमनुसंहिता, दिव्य शपथका बारेमा वर्णन गरिएको दिव्यप्रकरण खण्डको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिका श्लोकको संख्या: ८३१+४६=८७७

✷

**॥ इति नारदीय मनुसंहिता ॥**

✷

बाग्मती अञ्चल, काभ्रेपलाञ्चोक जिल्ला, अनकोट गा.वि.स., वडा नं.३ मा जन्म भई सोही अञ्चल, काठमाडौं जिल्ला, गोकर्णेश्वर न.पा., वडा नं. ७, दक्षिणढोकामा बसोबास गर्ने मोहन प्रसाद सापकोटाद्वारा गरिएको नारदीयमनुसंहिताको नेपाली-भावानुवाद पूर्ण भयो

✷

**शुभं भूयात् !**
**सबैको कल्याण होस् !**